# ज्ञानकाजी मानन्धर




जन्म : सन् १९३८ नोभेम्बर १६
ठेगाना : वांख्यः टोल (नालादोबाटो) बनेपा–५, काभ्रे
फोन : ०११–६६११८४
शिक्षा : बी० ए०, बी० एड०, टोफल


**शैक्षिक क्रियाकलाप :**

(क) चैतन्य स्कुलका संस्थापक, (ख) चैतन्य माध्यमिक विद्यालय सञ्चालक समितिको स्थापनाकालदेखिका सचिव एवं पटक–पटक अध्यक्ष, (ग) काभ्रे क्याम्पसका संस्थापक सदस्य, (घ) चैतन्य क्याम्पसका संस्थापक सदस्य, सल्लाहकार तथा व्यवस्थापन समितिमा केही समयसम्म अध्यक्ष, (ङ) आजाद माध्यमिक विद्यालयका शिक्षक (वि० सं० २०१७–२०४५ सम्म), (च) प्रौढ शिक्षानिकेतन (हाइस्कुल) का संस्थापक सदस्य तथा ६ वर्षसम्म प्रधानाध्यापक, (६) जिल्ला शिक्षासमिति काभ्रेमा एक अवधिसम्म सदस्य, (ज) जिल्ला शिक्षक छनोट–समिति काभ्रेमा एक अवधिसम्म सदस्य, (झ) वि० सं० २०२९ सालमा नयाँ शिक्षा योजनाअन्तर्गत शारदा माध्यमिक विद्यालय फलाँटेमा का० मु० प्रधानाध्यापक ।

**सामाजिक क्रियाकलाप :**

(क) काभ्रे जेसिजका प्रथम अध्यक्ष, (ख) प्रतिभा सम्मान प्रबन्धगुठीमा स्थापनाकालदेखि कोषाध्यक्ष, (ग) बौद्ध बृद्धाश्रम बनेपामा एक अवधिसम्म सल्लाहकार, (घ) केन्द्रीय मानन्धर सङ्घमा एक अवधिसम्म सदस्य, (ङ) नेपाल भाषा आकादेमीका सदस्य

**निर्माण–सहयोग :**

क) चैतन्य रा० प्रा० स्कुल भवन–निर्माण–समितिका (वि० सं० २०१८–२०२२) सचिव, (ख) आजाद माध्यमिक विद्यालयपरिसरमा काभ्रे जेसिजका तर्फबाट क्यानेडियन सहयोग लिई निर्माण गरिएको बहुउद्देश्यीय भवनका प्रोजेक्ट डाइरेक्टर एवं निर्माण–समितिका अध्यक्ष, (ग) बनेपा महायान समाज गुम्बा–निर्माण–समितिका सचिव, (घ) बनेपाली मानन्धर समुदायको जापाली निर्माण–समितिका अध्यक्ष, (ङ) चण्डेश्वरी मन्दिर छानासुधार तथा पुनर्निर्माण–समितिका सदस्य ।

**प्रकाशित पुस्तकहरू :**

(१) Nepal- Legend and Drama, (२) The Legends of Nepal, (३) कुमारी, (४) खड्गजोगिनी, (५) नेपाल– आख्यान र नाटक, (६) कपिलवस्तुस भगवान्, (७) बनेपा–स्तवन, ८) अरनिकोया श्वेतचैत्य, (९) Myths and Legends of Nepal, (१०) बनेपा सातगाउँ, (११) नेपाली, नेपाली र अङ्ग्रेज़ी भाषाका विभिन्न पत्रपत्रिकाहरूमा फुटकर लेख–रचनाहरू प्रकाशित ।

**सम्पादन :**

(क) स्मारिका – आज़ाद माध्यमिक विद्यालय, बनेपा, २०३५, (ख) स्मारिका – बनेपा नगरपञ्चायत, बनेपा, २०४०, (ग) स्मारिका – केन्द्रीय मानन्धर सङ्घ, काठमाडौं, २०५७

**सम्मान :**

(क) जिल्ला शिक्षा समिति काभ्रेबाट नगद पुरस्कार, (ख) आजाद माध्यमिक विद्यालय, बनेपा, काभ्रेबाट दीर्घसेवापदक, (ग) नेपाल शिक्षक सङ्घ काभ्रेबाट कदरपत्र, (घ) चैतन्य माध्यमिक विद्यालय, बनेपा, काभ्रेबाट कदरपत्र, २०५७ (ङ) राजदास बादे श्रेष्ठ स्मृति प्रतिष्ठान, काभ्रेबाट सम्मानपत्र, २०५७ (च) बनेपा नगरपालिका, काभ्रेबाट कदरपत्र, २०५८ (छ) काभ्रे जेसिसबाट कदरपत्र, २०५९ (ज) प्रतिभा–सम्मान प्रबन्धगुठीबाट कदरपत्र र दीर्घसेवापदक, २०५९ (झ) स्मृति छात्रवृत्ति कोषबाट सम्मानपत्र, २०६१ (ञ) काभ्रे बहुमुखी क्याम्पस, बनेपा, काभ्रेबाट कदरपत्र, २०६२ (ट) केदारनाथ प्रधान स्मृति तथा प्रकाशन समिति, बनेपा, काभ्रेबाट सम्मानपत्र, २०६३ (ठ) केन्द्रीय मानन्धर सङ्घ, काठमाडौंबाट प्रबुद्ध व्यक्ति सम्मानपत्र, २०६३

# बनेपा सातगाउँ







## ज्ञानकाजी मानन्धर

प्रकाशक
**सुखवेती मानन्धर**
बनेपा – ५, नालादोबाटो, काभ्रे
दूरभाषाङ्क : ०११-६६११८४

| | | |
|---|---|---|
| प्रकाशनकाल | : | जेठ २०६७ |
| प्रकाशनसन्दर्भ | : | बुद्धजयन्ती |
| प्रकाशनप्रति | : | १००० मात्र |
| संस्करण | : | प्रथम |
| सर्वाधिकार | : | लेखकमा |
| अक्षराङ्कन | : | गीता मञ्जुश्री |
| मुद्रक | : | इन्द्रेणी अफसेट प्रेस अनामनगर, काठमाडौं |
| मूल्य | : | रु. २००।- |

ISBN : 978-9937-2-2393-5



समर्पण

**बनेपा सातगाउँका**
**सम्पूर्ण वासिन्दामा**

# दुई शब्द

नेवारभाषा (नेपालभाषा) मा 'न्हय्गां' (सातगाउँ), 'न्हय्गांया जात्रा' (सातगाउँको जात्रा) भन्ने स्थाननाम शब्दहरू ज्यादै कर्णप्रिय र लोकप्रिय छन् । यसैको एउटा ज्वलन्त उदाहरणं हो नेपालमण्डल जिल्ला काभ्रेपलाञ्चोकअन्तर्गत नेवारहरूको बस्तीप्रधान 'बनेपा सातगाउँ' (साँगा, नाला, धुलिखेल, बनेपा, श्रीखण्डपुर, चौकोट र पनौती) को ऐतिहासिक वृत्तान्त र जीवन्त संस्कृतिहरूको प्रासङ्गिक ज्ञातव्य कुराहरू भएको यो पुस्तक ।

मानव-सभ्यताको विकासक्रममा डाँडाकाँडा, खोलानाला, वनजङ्गलकै सेरोफेरोमा स्वच्छ र शुद्ध हावापानीको वातावरणमा मानिसहरूको बस्ती र जीवनयापनका पद्धतिहरू विकसित हुनुका साथै मानिसहरूले आफ्ना जीवनमा चिन्तनमननका क्रमहरू पनि सिर्जना गरी अनेकन् देवस्थल, तीर्थस्थल, मठमन्दिर, विहार तथा अनेकन् कलात्मक देवदेवीका मूर्तिहरू सिर्जना गरी जीवनशैलीलाई 'सत्यं, शिवं र सुन्दरम्' बनाउन अनेकन् जात्रा, पर्व, उत्सव, मेला, बाजागाजा, नाचगान आदि व्यवहारमा ल्याई मनाउन थालेपछि, मानव-विकासका निमित्त प्रकृति (Nature) र संस्कृति (Culture) यी दुई तत्त्वहरूको पनि ठूलो भूमिका हुने गर्दो रहेछ भन्ने कुरो प्रस्तुत पुस्तक पढ्दै जाँदा आत्मसात् हुँदै जाने रहेछ ।

उक्त पृष्ठभूमिमा सामाजिक विज्ञानको जगत्मा ख्यातिप्राप्त मानवशास्त्री सर एडवार्ड ब्रुनेट टाइलर (E. B. Tylor, U. K.) ले प्रतिपादन गरेको तथ्य अर्थात् 'संस्कृति भनेको त्यस्तो एउटा व्यापक समष्टि हो, जसमा कुनै पनि मानिसले एउटा समाजको सदस्यका हैसियतले प्राप्त गरेको ज्ञान (Knowledge), विश्वास (Belief), कला (Art), नीति-आचरण (Morals), कानुन-नियम/विधिविधान (Law), थितिरीति/आचारविचार (Custom) र अन्य क्षमताहरू (Capabilities) तथा आनीबानी/स्वभावहरू (Habits) समाविष्ट भइरहेका हुन्छन्' भन्ने परिभाषा प्रस्तुत पुस्तकभित्र मूर्तरूपमा छरिएको पाइन्छ । मानवशास्त्रको परम्परामा संस्कृतिको यस्तो व्यापक तात्पर्य हुने हुनाले यस दृष्टिकोणले विचार गर्दा बनेपा सातगाउँको प्रस्तुत पुस्तक एउटा जाँचिएको नयाँ प्रयोग (A Case Study) का रूपमा पनि देखापरेको छ ।

एक त हाम्रो राष्ट्र नेपाल विविध भाषा, थितिरीति-संस्कृति हुने अनेक जातजातिहरूको साझा देश हो । यस्तै विविधतामा हाम्रो राष्ट्रिय एकताको विशेषता रहिआएको छ । तर अतीतकालमा अनेक कारणवश हाम्रा गाउँघरमा छरिएका सभ्यता र संस्कृति तथा विलुप्त भइरहेका ऐतिहासिक अवशेषहरूका साथै परम्परागत रूपमा जीवन्त भइरहेका संस्कृतिहरूको लेखाजोखा गर्नमा तथा अतीतका गहिराइमा डुबी मानवगुणको सँगालो गर्नमा भने निकै पछाडि परिरहेकाले हामीहरूको राष्ट्रिय इतिहास र राष्ट्रिय संस्कृति नै अधुरो र अपूरो भइरहेको महसुस हुने गर्दछ ।

आज हाम्रो नेपाल राष्ट्रको इतिहासमा २०६२-६३ को जनआन्दोलन (२) ले ठूलो परिवर्तन ल्याइसकेको छ, राजतन्त्र धराशायी भइसकेको छ र सङ्घीय लोकतन्त्रात्मक गणतन्त्रको उदय भइरहेको छ । हामीहरूका प्रत्येक गाउँ तथा सहरमा राष्ट्रिय एकता र राष्ट्रिय सांस्कृतिक जागरणको मूल फुटिसकेको छ । यस परिप्रेक्ष्यमा आ-आफ्नो जन्मथलोको प्रधानता भएको गाउँसहरको इतिवृत्त अर्थात् ऐतिहासिक वृत्तान्त र सांस्कृतिक पूर्ण विवरण थाहा पाउने हक-अधिकार र जिज्ञासा सबैका लागि हुनुपर्दछ । यसै तथ्यमा आधारित जनस्तरबाट चालिएको एउटा आफ्नै विशेषता भएको नौलो परियोजनामा प्रस्तुत 'बनेपा सातगाउँ' पुस्तक अग्रपङ्क्तिमा समयसापेक्ष भएर राष्ट्रिय उपलब्धिका रूपमा देखापरेको छ ।

अतः बनेपा सातगाउँका बारेमा यथेष्ट अध्ययन, अन्वेषण र अनुसन्धान गरी ठूलो परिश्रमपूर्वक लेखिएको प्रस्तुत शोधपूर्ण पुस्तक विविध दृष्टिकोणले पठनीय र सङ्ग्रहणीय भएको छ, विशेषतः नेपाली पुरातत्त्व, इतिहास र संस्कृतिको फाँटमा । यस किसिमको उपयोगी पुस्तकका ख्यातिप्राप्त सिद्धहस्त लेखक एवं विद्वान् शोधकर्ता काभ्रे बनेपाकै निवासी ज्ञानकाजी मानन्धरज्यू हामीहरू सबैका धन्यवादका पात्र हुनुभएको छ । उहाँले दर्शाउनुभएको सत्कार्य अन्य गाउँका लागि पनि अनुकरणीय भएको छ । अस्तु ।

**सत्यमोहन जोशी**
**चान्सलर**

**नेपालभाषा एकेडेमी, कीर्तिपुर**
**२०६७ जेठ ३ गते**

# भूमिका

विभिन्न ताल र छहरा, पहाड र पर्वत, रोसी र कोसी, नदी र नाला, वन र जङ्गल, लेक र बेँसी अनि साना-ठूला गाउँहरूको पृष्ठभूमिमा रहेको काभ्रेपलाञ्चोक जिल्लाका सात मुख्य सहरहरू हुन् – साँगा, नाला, धुलिखेल, बनेपा, श्रीखण्डपुर, चौकोट र पनौती । यी सहरहरू एक समयमा 'देश' कहलिएका थिए । पूर्वमध्यकालमा चण्डेश्वरीको निर्देशन पाई राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा नासिकाभगवतीनजिक साँगा, नालाभगवतीनजिक नाला, चण्डेश्वरीपीठनजिक बनेपा, नारायणमन्दिरनजिक धुलिखेल, धनेश्वरनजिक श्रीखण्डपुर, चकोरऋषिको आश्रमनजिक चौकोट र प्राचीनकालमा पाञ्चालदेश कहलिएको नेपालको प्रयागतीर्थनजिक पनौती निर्माण गरेको कुरा वंशावलीमा उल्लेख छ ।[१]

सहरका रूपमा निर्माण गरिनुभन्दा पहिले यी ठाउँहरू लिच्छविकाल, अझ किराँतकालमा नै बस्तीका रूपमा नभएका होइनन् होला, तर राजा आनन्ददेवले मानिसहरूको जीवन सुविधाजनक बनाउनका लागि पानीको व्यवस्था मिलाउन ठाउँठाउँमा इनारहरू, ढुङ्गेधाराहरू, पोखरीहरू, व्यवस्थित ढङ्गले बस्नका लागि ठाउँठाउँमा ननी (चोक) हरू, जसले गर्दा घाम र हावा लाग्ने हुन्थ्यो, धर्मप्रति आस्था जगाउन बिहान-बेलुका देवीदेवताको भजन-कीर्तन गर्न टोलटोलमा पाटी-पौवाहरू, सांस्कृतिक कार्यक्रम गर्न-गराउन र पर्वपर्वमा मुकुन्डोनाच र अन्य नाटक मञ्चन गर्न ठाउँठाउँमा डबलीहरू आदि मिलाएर वैज्ञानिक ढङ्गले यी सहरहरूको निर्माण गरेका थिए ।

यी सातै सहरका संस्कृति, रीतिरिवाज, जात्रापर्व आदि केही अंशमा लोप भएर गए पनि अहिलेसम्म यस्ता धेरै अर्थपूर्ण र संस्कृतिका महत्त्वपूर्ण कुरा गाँसिएका चाडपर्वहरू चल्दै आएका छन् । यहाँका गाउँहरूमा पनि आफ्नै किसिमका संस्कृति र रीतिरिवाज नभएका होइनन्, तर यी सबैलाई समावेश गर्न धेरै अध्ययन गर्नुपर्ने र धेरै समय लाग्ने हुँदा यी सात सहरलाई लिएर, अझ यी सात सहरका पनि खास गरी त्यहाँका आराध्य देव या देवीमा बढी केन्द्रित रहेर मैले यो पुस्तक तयार पारेको छु । आफू

[१] Nepal – History of the Country and the People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi

बनेपाली भएका नाताले यस पुस्तकमा बनेपाविषयक ३-४ वटा लेखहरू समावेश गरेको छु ।

यस पुस्तकका लेखहरू लेख्ता मैले गहन अध्ययन गरेर अथवा अनुसन्धान गरेर समाजका गहकिला कुराहरू त्यति खोतल्न सकेको छैन, तर पनि सम्बन्धित सहरहरूमा पटकपटक गएर, त्यहाँका आदरणीय व्यक्तित्वहरूसँग सम्पर्क राखेर अनि यी ठाउँहरूका विषयमा लेखिएका लेखहरू अध्ययन गरेर यो पुस्तक तयार पारेको छु । मेरा पूज्य बुबा स्व० मोहनलाल खिँले यी ठाउँहरूका विषयमा कुरा गर्नुभएकोमा सम्झिएका केही सान्दर्भिक कुराहरू पनि मैले यसमा समावेश गरेको छु । उहाँप्रति र मैले सम्पर्क गरेका सम्बन्धित व्यक्तित्वहरूप्रति म धेरै आभारी छु । काभ्रेका यी ठूला बस्तीहरूलाई 'बनेपा सातगाउँ' भन्ने गरिएकाले मैले पनि यस पुस्तकको नाउँ 'बनेपा सातगाउँ' राखेको छु ।

यस पुस्तकमा परेका केही लेखहरू 'काभ्रे टाइम्स' मा छापिइसकेका छन् । अरू दुई-तीनवटा लेखहरू अन्य स्मारिकामा छापिइसकेका छन् । पुस्तकका रूपमा ल्याउँदा भाषाविद् श्री हरि मञ्जुश्रीले व्याकरण मिलाइदिनुभएको छ । नेपाल भाषा आकादमीका कुलपति नेपालका ख्यातिप्राप्त संस्कृतिविद् श्री सत्यमोहन जोशीज्यूले आफ्नो कार्यव्यस्तता हुँदाहुँदै पनि यस पुस्तकका लागि गहकिलो भूमिका लेखिदिनुभएको छ ।

यसरी यो पुस्तक तयार पार्न मलाई सहयोग गर्नुहुने श्री हरि मञ्जुश्री र लोकसंस्कृतिका ज्ञाता आदरणीय श्री सत्यमोहन जोशी दाइप्रति आभार व्यक्त गर्दै यस पुस्तकको अक्षराङ्कन गरिदिने गीता मञ्जुश्री र पुस्तक प्रकाशन गरिदिने मेरी श्रीमती सुखवेती मानन्धरलाई पनि धन्यवाद ज्ञापन गर्दछु ।

**– ज्ञानकाजी मानन्धर**

**२०६७ वैशाख २१ गते**
**बनेपा, तीनदोबाटो**

# विषयसूची

# 'बनेपा सातगाउँ' का केही ऐतिहासिक र सांस्कृतिक पक्षहरू

**पृष्ठभूमि :**

पहाड-पर्वत, वन-जङ्गल, खोला-नाला, लेक-बेँसी र रोसी-कोसीको पृष्ठभूमिमा रहेको काभ्रेपलाञ्चोक जिल्लामा यताउता छरिइरहेका स-साना बस्तीहरूलाई मिलाएर कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले सातवटा सहरहरू, अर्थात् चण्डेश्वरीपीठनजिकै बनेपा, नेपालको प्रयागतीर्थनजिकै पानवती (पनौती, जसलाई पहिले पाञ्चालदेश पनि भन्ने गर्दथे), नालाभगवतीनजिकै नाला, नारायणनजिकै धौखेल (धुलिखेल), धनेश्वरनजिकै खड्पु (श्रीखण्डपुर), चकोरऋषिको आश्रमनजिकै चौकोट र नासिकापीठनजिकै साँगा बनाएका थिए ।[१] मध्यकालमा ती सातैवटा गाउँहरूले 'देश' सङ्ज्ञा पाएका थिए ।[२]

तर त्यसो भन्दैमा यहाँ त्यसभन्दा पहिले व्यवस्थित बस्तीहरू नभएका होइनन्, किनभने लिच्छविकालीन सम्वत् मेटिएको बनेपाको शिवदेव – अंशुवर्माको, खोपासीको सम्वत् ५२० को शिवदेव – अंशुवर्माको, साँगाको सम्वत् ३२ को अंशुवर्माको र नालाको सम्वत् ११८ को शिवदेव (द्वितीय) को आदि लिच्छविकालका अभिलेखहरूले यहाँका बस्तीहरू धेरै पहिले नै विकसित भइसकेका देखाउँछन् । फेरि, साँगालाई 'शङ्गाग्राम', नालालाई 'नालुङ्ग' र बनेपालाई 'भुजङ्ग' भनी अभिलेखहरूमा उत्कीर्ण गरिएकाले यी ३ 'ङ्ग' जोडिएका स्थानहरू किरातकालीन बस्तीहरू भएको र किरातकालमा नै यी बस्तीहरू विकसित भइसकेको देखिन्छ ।

काभ्रे जिल्ला धार्मिक दृष्टिकोणले पनि महत्त्वपूर्ण छ । नेपालका प्रसिद्ध कलापूर्ण मूर्तिहरूमध्ये पलाञ्चोक भगवती पनि एक हो । लिच्छविराजा मानदेवका पालामा सम्वत् ४२५ मा प्रतिस्थापित यो भगवतीमूर्तिको शिलालेखमा कलाकारको नाम भने छैन, खालि राजा

---

१ Nepal - History of the Country and the People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi

२ मेचीदेखि महाकाली (भाग २) मध्यमाञ्चल विकास क्षेत्र, प्रकाशक : श्री ५ को सरकार, सञ्चार मन्त्रालय, सूचना विभाग, काठमाडौं, २०३१

मानदेवको र भगवती स्थापना गर्ने विजयस्वामिनीको नाम मात्र अभिलेखमा समावेश गरिएको छ ।[३] हुन पनि त्यस बखत जस्तोसुकै राम्रो कलाको सिर्जना गरे पनि कलाकारको नाम लेख्ने चलन त्यतिको थिएन ।

काभ्रे जिल्ला बौद्ध धर्मावलम्बीहरूका लागि पनि पवित्र तीर्थस्थल बनेको छ । कपिलवस्तुबाट भगवान् बुद्ध काठमाडौं उपत्यकामा आउनुहुँदा नाला करुणामयमा वर्षावास बस्नुभएको थियो भनी स्वयम्भूपुराणमा उल्लेख छ ।[४] नेपालका चार प्रसिद्ध करुणामयहरूमध्ये नाला करुणामय पनि एक हो । यी देवतालाई सृष्टिकान्ता (सृष्टि गर्ने देवता) लोकेश्वर भनिन्छ । आफ्नो वर्षावास सकिएपछि भगवान् बुद्ध योगाकुल पर्वत (हाल नमोबुद्ध चैत्य अवस्थित भएको ठाउँ) मा आपना शिष्यहरूका साथ जानुभएको थियो । भनिन्छ आफ्ना शिष्यहरूलाई धर्मप्रवचन दिने सन्दर्भमा त्यहाँ भगवान् बुद्धले जमिनभित्र गाडिराखेको आफ्नो पूर्वजन्मको अस्थिधातु र अन्य सामान पत्ता लगाई नतमस्तक भएर नमः (नमस्कार) गर्नुभएकाले त्यहाँ बनाइएको चैत्यलाई नमोबुद्ध भनिएको हो । किराती राजा हिमातीका छोरा जितेदास्तीका पालामा यो चैत्य निर्माण गरिएको हो भन्ने विश्वास गरिएको छ । नमोबुद्ध चैत्यका दायाँ र बायाँ ढोकामा बुद्धका दुई मुख्य शिष्यहरू शालिपुत्र र मौद्गल्यायनका मूर्तिहरू ढुङ्गामा कुँदिएका छन् ।

कुनै समय शङ्खु राज्यका राजकुमार महासत्वले जङ्गलमा घुम्न जाँदा भोकले मर्न लागेकी बघिनी र त्यसका ५ डमरूलाई आफ्नो रगत र मासु आफैँले काटी खुवाएर उनीहरूको ज्यान बचाई आफूले बोधित्व प्राप्त गरे भन्ने बौद्ध आख्यान छ । भाद्र कृष्णपक्ष द्वादशीको साँझपख नमोबुद्धको प्रतिमा शङ्खुबाट पनौती ल्याई सानो खटमा राखेर विविध बाजाका साथ जात्रा गर्ने चलन अद्यापि चल्दै आएको छ ।

**साँगा :**

काठमाडौं उपत्यकावरिपरिका चारभन्ज्याङमध्ये साँगा पनि एक हो । साँगा काठमाडौं उपत्यकाको पूर्वी द्वार हो । 'सा:' को अर्थ तेल पेल्ने कोल हो र 'गा:' को अर्थ गाउँ अथवा ठाउँ हो । त्यही 'सा:' र 'गा:' बाट 'साँगा' हुन आएको हो । मतलब त्यस ठाउँमा धेरै कोलहरू भएको एवं तेलका लागि त्यो औद्योगिक क्षेत्र भएको कुरा लिच्छविकालका राजा

---

[३] लिच्छविकालका अभिलेख, ग्रन्थकार : धनवज्र वज्राचार्य, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, कीर्तिपुर, आषाढ २०३७

[४] स्वयम्भू महाचैत्य, लेखक : हेमराज शाक्य



अंशुवर्माको सम्वत् ३२ को शिलाभिलेखमा 'तैल्यशाखा' अर्थात् तेल उत्पादन गर्ने थलो उल्लेख भएको कुराले बुझाउँछ । त्यहाँ तेलको औद्योगिक क्षेत्र विकास गर्ने हेतुले राजा अंशुवर्माले कर माफी गरिदिएको कुरा पनि अभिलेखले देखाउँछ ।

सांस्कृतिक दृष्टिकोणले साँगा अत्यन्त महत्त्वपूर्ण छ । यहाँ अनेकौं देवीदेवताका सुन्दर मूर्तिहरू छन् । राम्रा-राम्रा पुराना मूर्तिहरू चोरेर लगिसकेका छन् । साँगाबस्तीको पूर्वतिर विकटेश्वर महादेव छ । लिच्छविकालको अभिलेखमा उल्लिखित रौद्र रूपको उक्त विकटेश्वर महादेव भने अहिले त्यहाँ छैनन् । विकटेश्वर महादेवको अलिकति उत्तरतिर रहेको अति कलात्मक छिन्नमस्तक नारायणलाई पनि चोरेर लगिसकेका छन् । त्यहाँ अहिले अर्कै नारायण राखिएको छ । नेपालका ४ प्रसिद्ध गणेशहरूमध्ये काठमाडौंबाट आउँदा साँगाको उकालो चढेर आएपछि अरनिको राजमार्गको बायाँपट्टि सानो खोल्सोभन्दा अलि माथि प्यागोडा शैलीको एउटा मन्दिरभित्र रहेका गणेशलाई कसैले सिद्धिविनायक भन्ने गर्दछन् त कसैले आदिनाथ भन्दछन् । उकालो चढेर साँगा पुग्नेबित्तिकै उत्तरी बाटोसँगैको ठाउँलाई यहाँका मानिसहरूले 'लायकू' भन्दछन् । त्यहाँ तलेजुभित्र नारायण, महादेव, कुमारी र भैरवलाई गोप्य ढङ्गले सुरक्षित राखिएको छ ।

साँगाको मुख्य पर्व बिस्केटजात्रा हो । चैत मसान्तको साँझपख मुदेटोलको एउटा चौरमा विविध बाजागाजाका साथ लिङ्गो उभ्याउने र उक्त लिङ्गो वैशाख ४ गते ढाल्ने चलन छ । वैशाख १ गते गणेश, भैरव र कुमारीको जात्रा हुन्छ । जात्राको सिलसिलामा भैरव र कुमारीको रथ जुधाउने चलन छ ।

साँगाबस्तीको अलि पर पूर्वतिर नासिकाभगवतीको मन्दिर छ । यिनी साँगाका जनताकी आराध्य देवी हुन् । साँगाकी नासिकाभगवतीको आख्यान झल्कने गरी मुकुन्डो लगाएर नाच्ने यहाँ देवीनाच छ । विविध देवदेवीहरू सम्मिलित यस देवीनाचमा साँगाका पृथक्-पृथक् खलकका मानिसहरूले एक-एकवटा मुकुन्डो लगाएर नाच्ने यो नाच अत्यन्तै अर्थपूर्ण छ । कहँ र पोङ्गाको धुनमा, ढोलक र पछिमाको तालमा बायाँ खुट्टाले टेकेर दायाँ खुट्टा उचालेर हुङ्कार गरी देवी नासिकाले मयुरासुरलाई बध गर्ने दृश्य अत्यन्तै रोमाञ्चकारी एवं नाटकीय छ । तर यो देवीनाच नचलेको २० वर्षजति भइसकेको छ । देवीनाचका सबै सामग्रीहरूचाहिँ अद्यापि सुरक्षित नै रहेका छन् ।

**नाला :**

नेपालका चार करुणामयहरूमध्ये एक नाला करुणामय (सृष्टिकान्ता लोकेश्वर) र चार भगवतीमध्ये एक भगवतीले बास गरेको, साथै पवित्र तीर्थस्थल महादेवपोखरीको फेदमा अवस्थित नाला हिन्दू तथा बौद्ध दुवै धर्मावलम्बीहरूका लागि अत्यन्तै प्रसिद्ध तीर्थस्थल हो । पुण्यमाता र नण्यमाता (नन्दीमाता ?) खोलाहरूको बीचमा रहेको यो नाला सहर अति रमणीय छ ।

नालाको लगनटोलमा भगवतीको मन्दिरअगाडि ढुङ्गेधारा छ । सो धाराको दायाँपट्टि सानो जलद्रोणीजस्तो ढुङ्गामा लिच्छविराजा शिवदेव द्वितीयका पालाको अभिलेख छ । सम्वत् ११८ को उक्त अभिलेखमा 'राजाधिराज श्रीशिवदेवस्य राज्यम् उपरिम नालङ्ग ग्राम' उत्कीर्ण गरिएको छ । साथै, ढुङ्गेधारा राख्ने हु. ध्रुवशील र निजका भाइ हु. अणङ्गशीलको नाम उल्लेख्य छ ।[५]

'नालङ्ग' बाट 'नाला' हुन आएको हो । 'नालङ्ग' शब्दले किराती बस्ती भन्ने बुझाउँछ । अत: यो बस्ती किरातकालदेखि नै विकसित भएको बुझिन्छ । मध्यकालमा नाला 'देश' कहलिएको थियो । नालामा गाइने भजनगीतमा यस सहरलाई 'उत्तरापुर' भनिएको छ । लिच्छविकालको अभिलेखमा नालालाई 'उपरिम' भनी उल्लेख गरिएबाट यसको भौगोलिक स्थितिमा 'माथिल्लो' भन्ने बोध हुन आउँछ । पन्ध्रौं शताब्दीमा यो क्षेत्र वर्द्धनपरिवारको प्रशासकीय क्षेत्रअन्तर्गत परेको थियो । नालाको सम्वत् ५२७ को सूर्यमूर्तिको पादपीठमा 'श्री श्री शिवसिंहराम' र 'श्री श्री शक्तिसिंहरामस्य विजय राज' भनी लेखिएको छ ।[६]

पलाञ्चोक भगवती बनाइसकेपछि आफ्नो देब्रे हातले तिनै कलाकारले नालाभगवती बनाइदिए भन्ने किंवदन्ती छ, तर कलाकारको नाम भने थाहा हुन सकेको छैन । यी देवी भगवतीको खटजात्रा वर्षको दुईपटक हुने गर्दछ । पहिले यी देवीको धेरै पुरानो ढुङ्गाको मूर्ति खटमा राखेर जात्रा गर्ने चलन थियो भने हाल आठ बाहु भएको धातुनिर्मित मूर्ति खटमा राखेर जात्रा गर्ने चलन छ । भाद्र शुक्लपक्ष पूर्णिमा (यँया:पुन्हि) पछि तेस्रो दिन अर्थात् तृतीयाको दिनमा विजयावतीटोलस्थित देवगृह (द्योछें) बाट देवीको प्रतिमालाई खटमा राखी जात्रा गरेर नालाभगवतीको

[५] ऐ० ऐ० नं० ३

[६] बनेपा सातगाउँ, बनेपा नगरपालिकाको स्मारिका, ज्येष्ठ २०५३



मन्दिरमा लाने गर्दछन् । त्यस्तै, विजयादशमी र त्यसको भोलिपल्ट पनि यी देवीको खटजात्रा हुन्छ ।

नालामा अक्षयतृतीयाको अघिल्लो दिन अर्थात् वैशाख शुक्लपक्ष द्वितीयादेखि पञ्चमीसम्म महादेव, नारायण र महालक्ष्मीको जात्रा हरेक वर्ष हुने गर्दछ । तर ६०० वर्षभन्दा पुरानो बहुमूल्य धातुबाट निर्मित महालक्ष्मीको कलात्मक मूर्ति २०३५ सालमा चोरी भएपछि नयाँ मूर्ति बनाई जात्रा चलाइएको छ ।

नालामा अत्यन्तै ठूला-ठूला तान्त्रिकहरू थिए भन्ने किंवदन्ती छ । पहिले-पहिले बूढापाकाहरू नालालाई तान्त्रिकहरूको थलो भन्थे । त्यहाँ तन्त्रहरूका थ्यासफू (हस्तलिखित पुराना-पुराना पुस्तक) हरू भएको कुरा मलाई पनि थाहा भएको थियो । नाला र भक्तपुरबीचको एउटा जङ्गलमा असन्तुष्ट नवदुर्गागणले त्यस बाटोबाट जाने यात्रुहरूलाई अपहरण गरेर भोग लिने गर्दथे र दिनदिनै त्यस्ता घटनालाई रोक्न नालाका एक ख्यातिप्राप्त तान्त्रिकले आफ्नो तन्त्रद्वारा ती नवदुर्गालाई आफ्नो नियन्त्रणमा लिएर सबैको उद्धार गरे भन्ने पनि किंवदन्ती छ ।

**धुलिखेल :**

समुद्री सतहबाट ५३३० फिट उचाइमा एउटा ठूलो डाँडामा अवस्थित प्राकृतिक रङ्गमञ्चजस्तो देखिने धुलिखेल सहर अत्यन्तै रमणीय छ । यहाँबाट हिमालका शृङ्खलाहरू र यताउता छरिएजस्ता पहाड-पर्वतका दृश्यहरू हेर्दा मन नै आनन्दले प्रफुल्लित हुन्छ । यस सहरलाई 'गोपाल राजवंशावली' को अतिरिक्त पत्रमा 'धरिक्षल' भनी उल्लेख गरिएको छ ।[७]

यस सहरलाई 'धुलिखेल' किन भनियो भन्ने विषयमा केही किंवदन्तीहरू नभएका होइनन् । यो सहर जङ्गलनजिकै भएकाले बाघहरू खेल्ने ठाउँ भएको हुँदा धुँ (बाघ) ले खेल खेल्ने ठाउँ भएका कारणबाट 'धुलिखेल' भएको भन्नेहरू पनि छन् । अर्को कुरा, यहाँ हुरीबतासले धेरै धूलो उडाउने भएकाले धुलिखेल भनिएको हो भन्नेहरू पनि छन् ।

ने० सं० ७९० को जयजितामित्र मल्लका पालाको एक अभिलेखमा धुलिखेललाई 'शिखरपुरी' भनी उल्लेख गरिएको छ । पहाडमाथि बस्ती

[७] गोपाल राजवंशावली, ग्रन्थकार : धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल, प्रकाशक : नेपाल रिसर्च सेन्टर पब्लिकेसन – ९, सन् १९८५

बसालेर सहर बनाइएको कारणले सम्भवत: यस सहरलाई 'शिखरपुरी' भनिएको हुनुपर्दछ । उक्त अभिलेखमा यहाँका गौखुरेश्वर, लक्ष्मीनारायण, उमामहेश्वर, भगवती आदि देवीदेवताहरूलाई पर्वपर्वमा विधिपूर्वक पूजा गर्न खेत दत्त राखिदिएको कुरा उल्लेख छ । ने० सं० ८५४ को एक अभिलेखमा यस सहरलाई 'धलिखेर देश' भनी उल्लेख गरिएको छ भने ने० सं० ९४० को अर्को अभिलेखमा 'धलिषल' लेखिएको छ ।

धुलिखेल चारवटा टोलमा विभाजित छ । सम्भवत: उत्तरप्राचीनकालमा सुरक्षाका लागि ठूलो ढुङ्गाको पर्खालले घेरेर चार दिशामा चार गणेशहरू दिक्पालका रूपमा प्रतिस्थापित गरी ती गणेशका मन्दिरहरूसमीप धुलिखेलमा पस्ने चार ढोकाहरू अवश्य नै हुनुपर्दथ्यो । ती चार मूल बाटाहरू धुलिखेलको नारायणमन्दिरको चोकमा जोडिन्छन् । यो नै धुलिखेलको केन्द्रीय स्थल हो । यहाँको एउटा सोह्रखुट्टेपाटीमा पहिले-पहिले त्यहाँका बूढापाकाहरू बसेर सामाजिक न्यायका कुराहरू गर्दथे ।

धुलिखेलमा बिस्केटजात्रा हुन्छ, तर अन्य ठाउँहरूमा जस्तै यहाँ लिङ्गो उभ्याउने चलन छैन । बिस्केटजात्रामा नारायणस्थानको चोकमा महादेव र भैरवको खटजात्रा हुन्छ । यसै उपलक्ष्यमा देवी भगवतीको पनि जात्रा हुन्छ ।

धुलिखेलको नारायणस्थान ऐतिहासिक एवं धार्मिक दृष्टिकोणले धेरै नै महत्त्वपूर्ण छ । यहाँ प्यागोडा शैलीका देवी हरसिद्धि र नारायणका मन्दिरहरू छन् । हरसिद्धिलाई कोही माहेश्वरी, वैष्णवी र कौमारीको संयुक्त रूप भन्दछन् भने ब्राह्मी, माहेश्वरी र वैष्णवीयुक्त त्रिशक्ति देवी मान्नेहरू पनि छन् ।[८] प्रत्येक १२ वर्षमा पाटनबाट हरसिद्धिको गणनाच यहाँ ल्याइने गरिन्छ । धेरै वर्षसम्म नल्याइएको यो गणनाच वि० सं० २०६६ सालमा ल्याइएको छ । यहाँका नारायणदेवता धुलिखेलको संरक्षकका रूपमा मानिन्छन् ।

धुलिखेलको उत्तर-पश्चिमको माथिल्लो भागमा देवी भगवतीको भव्य मन्दिर छ । तीनतले प्यागोडा शैलीको यस मन्दिरबाट टाढा-टाढासम्म दृश्यावलोकन गर्न सकिन्छ । भगवतीको सुन्दर मूर्तिमा नाक छैन । नाक किन नभएको हो भन्नेबारे किंवदन्ती पनि छ । राम्रा गहना दिए आउने भनी बाटामा रोइरहेकी केटीले भनेकीले श्रीखण्डपुरका

[८] काभ्रेपलाञ्चोकका केही देवी र देवताहरू, ग्रन्थकार : जीतबहादुर मानन्धर, प्रकाशक : तारादेवी मानन्धर, लायकुसाल काठमाडौं



मानिसहरू गहना खोज्न गएका बखत धुलिखेलका मानिसहरूले यी केटी साक्षात् देवी भगवती हुन् भने थाहा पाएपछि तोरी-मुलाका फुलिरहेका फूलहरू उनेर दिई धुलिखेलमा ल्याएर यी देवी भगवतीलाई स्थापना गरे । त्यो देखेर श्रीखण्डपुरका मानिसहरू क्रुद्ध भएर यिनको नाक काटी लगेर श्रीखण्डपुरमा स्थापना गर्दा शिलाका रूपमा तिनी भगवती भइन् भन्ने किंवदन्ती छ । देवालयभित्र भगवतीको दायाँतिर सरस्वती र बायाँतिर सङ्टा र महाकालीका प्रतिमाहरू छन् ।

विजयादशमी र त्यसको भोलिपल्ट यहाँ भगवतीको रथजात्रा हुन्छ । विजयादशमीको दिन प्रत्येक घरबाट एक-एकवटा नाङ्गो खुकुरी अथवा तरबार लिएर आई खड्गजात्रामा सामेल भएर जात्रा गर्ने चलन अत्यन्तै रोचक छ ।

धुलिखेल नै काभ्रे जिल्लाको सदरमुकाम भएकाले यहाँ नेपाल सरकारका धेरै कार्यालयहरू रहेका छन् ।

**बनेपा :**

काभ्रे जिल्लाका अन्य ६ वटा मुख्य सहरहरूको बीचमा अवस्थित बनेपा यस जिल्लाको केन्द्रीय स्थल बनेको छ । त्यसैले होला बनेपा पुलबजारको उमामहेश्वरको पाटीमा भएका दुई छुट्टाछुट्टै ने० सं० ८७१ सालका अभिलेखहरूमा बनेपालाई राजधानी उल्लेख गरिएको छ ।[९]

पहिले यहाँ भोलाखाटोलको एक बस्ती मात्र थियो रे । पछि दक्षिणको बहिकेवा, पश्चिमको क्वाताल, पश्चिम-उत्तरको सोगद्यो, उत्तरको ग्वाछें (मगरगाउँनजिकैको बस्ती), पूर्वको चण्डेश्वरी र भीनादें (भीमसेनस्थानको बस्ती) अनि पूर्व र दक्षिणको बुडोल आदिका स-साना बस्तीहरूलाई भोलाखाबस्तीसँग मिलाई राजा आनन्ददेवले नयाँ बनेपाको निर्माण गरेका थिए । त्यस बखत आठ दिशामा आठ गणेशलाई दिक्पालका रूपमा प्रतिस्थापन गरी निर्माण गरेको बनेपा आठ ढोका, आठ पोखरी र देवदेवीहरूको भजन गर्नका लागि आठ पाटीहरूसहितले परिवेष्ठित थियो ।

गणेशको अर्को नाम विनायक हो । यसैले आठ विनायकहरूले परिवेष्ठित बनेपालाई पुराना-पुराना ताडपत्रहरूमा 'विनायकपुरी' र 'विनायापुरी' भनी उल्लेख गरिएको छ । बनेपाका राजा जयार्जुनदेवको नाम उल्लेख भएको ने० सं० ४८५ सालको एउटा ताडपत्रमा 'विनयापुरी'

[९] स्मारिका, बनेपा नगरपञ्चायत, प्रधानसम्पादक : ज्ञानकाजी मानन्धर, २०४०

भनी उल्लेख गरिएको छ ।[१०] बनेपालाई 'बनेपुर', 'बनेकापुर', 'वर्णिपुर', 'व्यनेप्य' र 'विनापा' भनेर पनि लेखिएको छ । ने० सं० ३५७ को राजा अभय मल्लको शासनकालको चाँगुनारायणको भण्डारभित्र पाइएको एउटा ताडपत्रमा बनेपालाई 'वनिंयप्य' (वनिंयध्य ?) का उदयश्री नामक एकजना मानन्धरले चाँगुनारायणलाई सुवर्णकोष र नैवेद्य चढाउनका लागि खेत चढाएको प्रसङ्ग छ ।[११] 'वणिपुर', 'बनेपुर' आदि शब्दले व्यापार भन्ने बुझाउँछ ।

हुन पनि काभ्रे जिल्लामा रहेका सहरहरूका बीचमा अवस्थित बनेपा व्यापारीहरूको थलो हो । यस सहरलाई 'भ्वँत', 'भोंदे' पनि भन्ने गर्दछन् । पहिल्यैदेखि भोटसँग व्यापारिक सम्बन्ध भएकाले यसलाई 'भ्वँत', 'भोंदे' भनिएको हुनुपर्दछ । उत्तरप्राचीनकालमा बनेपा एक स्वतन्त्र राज्य थियो । जयभीमदेव आदि प्राचीन मल्लकालका एकथरी राजवंशीको मूल घर बनेपामा थियो । सो राजवंश त्यस बेलाको नेपालको इतिहासमा भ्वन्त अर्थात् बनेपाली भनेर प्रसिद्ध थियो ।[१२] ने० सं० ४६७ को वैशाख शुक्लपक्ष सप्तमीका दिन जयराजदेवकी पत्नी रुद्रमदेवीका तर्फबाट जयार्जुनदेव जन्मे । जयराजदेवको शेषपछि जयार्जुनदेव बनेपाका राजा बने (गोपाल राजवंशावली, पत्र नं० २८) । यस राजवंशका महामन्त्रीहरू रामवर्द्धनहरू थिए । जयार्जुनदेवका महामन्त्री जयसिंहराम वर्द्धन थिए । उनले बनेपा सात सहरहरूमा शासन चलाएका थिए । ने० सं० ४७० मा मुसलमानहरूको हमलाबाट पशुपति महादेवलाई तीन टुक्रा पारिएको थियो । पछि महामन्त्री जयसिंहराम वर्द्धनले चारै वेदका आधारमा चतुर्मुखी पशुपति महादेवलाई शास्त्रीय विधिअनुसार प्रतिस्थापन गर्न लगाएको शिलालेखले देखाउँछ ।

यक्ष मल्लपछि पनि बनेपा स्वतन्त्र राज्य थियो । यक्ष मल्लका छोरा रण मल्लले यस राज्यको राज चलाएका थिए । रण मल्लको शेषपछि ने० सं० ६५० को एक अभिलेखले केशव मल्लले यस क्षेत्रमा शासन चलाएको देखिन्छ । बनेपाको निर्माण गर्दा ९ ननी (चोक) हरू, ९ डबलीहरू, ९ ढुङ्गेधाराहरू र ९९ इनारहरू ठाउँठाउँमा राखी मिलाएका थिए । बनेपा तीनधाराको ने० सं० ५११ को एउटा ताडपत्रमा त्यस धाराका सम्बन्धमा

१० बनेपा-स्तवन, लेखक : ज्ञानकाजी मानन्धर, प्रकाशक : सुखवेती मानन्धर, २०४०

११ बनेपाको ऐतिहासिक रूपरेखा, लेखक : मोहनप्रसाद खनाल, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, कीर्तिपुर, २०५२

१२ हनुमानढोका राजदरबार, ग्रन्थकार : गौतमवज्र वज्राचार्य, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, काठमाडौं, २०२३



उल्लेख गरिएको छ ।[१३] तर त्यस अभिलेखमा ती धाराहरू कहिले बनाइएका हुन् भन्ने कुरा उल्लेख गरिएको छैन । सम्भवतः राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा नै ती धाराहरू पनि बनाएको हुनुपर्छ ।

बनेपामा विभिन्न चाडपर्वहरू छन् । टोलटोलमा दाफा भजनहरू छन् । यँयापुन्हिं (इन्द्रजात्रा) मा यहाँ जालुद्यो (भातको देवता) पर्व चलाइन्छ । यसको किंवदन्ती रोचक छ । बनेपालीहरूकी आराध्यदेवी चण्डेश्वरी हुन् । यी देवीको रथजात्रा वैशाखं पूर्णिमा र त्यसको भोलिपल्ट हुने गर्दछ । ८ वर्ष लगाएर देवी चण्डेश्वरीको मन्दिरलाई 'चण्डेश्वरीमन्दिर पुनर्निर्माण तथा छानासुधार समिति' ले जगैदेखि भत्काएर पुनर्निर्माण गरी सुनको मोलम्बासहित छाना छाउने काम पूरा गरिसकेको छ । करिब ५ करोड रुपियाँ खर्च गरी पुनर्निर्माण गर्ने कार्यमा विभिन्न निकायहरू, बनेपालीहरू र अन्य श्रद्धालु भक्तजनहरूबाट चन्दा प्राप्त भएको थियो ।

**श्रीखण्डपुर :**

बनेपाबाट पूर्व-दक्षिणको बाटो हुँदै रातमाटे तरेर करिब १० मिनेट हिँडेपछि श्रीखण्डपुर सहरमा पुगिन्छ । काभ्रेका सातवटा सहरहरूमध्ये यो पनि एक हो । पहिले नमोबुद्ध जानेहरू श्रीखण्डपुरबाट जाने गर्दथे । श्रीखण्डपुरका बूढापाकाहरूको भनाइअनुसार पहिले यहाँ श्रीखण्डका बोटहरू थिए रे ।

श्रीखण्डपुरलाई 'खम्पू' र 'खड्पू' पनि भन्ने गर्दछन् । यहाँ शिलालेखहरू त्यति पाइँदैनन् । तर ने० सं० ७९४ सालको चारबाहु गरुडारोहण विष्णुनिरको एउटा जीर्ण शिलालेखमा भने एकजना दाताले ५ रोपनी जग्गा दत्त राखी बिस्केटजात्रा र इन्द्रजात्रामा देवीदेवताको पूजा गर्ने र बत्ती बाल्ने कार्यमा त्यसको आयस्ता खर्च गर्ने कुरा उल्लेख गरिएको छ ।

यहाँ दुई मुख्य दाफा भजनहरू छन् । ती हुन् चतुर्मास भजन र लालमोहर भजन । चतुर्मास भजनखलकको एउटा लिखित कागजपत्रमा 'खालि कमाएर मात्र आफ्नो स्वार्थ पूरा गर्ने होइन, टोलवासीहरू सबै मिलेर पर्वपर्वमा देवीदेवताहरूको भजन गर्नुपर्दछ' भनी उल्लेख गरिएको छ । तर समय बित्दै जाँदा दाफा भजनहरू बिस्तारै सेलाउँदै गइरहेका छन् ।

१३ ऐ० ऐ० नं० १०

श्रीखण्डपुरका चार दिशामा चार ढोकाहरू थिए । उत्तरतिरको ढोकानजिकै प्यागोडा शैलीको तीनतले मन्दिरभित्र अमूर्त श्वेतभैरव छ । यहाँ प्रतिवर्ष बिस्केटजात्रामा लिङ्गो उभ्याएर पर्व मान्ने गरिन्छ । बिस्केटजात्रामा एउटै खटमा श्वेतभैरवको प्रतिमाका साथ गणेश र कुमारलाई राखी जात्रा गराउने चलन छ ।

**चौकोट :**

राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा चकोरऋषिको आश्रमनजिकै चौकोट सहर बनाए भन्ने उल्लेख 'पर्वतीय वंशावली' मा छ । तर चकोरऋषि को थिए भन्ने कुरा कतै उल्लेख गरिएको पाइएको छैन । चकोरऋषिको आश्रमनजिकैको बस्तीलाई नै चौकोट भनिएको हुनुपर्दछ ।

एउटा किंवदन्तीअनुसार बनेपा सहरको निर्माण गर्ने क्रममा एउटा गणेशको स्थापना गर्नका लागि बनेपालीहरूले यहाँबाट एउटा राम्रो शिला लगेका थिए । सो शिलालाई देवताका रूपमा बनेपाको दक्षिणपट्टिको ढोकामा स्थापना गरेपछि चौकोटका मानिसहरू आएर सो ढुङ्गा उखेलेर लान खोज्दा उखेल्न नसकेर यसको माथिल्लो भाग टुक्र्याएर लगे । उनीहरूले पनि बनेपाबाट लगेको माथिल्लो टुप्पाको ढुङ्गालाई चौकोटमा गणेशका रूपमा स्थापना गरे । तलको फेदको टुक्रालाई देवताका रूपमा मानिएकाले त्यसलाई तुकंप्वः गणेश (चैतन्य मा० वि० नजिकैको गणेश) भनी पुकारिन्छ । च्वका (नेवारी भाषामा माथिल्लो भागको टुक्रा) लगेर देवताको स्थापना गरिएकाले त्यस ठाउँलाई 'च्वखा' भनिन्छ । अहिले पनि नेवारहरू सो सहरलाई 'च्वखा' नै भन्दछन् ।

चौकोटमा अहिलेसम्म कुनै अभिलेख पाइएको छैन । पहिले यहाँ दरबार भएको बुझिन्छ । यहाँ अहिलेसम्म पनि राजवंशीहरू बस्तै आएका छन् ।

**पनौती :**

पुण्यमाता र रोसीखोलाको बीचमा त्रिगम सङ्गमको पश्चिमपट्टि एउटै ढुङ्गामा अवस्थित पनौती सहरलाई पानवती, पन्ती, पुण्यवती, उत्तरं प्रयाग आदि नामहरूले सम्बोधन गर्ने गरिन्छ । यसको पुरानो नाम पाञ्चालदेश हो । पनौतीका मानिसहरू 'वासुकी नागराजा हामीकहाँको' भनी गर्व गर्दछन् । ढुङ्गाका रूपमा व्याप्त भई ठाउँ ओगटिराखेर



शान्तिपूर्वक रहिरहेका वासुकी नागको शान्ति भङ्ग हुन्छ भनेर यहाँ धेरै पहिलेदेखि घरमा ढिकी राखी धान कुट्न मनाही गरिएको छ । बिहावर, खोपासी, सुनथान, शङ्खु र श्रीखण्डपुरका बीचमा ठूलो उपत्यकाका रूपमा अवस्थित पनौती सहर पनि एक किसिमले व्यापारिक केन्द्र नै हो ।

संस्कृतिका दृष्टिकोणले पनौती अत्यन्त महत्त्वपूर्ण छ । त्रिवेणीघाटमा राधाकृष्ण, नारायण, केदारनाथ, शीतलामाई, सङ्टा, महादेवका धेरै लिङ्गहरू र अरू धेरै देवीदेवताहरू भएकाले यो नेपालको प्रसिद्ध एक तीर्थस्थल हो । अतः धेरै टाढा-टाढाबाट लासहरू ल्याएर यहाँको त्रिवेणीघाटको मसानमा जलाई दिवङ्गत हुनेहरूलाई तार्ने काम गरिन्छ ।

पुण्यमाताखोलापारि गोरखनाथडाँडाको फेदमा ब्रह्मायणीको मन्दिर छ । यस मन्दिरभित्र अष्टमातृकाका रङ्गीन म्युरलहरू अत्यन्तै अर्थपूर्ण र शास्त्रीय ढङ्गका छन् । इन्द्रेश्वरमहादेवको प्राङ्गणमा सूर्यनारायण, तुलानारायण, सत्यनारायण, लक्ष्मीनारायण आदि देवीदेवताहरूका कलात्मक मूर्तिहरू छन् । इन्द्रेश्वरमन्दिरको दक्षिणपट्टि उन्मत्तभैरवको मन्दिर छ । मन्दिरभित्र पश्चिमपट्टि फर्किएको अवस्थामा रहेको काष्ठनिर्मित यो भैरवमूर्ति दायाँ खुट्टाले मूसा र बायाँ खुट्टाले नागलाई कुल्चेर उभिएको छ । चार बाहु भएको भैरवमूर्तिमा दुई बाहु फैलाइएको छ ।

पनौतीमा अनेकौं देवीदेवताका सुन्दर मूर्तिहरू यत्रतत्र छन् । पनौतीलाई खुला सङ्ग्रहालयं भने पनि हुन्छ । पनौतीको त्रिवेणीघाटमा विविध देवीदेवताका साथमा रहेको १४ औं शताब्दीको सूर्यमूर्ति, १३ औं शताब्दीको शिवमूर्ति, शिव र विष्णु साथमा रहेको १४ औं शताब्दीको सूर्यमूर्ति, १४ औं शताब्दीकै नवग्रहसहितको अर्को सूर्यमूर्ति, लक्ष्मी र गरुडसहितको १४ औं शताब्दीकै विष्णुमूर्ति र १८ औं शताब्दीको उभिइरहेको विष्णुमूर्ति आदि चोरेर लगिसकेका छन् ।[१४] यीबाहेक अरू कैयौं मूर्तिहरू पनि चोरले चोरिसकेका छन् ।

पुण्यमाता र रोसीखोलाको सङ्गमस्थलमा अदृश्य रूपले रुद्रावती मिसिएर त्रिवेणी बनेको यो पवित्र तीर्थस्थलमा प्रत्येक १२ वर्षमा माघ महिनाभरि मकरमेला लाग्दछ । त्यस बखत विभिन्न जिल्लाका

---

१४ Stolen Images, Writer : Lain S. Bangdel, Publisher : The Royal Nepal Academy, Nepal, 1980

मानिसहरूको माघ महिनाभरि नै भीड लाग्दछ । उनीहरू यो पवित्र पुण्यस्थलमा नुहाउँछन् ।

आकर्षक र अर्थपूर्ण काष्ठकलाकृतिहरूले भरिएको प्यागोडाशैलीमा निर्मित इन्द्रेश्वरमन्दिर र अन्य विविध देवीदेवताका मन्दिरहरू भएको यो पनौती सहरमा ज्यापुन्हि अर्थात् ज्येष्ठ शुक्लपक्ष पूर्णिमाका दिन इन्द्रेश्वर महादेव, भद्रकाली र उन्मत्तभैरवको जात्रा हुन्छ । पनौतीको लायकूचोकमा हुने यो जात्रा कृषिसँग सम्बन्धित छ । त्यस स्थलमा भद्रकालीको रथसँग उन्मत्तभैरवको रथ जुधाइन्छ । पछि फेरि इन्द्रेश्वरमहादेवको रथ भद्रकालीको रथसँग जुधाइन्छ । रथ जुधाउने कामले यी दुवै देवीदेवताका बीचको सम्भोगको सङ्केत गरेको प्रतीत हुन्छ । रथहरूको जुधाइपछि त्यहाँ अबीर छरिने भएकाले छद्म रूप धारण गराइएको भान हुन्छ ।

विविध पर्वहरू, धेरै किंवदन्तीहरू र धेरै शिलालेखहरू भएको यो पनौती नगरी अनुसन्धानका लागि योग्य छ ।

**उपसंहार :**

काभ्रे जिल्लाका उल्लिखित सात ठूला बस्तीहरू, जस्तै : पूर्वमा धुलिखेल, पश्चिममा साँगा, उत्तरमा नाला, दक्षिणमा पनौती, आग्नेय कोणमा श्रीखण्डपुर र चौकोट तथा बीचमा बनेपा छ । यी ठूला बस्तीहरूका बीचमा बनेपा भएको हुँदा यो नै काभ्रेको केन्द्रीय स्थल बनेको छ । त्यसैले होला बनेपा पुलबजारस्थित उमामहेश्वरको पाटीमा रहेका ने० सं० ८७१ सालका दुई शिलाभिलेखमा यस सहरलाई राजधानी भनी उल्लेख गरिएको छ । यी सातै बस्तीहरूका आसपासमा स-साना गाउँहरू छरिएर रहेका छन् । ती गाउँहरूले ती सात बस्तीहरूको शोभा बढाइदिएका छन् । ती बस्तीहरूसँगैका गाउँहरूले रूखका सुन्दर हाँगाहरूझैं फैलिएर तिनीहरूलाई टेवा दिइरहेका छन् ।





# साँगाको सांस्कृतिक झलक

पहिले काठमाडौं उपत्यका नागदहका रूपमा छँदा साँगातलसम्म पानी भरिएको कुरा बूढापाकाहरूले भन्ने गरेका थिए । त्यस बखत बनेपाका राजाले अहिलेको साँगा भन्ने ठाउँमा सा (गाई) हरूको गोठ बनाएर धेरै नै सा (गाई) हरू पालेका थिए रे । ती गाईहरू त्यही नागदहको पानी खान जान्थे भन्ने यहाँको जनश्रुति छ । सा (गाई) हरू धेरै पाल्ने गरेको ठाउँ सागः (गाईहरू भएको गोठ) बाट नै साँगा भएको हो भन्नेहरू पनि नभएका होइनन् । पछि मञ्जुश्री बोधिसत्वले नागदहको पानी खुलाएर पठाइसकेपछि काठमाडौं उपत्यकामा बस्तीहरू बस्न थाले । अनि चारवटा भन्ज्याङमध्ये पूर्वपट्टिको यो ठाउँ साँगाभन्ज्याङ नामले प्रख्यात भयो । काठमाडौं उपत्यकाका लागि यो एउटा धेरै नै महत्त्वपूर्ण द्वार हो । चित्लाङ (चिलँ), टिस्टुङ (तेस्तुँ), मुस्ताङ, ख्वप्रिङ (ख्वप, भक्तपुर), नालुङ (नाला), भुजङ्ग (भौंत, बनेपा), धादिङ आदि पछाडि 'ङ' या 'ङ्ग' अक्षर गाँसिएर आउने ठाउँ किरातकालमा नै विकसित बनिसकेका बस्तीहरू हुन् । त्यसैले साँगा (साङ्गा) पनि किरातकालमा नै बसिसकेको बस्ती हो भन्ने कुरा स्पष्ट छ । यो एक अत्यन्तै महत्त्वपूर्ण ऐतिहासिक ठाउँ हो । तर यस ठाउँलाई विद्वान्हरूले ध्यानमा राखी यहाँका बारेमा अनुसन्धान गरेर पुराना-पुराना ऐतिहासिक कुराहरू पत्ता लगाउनेतर्फ त्यति प्रयास गर्नुभएको देखिँदैन । वंशावलीमा उल्लेख गरिएअनुसार राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ अर्थात् वि० सं० ११५३ मा यहाँ सातवटा गाउँहरू (बनेपा, साँगा, नाला, धुलिखेल, श्रीखण्डपुर, चौकोट र पनौती) निर्माण गर्दा यहाँ छरिएर रहेका स-साना बस्तीहरू एकत्रित गरी नासिकापीठनजिक साँगा पनि निर्माण गरेका थिए ।[१] तर साँगा नयाँ बस्ती होइन । राजा आनन्ददेवले नवनिर्माण मात्र गरेका थिए ।

साँगा धेरै नै पुरानो गाउँ हो । 'साँगा' शब्दको अर्थ केलाउँदा यस ठाउँमा पहिले धेरै नै 'साः' (कोल) हरू थिए भन्ने कुरा यहाँ स्थापित सम्वत् ३२ को लिच्छविकालका राजा अंशुवर्माको अभिलेखले देखाउँछ । पहिल्यैदेखि तेल उत्पादन गर्ने एक औद्योगिक क्षेत्र नै बनेपा र

[१] Nepal – History of the Country and People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi

भक्तपुरबीचको यो साँगा हो । तेलको उद्योग फस्टाउन कर माफी गरी राजा अंशुवर्माबाट स्थापित शिलालेखमा 'तैल्यशाला' मात्र होइन, यस ठाउँको नाम 'शङ्ग्राम' अर्थात् 'तेल पेल्ने कोलहरूको गाउँ' भन्ने उल्लेख गरिएको छ ।



(साँगाको विकटेश्वर महादेव)

साँगाबस्तीभन्दा अलिकति पूर्वतिर सोही गा० वि० स० को वडा नं० ३ मा विकटेश्वर महादेव रहेको स्थानबाट केही मात्र उत्तर-पश्चिममा खेतको बीचमा राखिएको लिच्छविकालको यस शिलालेखको सुरुमा मङ्गलाचरणका रूपमा सर्पका कुण्डल र मुण्डमालाका गहना लाएका महादेवको रौद्ररूपको वर्णन गरिएको हुँदा त्यस्तो स्वरूपको महादेवको पुरानो मूर्ति अहिले यहाँ भइरहेको महादेवको मूर्ति नै हो कि होइन थाहा भएन । तर अहिले यहाँ विकटेश्वर महादेव भनी मान्ने गरिएका महादेव छन् । शिलालेखमा वर्णन गरिएका महादेवको नाम विकटेश्वर हो । यहाँको शिलालेखमा यी महादेवको रूपको पनि वर्णन गरिएको छ । यो संस्कृत भाषामा छ । यसको नेपाली भाषामा अनुवाद यस्तो छ –

कानमा गहनाका रूपमा लगाइरहेका डरलाग्दा सर्पहरूको फुत्कारको हावाले जटा छ्यान्नब्यान्न भएको, भरखरै काटिएको तात्तातो रगत चुहिरहेको मुण्डमाला लगाएको, ठूलो स्वरले खित्का छाडेर हाँसिरहेको, रगत चुहिरहेको हात्तीको छाला ओढेको, पार्वतीले डराई-डराईकन हेरिरहेको महादेवको रूपले तिमीहरूलाई रक्षा गरोस् ।[२]

---

[२] लिच्छविकालका अभिलेख, ग्रन्थकार : धनवज्र वज्राचार्य, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, काठमाडौं, नेपाल, २०३० आषाढ



द्रोणाचल पर्वततल दुग्धकुण्डबाट तल बगिरहेको जमुनाधारा गङ्गा, मुख्य बाटोबाट आई बगिरहेको निर्मल गङ्गा अनि श्री महाकाली सङ्कष्टनासिकाबाट बगिरहेको ललिता गङ्गा – यी तीन गङ्गाको सङ्गमस्थल त्रिवेणीघाटमा अवस्थित विकटेश्वर महादेवको ठाउँमा धर्ममा आस्था हुने मानिसहरूले १३ आना जग्गा उपलब्ध गराई यी देवताको जगती या आँगन (Courtyard) अचेल राम्ररी बनाइएको छ । दक्षिण र पश्चिमतिर बनाइएको पूर्वाभिमुख यो विकटेश्वर महादेवको दायाँतिर पश्चिमाभिमुख कीर्तिमुख भैरव, भगवती र फेरि चार बाहु भएका नारायणलाई प्रतिष्ठापन गराइएको छ । यहीँ दक्षिणतर्फ फर्काइएका गणेशको पनि मूर्ति छ । बायाँतिर खोलापारि पितृको सम्झनामा दुई शिवलिङ्ग र ढुङ्गाका साँढेलाई पनि प्रतिष्ठा गरी राखिएको छ ।



(साँगाको छिन्नमस्तक नारायण)

राजा अंशुवर्माले राखेको शिलालेखभन्दा अलि पर उत्तरतिर पश्चिमाभिमुख छिन्नमस्तक नारायण छ । यी देवताको साह्रै राम्रो, कलापूर्ण र नौतले पहिलेको मन्दिर अहिले भत्किसकेको हुनाले अवशेषहरू पनि यहाँ बाँकी छैनन् । त्यसको सट्टा अहिले यहाँ सानो देवालय छ । तर अति नै बहुमूल्य, धेरै राम्रो र कलापूर्ण यहाँको पुरानो छिन्नमस्तक नारायण धेरै वर्षपहिले नै चोरेर लगिसकेका छन् । अहिले यहाँ प्रतिष्ठापन गरिएको नारायण साँगाबाट ल्याएर यहाँ स्थापना गरी राखिएको हो । यो नारायण पनि अति नै कलात्मक भई राम्रो देखिन्छ । यस नारायणका अगाडि अर्थात् पश्चिमपट्टि कर्कटपाताले छाएको एउटा कुटी छ । यहाँ एकजना बाबाजी बसी आध्यात्मिक जीवन बिताइरहनुभएको छ ।

नारायणका अगाडि अञ्जुली मुद्रामा घुँडा टेकेर नारायणप्रति भक्तिभाव देखाइरहेका शिलाको गरुडमूर्ति छ । विकटेश्वर महादेवको दक्षिण अर्थात् अरनिको राजमार्गबाट पनि दक्षिणतर्फ दीपखोलामाथि १२ वटा नागहरूको टाउको आकारको एउटा चट्टान छ । यसलाई मानिसहरूले अनन्त नागराज भनी पूजा गर्ने गरेका छन् । यसलाई कसैकसैले शेषनाग पनि भन्ने गर्छन् । स्थानीय मानिसहरूको भनाइअनुसार वि० सं० २०२२ सालमा अरनिको राजमार्ग निर्माण भइरहँदा यस पाखाको ढुङ्गो फुटाइएको थियो र त्यसबाट एउटा नाग बाहिर निस्किएको थियो । त्यसलाई गरुडले लगेको थियो भन्नेहरू पनि नभएका होइनन् ।

विकटेश्वर महादेवको पूर्वतर्फ अरनिको राजमार्गको उत्तरपट्टि (साँगा गा० वि० स० वडा नं० १ मा) चक्रज्योति स्कुलको दायाँ पूर्वाभिमुख गणेश र भीमसेनदेवताहरू छन् । बाटोको छेउमा एउटा पाटी भएको हुँदा पहिले-पहिले भैँसीको व्यापार गर्ने व्यापारीहरू यस पाटीको खम्बा (थाम) मा भैँसीहरू बाँधेर त्यहीँ बास बस्ने गर्दथे । यसरी सधैँ-सधैँ भैँसी बाँधेर राख्ने गरिएको हुनाले यस पाटीको नाम नै भैँसेपाटी हुन गयो । अनि यस ठाउँको नाम पनि भैँसेपाटी नै रहन गयो । पाटीनजिकै भीमसेनदेवता छन् । पहिलेका मानिसहरूले भीमसेनको नाममा बनाएको यस पाटीको नाम नै भीमसेनपाटी हो । नेवारहरू यस ठाउँलाई 'जरँता' भन्ने गर्दछन् । ता: (उकालो) सँगै यहाँ एउटा ठूलो 'जरँ' (जलद्रोणी) भएकाले यस ठाउँलाई 'जरँता' भनिएको हो ।

विकटेश्वर महादेवबाट पश्चिम अर्थात् साँगाबस्तीबाट पूर्व साँगाकी आराध्यदेवी नासिका भगवती छन् । यो एक अत्यन्तै महत्त्वपूर्ण पीठ हो । धेरैजसो देश (सहर) को पूर्वतिर त्यहाँकी आराध्यदेवी हुने गर्दछन्, जस्तै : भक्तपुर, पाटन र पनौतीबाट पूर्व ब्रह्मायणी, काष्ठमण्डपबाट पूर्व गुह्येश्वरी अनि बनेपाबाट पूर्व चण्डेश्वरी । यसरी देश (सहर) का मुख्य देवीहरू पूर्वतर्फ अविस्थत हुने गर्दछन् । साँगाकी आराध्यदेवी नासिका भगवती पनि यो देश (सहर अर्थात् साँगा) बाटं पूर्वतर्फ नै रहेकी छन् । तीनतले प्यागोडा शैलीको यो मन्दिर दक्षिणाभिमुख छ । यस मन्दिरको दक्षिण र पूर्वमा भजन गर्ने पाटीहरू छन् । भक्तहरू प्रत्येक शनिबार बिहान यहाँ भजन-कीर्तन गर्ने गर्दछन् । बिस्काजात्रा र दसैँमा यहाँ भक्तजनको ठूलो भीड हुन्छ ।

'देवमाला वंशावली' का अनुसार गुणकामदेव (प्रथम) ले महालक्ष्मीको निर्देशनअनुसार उपत्यकामा तीनवटा ठूला-ठूला सहरहरू (काठमाडौं, भादगाउँ र पाटन) बनाई महालक्ष्मी, महाकाली र महासरस्वती





**(साँगाकी देवी नासिकाभगवतीको मन्दिर)**

नामका तीनवटी देवीहरूलाई तीनै सहरका इष्टदेवीका रूपमा स्थापना गरी प्रत्येक सहरका आठ दिशामा अष्टमातृकालाई रक्षाका लागि थप स्थापना गरेर तीन सहरमा तीन मातृकाहरूका अलग-अलग नृत्य चलाएका हुन् र ती अझै प्रचलित छन् ।[३] त्यसरी नै चण्डेश्वरीको निर्देशनअनुसार राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ (वि० सं० ११५३) मा काभ्रे जिल्लामा सातवटा गाउँहरू (साँगा, नाला, बनेपा, धुलिखेल, श्रीखण्डपुर, चौकोट र पनौती) निर्माण गरिसकेपछि तीन सहर बनेपा, पनौती र साँगामा पनि देवीनृत्य (मुकुन्डो लाएर नाच्ने देवीनृत्य) देवीको आख्यान झल्कने गरी प्रत्येक वर्ष नचाइने गरिन्थ्यो । मुकुन्डो लगाएर नाच्ने चण्डेश्वरीको कुमारीनृत्य लोप भइसकेको ११२-१३ वर्ष भइसक्यो । पनौतीको ब्रह्मायणीको नृत्य (देवीनृत्य) हराइसके पनि त्यहाँका मानिसहरूको प्रयासले फेरि जीवित गराई प्रत्येक वर्ष नचाउने गरेको ३-४ वर्ष भइसकेको छ । साँगाकी आराध्यदेवीको आख्यान झल्कने यहाँको गणनृत्यमा अष्टमातृका, भैरव, गणेश, कुमारी, महादेव, नन्दी, भृङ्गी, ब्याक, कङ्काल, भूत, चार बेतालहरू आदि धेरै देवदेवीहरू सम्मिलित भएको देखिन्थ्यो र यस देवीनृत्यमा नेवार संस्कृति धेरै राम्ररी प्रतिबिम्बित भई दर्शकहरूलाई यी देवीको आख्यान बोध गराउँथ्यो । श्रेष्ठ खलकले खिँ (ठूलो मादल) बजाउने, कसाईहरूले पोँगा (तुरही) बजाउने, दो (डोम ?)

---

३ अष्टमातृका मुकुन्डोनृत्य-नाटक : एक जीवन्त सांस्कृतिक परम्परा, तुलसी दिवस, मधुपर्क, वर्ष २५ अङ्क १२, वैशाख २०५०

ले ढोलक बजाउने गरी विविध जातका विविध खलकहरूले मुकुन्डो लगाई, बाजा बजाई, पौंगा र मुहाली आदि बजाई नाच्ने यो देवीनृत्य अति नै अर्थपूर्ण एवं रहस्यपूर्ण भए पनि यो नाच हटेर गइसकेको छ, तापनि यहाँका मान्यजनहरूले त्यसप्रति वास्ता राखेको देखिँदैन । अहिलेसम्म पनि यस देवीनाचका सामानहरू सुरक्षित राखिएकाले यसलाई सम्बन्धित निकाय र साँगाका भद्रभलादमीहरूले जीवन्तता दिइराख्नु अत्यन्त आवश्यक देखिन्छ । तर आजकाल यस्तो संस्कृतिका विषयमा मानिसहरूको ध्यान नजानाले नेपालको महत्त्वपूर्ण संस्कृति धमाधम लोप भइरहेको छ ।

साँगाको यो गणनृत्यमा खिँ (ठूलो मादल) र ढोलकको तालमा पौंगा (तुरही) र मुहालीको धुनमा नासिका भगवतीले गरेको हुङ्कार एवं अति नै नाटकीय ढङ्गले मयुरासुरलाई देवीले बध गर्ने दृश्य अत्यन्तै रोमाञ्चक र सनसनीपूर्ण छ । अनि मयुरासुरलाई बध गरिसकेपछि अकस्मात त्यहाँ धरतीमाताको प्राकट्य हुँदा नाटक हेरिरहने सबै दर्शकहरू उत्साहित भई उनीहरूलाई एक अर्कै अलौकिक संसारमा पुगेको जस्तो भान हुन्छ । तर दुःखको कुरो, यस्तो महत्त्वपूर्ण देवीनाच साँगामा अब बाँकी भएन । यस्तो किसिमको नाच सिकाउने रामलाल जोशी र रामनरसिंह जोशी ७०-८० वर्षपहिले नै बितिसक्नुभएको थियो । अहिले भइरहेका आदरणीय २-३ जना बूढाहरूबाट यहाँका मानिसहरूले त्यो नाच सिकेर यो देवीनृत्यलाई पुनर्जीवित गर्नु अति नै राम्रो हुनेछ । नत्रभने हामीलाई पछिसम्म खालि सम्झना मात्र बाँकी रहनेछ । साँगामा यो गणनृत्य चलाइएको बेलामा बनेपा, पनौती, भक्तपुर आदिका आफ्ना साथीहरू र नातेदारहरूलाई निम्तो गरी नाटक देखाएर सम्मानसाथ भोज खुवाई अतिथिसत्कार गर्ने चलन पनि थियो ।

साँगाबाट दक्षिणतिर केही तल नैचल नदीकिनारमा दक्षिणाभिमुख आशापुरी महादेव छन् । यो स्थान साँगा गा० वि० स० वडा नं० ९ मा पर्छ । यी देवताको महिमा 'नेपाल महात्म्य' मा वर्णन गरिएको छ । भक्तजनले एउटै मात्र आशा राखेर यी देवतालाई पुकार गरे उसको आशा पूरा हुन्छ भन्ने जनधारणा छ । मन्दिरभित्र महादेवलाई तामाको नागले बेरेर राखेको छ । मन्दिरसँगै तीनवटा साँढे, एउटा हनुमान र भैरव पनि छन् । नैचल नदीपारि पञ्चबुद्धसहितको एउटा चैत्य पनि स्थापना गरिएको छ ।

भक्तपुरबाट साँगातिर आइरहँदा साँगाको उकालो चढ्दै आई साँगा पुग्नै लागेको बेलामा राजमार्गबाट उत्तरतर्फ तलको खोल्साभन्दा माथि



पागोडा शैलीको गणेशमन्दिर छ । यहाँ ठूलो प्राकृतिक शिला नै गणेशको आकारमा छ । यी गणेशलाई कसैकसैले सिद्धिविनायक भन्दछन् त कसैकसैले आदिनाथ गणेश भनी पुकारा गर्दछन् । काठमाडौं उपत्यका नागदहका रूपमा छँदा त्यस दहको पानी यहाँसम्म आउँथ्यो भन्ने यहाँ प्रचलित जनश्रुति छ । दुईतले यो मन्दिर पूर्वाभिमुख छ । यसका अगाडि शिवलिङ्ग अनि बायाँतिर भजन गर्नका लागि एउटा पाटी पनि छ । यसै पाटीमा बसी प्रत्येक मङ्गलबार साँगाको लालमोहरिया भजन खलकले भजन गर्ने गर्दछन् । यो देवलको पुरानो अति कलापूर्ण तोरण धेरै वर्षपहिले नै चोरी भइसकेको छ । बिस्केटजात्रा र दसैंमा यहाँ श्रद्धालु भक्तजनको भीड लाग्दछ । रुन्चे रोग लाग्ने बच्चाबच्चीहरूलाई यहाँ ल्याई मुख धोएर देवताको दर्शन गर्न लगाए त्यो रोग निको हुन्छ भन्ने यहाँका मानिसहरूको विश्वास छ । यी देवताको दायाँतिरको एउटा ठूलो ढुङ्गालाई वासुकी नागराज भनी पूजा गर्ने गरिएको छ । त्यस्तै बायाँतिरको ठूलो अर्को ढुङ्गालाई हरिहर भनी पूजा गर्ने गर्दछन् ।

साँगाको उकालो चढिसकेपछि अरनिको राजमार्गबाट उत्तरतिर सडकको छेउमै साँगाकी तलेजु भवानी छन् । अहिले यी देवी तलेजुको मन्दिर छैन । एकतले साधारण घरलाई आजकाल यहाँका मानिसहरू तलेजु भन्ने गर्दछन् । यस ठाउँलाई साँगाको लायकू पनि भन्ने गर्दछन् । तलेजुभित्र नारायण, महादेव, कुमारी र भैरव आदि देवीदेवताहरू छन् । तलेजुका रूपमा यहाँ एक खड्ग पनि छ । तर तलेजुभित्र कसैलाई पनि भित्र्याउने गरिएको छैन । यसै ठाउँमा पूर्वाभिमुख गरी राम्ररी बनाइएका तीन गजुर भएका देगलभन्दा तल भीमसेन छन् । साह्रै नै राम्रो कलापूर्ण तोरणभित्र प्रतिष्ठापन गरी राखिएका यी भीमसेन देवताको विशेष महत्त्व छ । यी देवताको शिरमाथिबाट तलसम्म चारैतर्फ तोरण ओढाइएको छ र यी देवता कलात्मक आसनमा उभिइरहेका छन् । भीमसेनको तोरणमा दायाँ र बायाँ तलदेखि माथिसम्म भीमसेन, पूर्णकलश, हितिमुग, अनि देवताको शिरमाथि छेपुँ (मकर अर्थात् एक किसिमको डरलाग्दो जलजन्तु) ले आफ्ना दुवै हातले दुई नागहरूलाई दाँतले टोकिरहेको अर्थपूर्ण यो कलाकृति अति नै आकर्षक छ । काठमाडौं दहका रूपमा छँदा भीमसेन ढुङ्गामा बसेर यहाँ जलक्रीडा गरिरहन्थे र उता भीमढुङ्गा र यता साँगा ढुङ्गा बिसाउने ठाउँ थियो भन्ने किंवदन्ती छ ।[४] यही सम्झनालाई जीवित

---

४ साँगाको सांस्कृतिक सम्पदा : प्रकाश दर्नाल, अभिलेख, वर्ष १२, २०५०, प्रकाशक : पुरातत्त्व विभाग, राष्ट्रिय अभिलेखालय

पारिराख्नका लागि पलाञ्चोक भगवती बनाउने कलाकारले यहाँ आई यो राम्रो भीमसेनको कलाकृति बनाइसकेपछि उसको दायाँ हात काटिदिएका थिए भन्ने साँगाका मानिसहरू किंवदन्ती सुनाउने गर्दछन् ।



(साँगाका भीमसेन देवता)

भीमसेन देवताका अगाडि एउटा खुला चोकजस्तै ठाउँ छ । त्यहाँ एउटा घरको किलास (बाहिरी गारो) मा पश्चिमतिर फर्काएर बद्रीनाथ, जगन्नाथ र केदारनाथलाई राखिएको छ । यस ठाउँको देब्रेतिर एउटा चैत्यको बायाँपट्टि पश्चिमाभिमुख गरी अति नै कलापूर्ण सङ्कष्टनारायणको स्थापना गरिएको छ । नारायणका दायाँ-बायाँ सातवटा नागहरूबाट ओढाइएका गणेशहरू छन् । नागहरूबाट छत्रका रूपमा ओढाइएका यी गणेशहरूलाई बलि दिनु हुँदैन । यी नारायणको दायाँतिर अर्को एउटा गणेश छन् र यी गणेशसँगै अति नै राम्रो दक्षिणाभिमुख भएका अर्का एउटा नारायण छन् । यी देवताका अगाडि उत्तरतिर फर्किएका उमा-महेश्वर छन् ।

यसरी हेर्दा साँगामा कलापूर्ण मूर्त-अमूर्त धेरै नै देवीदेवताहरू छन् । गणेशका मूर्तिहरू त यताउता छ्यासछ्यास्ती नै छरिइरहेका छन् । राम्रा-राम्रा कतिपय मूर्तिहरू त चोरहरूले चोरेर पनि लगिसकेका छन् । साँगाको मुदेटोलमा २६ इन्च उचाइका, पन्ध्रौं शताब्दीका, चार बाहु भएका, माथिका दायाँ र बायाँ हातहरूले जपमाला र बन्चरो समाइरहेका, तलको बायाँ हातले लड्डु भएको भाँडो समाइरहेका, तलको दायाँ हातले मुला अथवा टुक्रो भइसकेको आफ्नै दाँत समाइराखेका, अनि आफ्ना पिता महादेवका जस्तै निधारमा तीन आँखा भएका, श्रीपेच लगाइराखेका



नृत्यगणेशलाई सन् १९८५ मा चोरेर लगिसकेका छन् ।[५] राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा आठ दिशामा आठ गणेशलाई दिक्पालका रूपमा स्थापना गरिराखेकाले बनेपालाई विनयापुरी भनिएजस्तै यस साँगामा पनि यत्रतत्र धेरै गणेशका मूर्तिहरू भएकाले यहाँका बूढाबूढीहरू यस ठाउँलाई गणेशपुर पनि भन्ने गर्दछन् । बनेपामा जनैपूर्णिमापछिको गणेशचतुर्थीका दिनमा विविध बाद्यवादनसहित केटाकेटीहरू र युवायुवतीहरू देशपरिक्रमा गरी बनेपाका गणेशहरूलाई आदरभक्तिसाथ लड्डु, स्वारी, मालपुवा, बिस्कुट, चकलेट, सेल आदि विविध वस्तुहरू चढाई गणेशको पूजा गर्ने गर्दछन् । साँगामा पनि जनैपूर्णिमापछिको मङ्गलबारका दिन यस्तै ढङ्गले गणेशको पूजा गर्ने गरिन्छ । तर मङ्गलबारका दिन गाईजात्रा पर्न गए अर्को मङ्गलबारका दिन त्यस्तै ढङ्गले गणेशको पूजा गर्ने गर्दछन् ।

साँगा गा० वि० स० वडा नं० ३ स्थित दथुटोलमा सडकछेउ पश्चिमतर्फ उभिइरहेका नारायणको अति नै कलापूर्ण मूर्ति छ । पुष्पासनमा उभिइरहेका नारायण लक्ष्मीनारायण अर्द्धनारीश्वरलाई सिमेन्टबाट सानो मन्दिरजस्तो बनाएर खुला ठाउँमा रहेका यी लक्ष्मीनारायणका दायाँतिर नारायणका साना-साना छवटा प्रतिमाहरू राखिएका छन् । बायाँतिर पनि त्यस्तै गरी नारायणका साना-साना छवटै प्रतिमाहरू राखिएका छन् । अति नै कलात्मक र आकर्षक ढङ्गले कुँदिएका यी प्रतिमाहरूको बीचमा रहेका यी देवतालाई माथिदेखि तलसम्म ती साना-साना नारायणका घुमुवा हेर्दा त्यो यी देवताको तोरणजस्तै देखिएको छ । प्रभामण्डलको रूपजस्तै देखाइएको यस कलाकृतिले लक्ष्मीनारायणको आकृति झनै राम्रो देखिएर यसको अर्थ धेरै नै गहन देखिन आएको जस्तो छ । शिरमाथिको शिवलिङ्ग सृष्टिको प्रतीकलाई यहाँका बूढापाकाहरू परम ब्रह्मा भनी मान्ने गर्दछन् । यस मूर्तिको दुवै छेउतिर पाउतल दुई गरुडले घुँडा टेकी अञ्जली मुद्राले भक्ति गरिरहेका छन् (दर्नाल, वि० सं० २५१ : ८७) । आठ बाहु भएका यी अर्द्धनारीश्वरको दायाँ हातले माथिदेखि क्रमशः चक्र, शङ्ख, गदा र पद्म समाइरहेका छन् भने अर्द्धलिङ्गका रूपमा लक्ष्मीले पुस्तक, पद्म, ज्वालान्हायके (एक किसिमको विधिमा प्रयोग गर्ने ऐना) र पूर्णकलश समाइरहेकी छन् । लक्ष्मीनारायणको मूर्तिलाई दायाँ र बायाँबाट उभ्याएर कुँदिएका साना-साना १२ नारायणका मूर्तिहरू घुमाउरो गरी राखिएका छन् । यसबाट १२ महिनाका अधिपतिस्वरूप भई

५ Stolen Images of Nepal, Lain S. Bangdel : The Royal Nepal Academy, Kathmandu, Nepal, 1989

विश्वब्रह्माण्डको स्थिति सञ्चालन गरिरहेको आभास प्रतीत हुन्छ । सृष्टिको प्रतीकका रूपमा लिन सकिने लक्ष्मीनारायणको शिरमाथि पनौतीको प्रसिद्ध सूर्यमूर्तिको जस्तै गरी राखिएको शिवलिङ्ग भिन्न-भिन्न सम्प्रदायका बीचको समन्वयात्मक एवं एकात्मक भाव या प्रतीकजस्तै देखिन्छ ।[६]



(साँगाका द्वादशी नारायण)

साँगामा छ्यासछ्यास्ती गणेशका मूर्तिहरू भएजस्तै चार र आठ बाहु भएका राम्रा-राम्रा र कलापूर्ण नारायणका मूर्तिहरू पनि धेरै नै छन् । नारायणका कति-कति कलापूर्ण मूर्तिहरू र अन्य पुरातात्त्विक कलाकृतिहरू चोरी भइसकेका छन् । साँगाबस्तीको माथिपट्टि गणेशको पाटीबाट पूर्वतिर फर्किराखेको भीमसेनको कलापूर्ण मूर्ति छ । क्रोधरूपको भीमसेनको यो मूर्ति पनि धृतराष्ट्रका एक सय छोराहरूमध्ये दुर्योधनका भाइ दुशासनलाई पल्टाएर हुङ्कारसाथ बध गर्न तयार भइराखेको अवस्थामा छ । यसरी यस कलाकृतिमा महाभारतको कथाको एक आकर्षक दृश्य प्रस्तुत गरी देखाइएको छ । यहाँबाट अलि पर नाट्येश्वर छन् । नाट्येश्वरगणका बीचमा एउटा प्वाल बनाइएको छ । यो प्वाल नै मुख्य नाट्येश्वर हुन् । नाटक सिकाउँदा काठमाडौँ, ललितपुर र भक्तपुरबाट कलाकारहरू यहाँ आई यी देवतालाई पूजा गर्ने गर्दछन् ।

---

६ काभ्रेपलाञ्चोकका केही देवीदेवताहरू : जीतबहादुर मानन्धर, २०५३ साल साउन १, मङ्गलबार





(भीमसेनबाट दु:शासनको बध गरिँदै)

साँगाका कलाकृतियुक्त देवीदेवताहरू भएको यस साँगामा देवालय बनाएर सुरक्षित ढङ्गले मूर्तिहरू राखिएका छैनन् । कुनै-कुनै मन्दिरहरू सिमेन्टले बनाएका छन् । तिनलाई पनि मिलाएर बनाइएको देखिँदैन । केवल घामपानी छल्ने किसिमले सुरक्षा गर्ने हेतुमा मात्रै बनाइएको जस्तो देखिन्छ । नेवार संस्कृतिअनुरूप मन्दिर बनाइएको नासिका भगवतीको मन्दिर छ र अमूर्त प्राकृतिक शिला सिद्धिविनायकको अर्को दुईतले प्यागोडा शैलीको मन्दिर पनि छ । देव या देवीअनुसारका मन्दिरहरू बनाइएको अरू यहाँ पाइँदैन । तिनको संरक्षणका लागि साँगाका मानिसहरूको र सम्बन्धित निकायको ध्यान जानु जरुरी देखिन्छ । साँगाको मुदेटोलमा पूर्वाभिमुख देवी हरिसिद्धि पनि खुला ठाउँमा छन् । साँगालाई हरिसिद्धिको माइती भन्दछन् । पहिले-पहिले हरिसिद्धिको मुकुन्डोनाच प्रत्येक १२ वर्षमा यहाँ नचाउन ल्याइन्थ्यो । यो नाच यहाँ चार दिनसम्म नचाउँथे । तर धेरै वर्षपहिलेदेखि यो हरिसिद्धिको नाच पनि यहाँ ल्याइएको छैन । तर भक्तपुरको नवदुर्गानाच भने प्रत्येक वर्ष यहाँ अहिलेसम्म ल्याउने गर्दछन् ।

साँगाका मानिसहरूको मुख्य (नखा) जात्रा नै विस्का हो । विस्काजात्रा काभ्रे जिल्लामा नेवारहरूको बस्ती भएका ठाउँहरू श्रीखण्डपुर, चौकोट, धुलिखेल र साँगामा मनाइन्छ । हुन त पहिले बनेपामा पनि विस्काजात्रा हुने गरेको थियो । कहँ, पौंगा, मुहाली, नायखिँ, धिमे, भुछ्या आदि विविध बाजा बजाई बनेपाको थारूद्वीपमा लिङ्गो उभ्याउने गरिन्थ्यो । तर यो पर्व बनेपामा धेरै वर्षपहिलेदेखि हराइसकेको

छ । साँगामा बिस्काजात्रा वैशाख सङ्क्रान्ति आउनुभन्दा आठ दिनअगावैदेखि सुरु हुन्छ । त्यो दिन कर्माचार्यले तान्त्रिक विधिले पूजा गरिसकेपछि भैरव, कुमारी र गणेशलाई तल ल्याउने गर्दछन् । चैत मसान्तको साँझपख मुदेटोलको एउटा चौरमा विविध बाद्यवादनका साथ लिङ्गो उभ्याउने गर्दछन् । यो लिङ्गो वैशाख ४ गते ढाल्दछन् ।

वैशाख १ गते गणेश, भैरव र कुमारीको रथजात्रा हुन्छ । विविध बाद्यवादनसहित हुने यस जात्रामा भैरव र कुमारीका रथहरू जुधाइन्छन् । यसरी यहाँ ४ गतेसम्म विस्काजात्रा हुन्छ । चैत्र कृष्णपक्ष पूर्णिमाका दिन साँगाका मानिसहरू छिन्नमस्तक नारायण र विकटेश्वर महादेवको रथजात्रा गरी साँगा सहर परिक्रमा गराएर जात्रा मनाउँछन् । साथै, विजयादशमीका दिन यहाँ सिद्धिविनायकको पनि जात्रा हुने गर्दछ ।





# नालाभगवती : सङ्क्षिप्त चर्चा

काठमाडौँबाट करिब २५ कि० मि० पूर्व र बनेपाबाट ३ कि० मि० उत्तर-पश्चिममा रहेको अनि पुण्यमाता .खोला र नण्यमाता खोलाका बीचमा समुद्री सतहबाट १,४०० मिटर उचाइमा अवस्थित नाला हाल उग्रचण्डी गा० वि० स० मा परे पनि यो एक ऐतिहासिक सहर हो । काभ्रेको बनेपालगायत सात सहरहरू राजा आनन्ददेवले वि० सं० ११५३ मा निर्माण गर्दा नाला पनि परेको कुरा वंशावलीमा उल्लेख छ ।[1] बनेपामा १००० र पनौतीमा ७०० घरहरू भएजस्तै सहर निर्माण गर्दा नालामा ५०० घरहरू थिए भन्ने जनश्रुति पनि छ ।

नाला एक ऐतिहासिक स्थल मात्र नभई यो एक पवित्र स्थल पनि हो । किनभने काठमाडौँ उपत्यका ठूलो तलाउका रूपमा छँदा मञ्जुश्री बोधिसत्व महाचीनबाट आएको बेलामा पक्कै पनि यहींको बाटोबाट आउनुभएको हुनुपर्दछ । नालामाथिको पश्चिम र उत्तरमा ल्हासापाको छ । नालाको उत्तरपट्टि नेपालको एक पवित्र तीर्थस्थल महादेवपोखरी छ । यो नालाबाट करिब ३ कि० मि० जतिको दूरीमा छ । नागदहजस्तो ठूलो तीर्थस्थललाई परिक्रमा गर्दा अवश्यमेव मञ्जुश्री बोधिसत्वले दाहिनेतिरबाट परिक्रमा गरेको हुनुपर्थ्यो । यसरी दाहिने पारेर नागदहलाई परिक्रमा गर्न आउँदा उहाँ नालाको बाटो गरी आउनुभएको निश्चित छ । नालाको अर्को महत्त्वपूर्ण पक्ष के हो भने भगवान् गौतम बुद्धले यहाँकै सृष्टिकान्ता लोकेश्वर (करुणामय) स्थलमा वर्षावास बस्नुभएको कुरा 'स्वयम्भू महाचैत्य' मा उल्लेख छ ।[2] नेपालका चार करुणामयमध्ये नाला करुणामय (सृष्टिकान्ता करुणामय) पनि एक हुन् । फेरि नेपालका चार भगवतीहरूमध्ये नालाभगवती पनि एक हुन् । यसरी बौद्ध र हिन्दूधर्मको दृष्टिकोणले यो सहर अत्यन्तै महत्त्वपूर्ण छ ।

---

१ Daniel Wright : Nepal - History of the Country and the People, Cosmo Publication 1983 A. D., New Delhi

२ हेमराज शाक्य : स्वयम्भू महाचैत्य

तन्त्रशास्त्रमा नालामा मानिसहरू नामुद थिए भनी बूढापाकाहरू भन्दछन् । सुनन्द कर्माचार्य र ज्ञानसिंह आचाजू (कर्माचार्य) यहाँका ख्यातिप्राप्त तान्त्रिकहरू थिए भन्ने किंवदन्ती नालामा प्रचलित छ । नवदुर्गासम्बन्धी धेरै किंवदन्तीहरू यहाँका तान्त्रिकहरूसँग सम्बद्ध छन् । त्यस्ता किंवदन्तीहरू यहाँका मान्छेहरू अहिले पनि भन्ने गर्दछन् । हुन पनि तन्त्रसम्बन्धी थ्यासफूहरू (हस्तलिखित पुराना-पुराना पुस्तकहरू) भारीका भारी नै 'जर्मन परियोजना' अन्तर्गत अनुसन्धानका क्रममा बनेपामा ल्याएर तिनीहरूको माइक्रोफिल्म लिएको दृश्य मैले आफ्नै आँखाले देखेको थिएँ । अहिले पनि त्यस्ता तान्त्रिक पुस्तकहरू, जसमा मसिना रङ्गीन चित्रहरू पनि हुन्छन्, नालामा नभएका होइनन् । ती पुस्तकहरू बहुमूल्य छन् ।



**(नालाभगवतीको मन्दिरनजिकको ढुङ्गेधारो)**

नालाको लगनटोलमा भगवतीको मन्दिरअगाडि तलतिर ढुङ्गेधाराको दायाँपट्टि पर्खालमा टाँसिएको सानो जलद्रोणी ढुङ्गामा ॐ सम्वत् ११८ को लिच्छविराजा शिवदेवको पालामा नालङ्ग (नाला) ग्राममा बस्ने ध्रुवशील र उनका भाइ अनङ्गशील मिली धारो बनाएको कुरा उल्लेख छ ।[३]

---

३ धनवज्र वज्राचार्य : लिच्छविकालका अभिलेख, प्रकाशक : नेपाल तथा एसियाली अध्ययन संस्थान, त्रिभुवन विश्वविद्यालय, कीर्तिपुर, २०३० आषाढ



नालामा यस्तै अरू ढुङ्गेधाराहरू बनाएर जनताहरूलाई पिउने पानीको सुविधा उपलब्ध गराइएको छ । नालामा रहेको लिच्छविकालको उक्त अभिलेखमा 'उपरिम नालङ्ग ग्राम' उत्कीर्ण गरिएको छ । 'नालङ्ग' शब्दले किराँतकालीन बस्तीलाई बोध गराउँछ । 'नालङ्ग' बाट 'नाला' हुन आएको हो । पछि मध्यकालमा यसलाई 'देश' को सङ्ज्ञा दिइएको थियो । पवित्र तीर्थस्थल महादेवपोखरीबाट ओर्लेपछि नालासहर पुगिने हुँदा र अझ नालदुङ (नाल्दुम) भेगमा जाँदा पनि नालाबाटै जानुपर्ने हुँदा यस ठाउँको महत्त्व अरू बढेको छ ।



**(नालाभगवतीको मन्दिर)**

नेपालका विविध जिल्लाहरूमा अनेकौं सहरहरू छन् । ती सहरहरूमा आ-आफ्नै आराध्य देव वा देवी हुन्छन् । नालासहरको लगनटोलको अलि उचाइको एउटा फराकिलो प्राङ्गणमा पूर्वतिर तहाफले (पाटी), गणेशपाटी, पश्चिमपट्टि सोहखुट्टेपाटीका साथै नारायण, उमा-महेश्वर, गणेश आदि विविध देवीदेवताहरू भएको एउटा ठूलो प्राङ्गणका बीचमा नालाभगवतीको चारतले मन्दिर छ । मन्दिरअगाडि वि० सं० १९०८ मा शिलास्तम्भ खडा गरी त्यसमाथि ब्वसिंह अर्थात् पखेटायुक्त सिंहको स्थापना गरिएको छ । त्यस्तै वि० सं० १९९४ मा शिलास्तम्भमाथि मयुर राखिएको छ । मूल ढोकासँगै ढलौटनिर्मित सिंह र सिंहिनी छन् भने त्यसको अलि अगाडि ढुङ्गाका धेरै ठूला सिंह र सिंहिनी छन् । यी सिंह-सिंहिनी आ-आफ्ना ठूला आसनसहित एउटै ढुङ्गाका छन् ।

भगवतीमन्दिरको प्रवेशद्वारमाथि तीनवटा तोरणहरू लहरै राखिएका छन् । ती तीनमध्ये ठीक प्रवेशद्वारमाथिको अर्थात् बीचको तोरणको बीचैमा राखिएकी मूल देवी र साथमा रहेका अन्य देवीदेवताका मूर्तिहरू चोरी भइसकेका छन् । दुईतिरका विविध देवीदेवताहरू भएका तोरणहरू भने यथास्थानमा अद्यापि छन् । मन्दिरको प्रवेशद्वारमाथि यसरी तीनवटा तोरणहरू भएका मन्दिरहरू त्यति धेरै छैनन् । पहिलो प्रवेशद्वारमाथि प्रवेश भइसकेपछि दोस्रो प्रवेशद्वारमाथि पनि तोरण छ । त्यसपछि प्रस्तरको आसनमा उभिएकी दक्षिणाभिमुख अति कलापूर्ण नालाभगवतीको दुवैतिर उठाइराखिएका दुई शिलास्तम्भ देवीको शिरमाथि रहेको कलात्मक तोरणसँग मिलाइराखिएको छ । त्यसमाथि पनि अर्को एउटा तोरण छ । भनिन्छ तोरण मन्दिरको ऐना हो, जसमा सम्बन्धित देवी या देवताका बारेमा ज्ञानका गहन कुराहरू झल्काइएका हुन्छन् । अठाह्रवटा बाहु भएकी देवी भगवतीका विविध हातले विविध शस्त्रास्त्र समाएका छन् । तर बायाँपट्टिका दुई हात भने भाँचिएका छन् । देवी भगवतीका अगाडि एउटा मुपात्र छ । पात्रसँगै दायाँ-बायाँ धातुनिर्मित दुईवटा स-साना सिंह-सिंहिनी छन् । माथि पित्तलको चँदुवा छ ।



**(मन्दिरभित्रकी नालाभगवती)**

पलाञ्चोक भगवती बनाइसकेपछि तिनै कलाकार यहाँ आई नालाभगवतीको सुन्दर मूर्ति बनाइदिएका हुन् भन्ने जनश्रुति छ । नालाको दाफा भजनको एउटा हस्तलिखित जीर्ण पुरानो भजन-पुस्तकमा



भगवतीसम्बन्धी नेवारी भाषाको एउटा भजनगीत छ । उक्त भजनगीतमा यी देवीको यसरी वर्णन गरिएको छ –

आफ्ना अठाह्र हातले विविध शस्त्र धारण गरेकी, शुम्भ-निशुम्भ र रक्तबीज आदि दैत्यलाई नाश गरेकी, आफ्नो दायाँतिर सिद्धि गणपति र पाञ्चायन राखी दायाँतिर नाथेश्वर, कुमार र महाकालभैरवका साथै दायाँपट्टि हनुमान, भैरव र बायाँपट्टि शारदादेवी अनि ढोकाबाहिर सिंह र सिंहिनी राखेर विराजमान भएकी, साथमा ब्रह्मायणी, महाकाली र नारायणी आदि विविध देवीदेवताको बासस्थान मणिमायापर्वतनजिकको अत्यन्तै पवित्र तीर्थस्थल महादेवपोखरीको तल दक्षिणाभिमुख नालादेशमा विराजमान भएकी देवी उग्रचण्डी भगवती हुन् ।

नालाभगवतीका दायाँतिर अहिले पनि गणेश, महाकाली, विष्णु, गङ्गा, सङ्कटा, बगलामुखी, हनुमान र बायाँतिर कुमार, सूर्यनारायण, नाथेश्वर, सरस्वती, लक्ष्मी आदि देवीदेवताहरू छन् । ज्ञानीदासले रचेको उक्त गीतिभजनमा यी देवीलाई उग्रचण्डी भगवती भनी लेखिएको छ । हुन पनि नेपालुका चार प्रसिद्ध भगवतीहरूमा नालाभगवती पनि एक हुन् । 'नालाभगवती महाउग्रचण्डी हुन् । महाकाली, महालक्ष्मी र महासरस्वतीको समष्टि रूपलाई महाउग्रचण्डी भनिन्छ । महाकाली, महालक्ष्मी र महासरस्वती सृष्टि, स्थिति र प्रलयका शक्ति हुन् ।[४]

नालाभगवतीको मन्दिर चार तलाको छ । भक्तपुरका राजा जगत्प्रकाश मल्लका समयमा धनदसिंह मुख्यमन्त्री हुँदा भक्तपुरको तुपलाछेटोलका विश्व र अन्य व्यक्तिहरूका साथै नालाका मानिसहरू मिली यी देवीको मन्दिर निर्माण गरेका हुन् भन्ने कुरा त्यस मन्दिरमा टाँसिएको ताम्रपत्रले देखाउँछ । तर लिच्छविकालभन्दा धेरै पहिलेदेखि नै मानिसहरूको भावभक्ति देवीदेवताहरूप्रति धेरै उच्च थियो । त्यसैले लिच्छविकालमा प्रतिष्ठापित नालाभगवतीको मन्दिर ने० सं० ७६७ मा पूर्वमध्यकालमै बनिसकेको र पछि यो मन्दिर नयाँ किसिमले पुनर्निर्माण गरिएको हुनुपर्दछ । राजा आनन्ददेवले वि० सं० ११५३ मा बनेपालगायत सात गाउँको निर्माण गर्दा नालासहर पनि निर्माण गरेको कुरा वंशावलीमा उल्लेख छ । त्यस बखत बनेपाकी देवी चण्डेश्वरीको मन्दिर पनि बनेको थियो भन्ने यहाँको जनश्रुति छ । त्यस्तै, नालाभगवतीको मन्दिर सम्भवतः

---

४ कल्पना श्रेष्ठ : नालाभगवती मन्दिरको वास्तुकला, बनेपा सात गाउँ (बनेपा नगरपालिकाको स्मारिका), २०५३

त्यसै बखतमा बनेको हुनुपर्दछ । किनभने त्यस बखत यहाँ निर्माणको लहर चलेको थियो । तर सो कुराको अभिलेख भने कतै पाइएको छैन ।

नेo संo ७६७ मा दुईतले यी देवीको मन्दिर बनाइएकोमा नेo संo ७७१ मा पाटनका राजा सिद्धिनरसिंह मल्लले एक तला थपी यस मन्दिरलाई तीनतले बनाइएको थियो । पछि नालाका साहु देवानन्द श्रेष्ठले फेरि अर्को तला थपेपछि यो मन्दिर चार तलाको भएको थियो । चौथो तलाको छानामा यिनै देवानन्द साहुका तीन छोराहरूले सुनको मोलम्वा लगाइदिएका थिए । निःसन्तान छोरा बाकानन्द साहुले भगवतीमन्दिरको ठीक अगाडि १५ फिटजति अग्लो शिलास्तम्भ उठाई स्तम्भमाथि धातुनिर्मित सिंह राखिदिएको कुरा उक्त स्तम्भमा लेखिएको अभिलेखले देखाउँछ । यहाँका मानिसहरूको भनाइअनुसार यस मन्दिरको अन्तिम जीर्णोद्धार विo संo १९८९ मा भएको थियो र विo संo १९९० सालको महाभूकम्पमा पनि यस मन्दिरमा कुनै क्षति भएको थिएन ।

पहिलो र दोस्रो तलामा २०-२० वटा र तेस्रो र चौथो तलामा १२-१२ वटा टुँडालहरू राखेर निर्माण गरिएको यस मन्दिरमा पहिलो तलाको मूल द्वारमाथि चारवटा टुँडालहरूमा बाहेक कतै कुनै काष्ठकलाकृतिहरू छैनन् । देवालयका चारै कुनाका टुँडालहरूमा भने पखेटा भएका सुन्दर र सजीव सिंहशार्दूलहरू छन् । भनिन्छ तिनीहरू नै अलौकिक शक्ति भएका मन्दिरका दिक्पाल हुन् । यीबाहेक यस मन्दिरमा साधारण टुँडालहरू मात्रै प्रयोग गरिएका छन् । अन्य ठाउँका मन्दिरहरूका टुँडाल, दलिन र झ्यालहरूमा पौराणिक आख्यान र वैदिक अर्थ झल्किने राम्रा-राम्रा र मसिना काष्ठकलाकृति कुँदिएका हुन्छन् । तर नालाभगवतीको मन्दिरमा त्यस्ता काष्ठकलाकृतिहरू छैनन् । मन्दिरको जीर्णोद्धार गर्दा बिग्रेका टुँडालहरू मर्मत गर्ने र अरू थप नयाँ कलाकृति बनाएर प्रयोग गर्ने झन्झट नउठाइएको हुनाले नै त्यहाँ काष्ठकलाकृतिहरू नभएको हुनुपर्छ । मूल द्वारमाथिका चार टुँडालहरूमा भने पूर्वबाट क्रमशः महालक्ष्मी, माहेश्वरी, कौमारी र चामुण्डाका आकृतिहरू छन् । तर कुनै-कुनै देवालयका भित्ताहरूमा सम्बन्धित देवीदेवताका आख्यान झल्कने गरी भित्तेचित्र (Mural) हरू हुन्छन् । नालाभगवतीको मन्दिरका पछाडिपट्टिको भित्तामा महिषासुरमर्दिनीको अर्थात् महिषासुरलाई बध गर्दै गरेको रङ्गीन चित्र छ । त्यो पनि खिइएर बिग्रिसकेको छ ।

आश्विन कृष्णपक्ष र शुक्लपक्षमा गरी दुईपटक नालाभगवतीको रथजात्रा हुन्छ । नालाको पश्चिम-दक्षिणको टुकुचा गाo विo सo मा पर्ने पाँडेगाउँको जङ्गललाई नालाभगवतीको माइती भनिन्छ । त्यसैले



भगवतीको जात्रा गर्नका लागि नालाका मानिसहरूले विधिपूर्वक भगवतीलाई लिन जानुपर्दथ्यो । त्यसका लागि नालाका किसि खलक, माक खलक, माँगा खलक र इपाछें खलकका नाइकेहरू र कर्माचार्य पुजारीहरूले विधिको पूजा गरिसकेपछि ती पुजारीहरू र अन्य व्यक्तिहरू विविध बाद्यवादनसहित देवीलाई हासा (नाङ्लो) मा राखी हासाबुँ (खेत) मा ल्याउने गर्दथे । त्यस बखत नालाबाट नालाभगवतीलाई रथारोहणका लागि त्यहाँ रथ ल्याइसकिएको हुन्थ्यो । त्यहाँ विधिवत रूपमा देवीलाई रथारोहण गराइसकेपछि त्यहाँबाट विविध बाद्यवादनसहित नालाको विद्यापतिटोलस्थित द्योंछे (देवगृह) अगाडि ल्याई रथ बिसाउँथे । त्यस बखत घरघरबाट नालाका आइमाई-केटीहरूले पूजा-सामग्रीहरू ल्याई सभक्ति पूजा-अर्चना गर्दथे । तर हिजोआज उक्त जङ्गलमा ती देवी भगवतीलाई लिन जाने चलन हराइसकेको छ ।

नालाभगवतीको मन्दिरभित्र रहेको नेo संo ७७१ को अभिलेखअनसार भक्तपुर तुपाछेटोलका प्रधानाङ्ग विश्व भारो नालादेशका प्रधान भएका बेलामा उनले उक्त द्योंछे (देवगृह) बनाइदिएका हुन् । उक्त द्योंछेमा कुस्ले, संन्यासी आदि व्यक्तिहरू राख्न पाइँदैन भनी उक्त अभिलेखमा उल्लेख गरिएको छ ।[५] जात्रा गर्न उक्त द्योंछेमा राखिएको नालाभगवतीको धातुनिर्मित प्रतिमा बाहिर चोकमा ल्याइएको हुन्छ । त्यस बखत चार खलकका नाइकेहरूमध्ये पालो पर्नेले भगवतीको मन्दिरमा पूजा लगेपछि विधिअनुसार कर्माचार्यले देवीको पूजा गर्दछन् । त्यसपछि कर्माचार्य पुजारीले मुख्य नाइकेको हातमा सिन्दुरले स्वस्तिक चिह्न लेखिदिएपछि १०८ वटा पुरानो मोहर भएको माला र १०८ वटा सयपत्री फूल भएको माला उनै नाइकेको हातमा राखिदिन्छन् । त्यसपछि विविध बाजागाजासहित ती मालाहरू लिएर विद्यापतिटोलको देवगृहमा आफ्ना दुवै पाउ चढाई घिस्रँदै गएर देवीका अगाडि पुगेपछि ती मालाहरू देवीलाई चढाएर ढोग्दछन् । त्यस बखत नाइकेहरूबाट त्यहाँ ल्याइएका पूजा-सामग्रीबाट कर्माचार्यले देवीको पूजा गरिदिन्छन् । त्यसै बखत द्वारेले कर्माचार्यहरू, चार नाइकेहरू र अन्य केही सम्बन्धित व्यक्तिहरूका दाहिने हातमा सिन्दुर राखिदिन्छन् । कर्माचार्यले स्तुति गरेर उक्त सिन्दुर देवीलाई चढाउँछन् । अनि देवीको पूजा भइसकेपछि पुजारी कर्माचार्यले नाइकेहरूलाई देवीको खड्ग र छ्वालाकथि दिन्छन् । त्यसरी विविध विधिहरू गरिसकिएपछि देवीलाई रथमा राखेर बाजागाजासहित त्यहाँबाट

---

[५] बनेपा सात गाउँ (बनेपा नगरपालिकाको स्मारिका), २०५३



(जात्रा गरिने नालाभगवती)

नालाभगवतीको मन्दिरसम्म जात्रा गरेर लैजान्छन् । त्यहाँ पुगेपछि देवीलाई एक रात मन्दिरभित्रै राख्तछन् । रातमा त्यहाँ देवीलाई विधिको पूजा गरिन्छ । अनि मध्यरातमा त्यहाँ 'द्वींचा ङायेकेगु' हुन्छ । भोलिपल्ट बिहान अर्थात् आश्विन कृष्ण चतुर्थीमा देवीको रथजात्रा गरी देवगृहमा लगिन्छ र विविध पूजाआजाका साथ ती देवीलाई देवगृहको यथास्थानमा राखिन्छ ।

दसैंमा पनि नालाभगवतीको जात्रा हुन्छ । विजयादशमीको २१ दिनअगाडि मध्यरातमा कर्माचार्यहरूको चापूजा (रातमा हुने विधिको पूजा) मा देवीलाई बोकाको बलि दिने काम त्यहाँका पोडेहरूको नाइकेले गर्दछ । विजयादशमीको मध्यरातमा नाइके पोडेले ढकी (बाँसका बोक्राहरूबाट बनाइएको टोकरी) मा राखी ल्याइएको पूजा-सामग्रीले त्यहाँ विधिअनुसार पूजा गर्दछ । त्यो पूजा नगरेसम्म त्यहाँ अरूहरूको पूजा चल्दैन । त्यस बखत नाइके पोडेको घरबाट देवी भगवतीको मूर्ति कुँदिएको पुरानो तामाको घ्याम्पो भगवतीको मन्दिरअगाडि ल्याई राखिएको हुन्छ । त्यस बखत कर्माचार्य पुजारीले त्यस घ्याम्पोकी देवीलाई पनि विधिपूर्वक पूजा गर्दछन् । त्यस बखत विधिको स्तोत्र कर्माचार्यले पढ्दछन् । अनि नाइके पोडेहरू मन्दिरभित्र गएर भगवतीको पूजा गर्दछन् । अरू बखतमा भने ती पोडेजातका मानिसहरूले त्यस मन्दिरभित्र जानु हुँदैन भन्ने भनाइ छ ।





(भगवतीको मूर्ति कुँदिएको तामाको घ्याम्पो)

पूजा सकिएपछि महिषासुरको प्रतीक मानिने 'ह्याउँ मेय्चा' (दूधे राँगो) यी पोडेहरूबाट बलि दिने काम हुन्छ । बलि दिँदा बगेको रगत र केही मासु त्यस घ्याम्पोभित्र राखिन्छ । बलिको काम सकिएपछि त्यस राँगोको मासु पोल्ने काम ती पोडेहरूले नै गरिदिन्छन् । अनि किसि खलकका नाइकेले उक्त मासुसहित सबैलाई प्रसादका रूपमा त्यहाँ समय्बजी वितरण गरिदिन्छन् । त्यसपछि मात्र भगवती देवीलाई नालाका घरघरबाट ल्याइएका पूजाहरू चल्दछन् । त्यस बखत त्यहाँ किसिं खलकका नाइकेले ती पोडेहरूलाई 'चिपँ थिके' गर्दछन् । बलि दिइएको राँगोको टाउको किसि खलकको नाइकेको पूजाकोठामा लाने गर्दछन् । भोलिपल्ट अर्थात् एकादशीका दिन दुइटा पानसमा बत्ती बालिएको पूजाकोठामा गएर ती पोडेहरूले उक्त राँगोको टाउको बाद्यवादनसहित मन्दिरमा ल्याउँछन् । त्यस टाउकोको दुवै सिङ पोडेले झिकिदिन्छ । किसि खलकका मान्छेले ती सिङहरू आफ्नो शिरमा राखी देवी भगवतीलाई हान्ने गर्दछन् । भनिन्छ सिङले देवीलाई हान्ने गर्नु मरिसकेपछि पनि महिषासुर देवीसँग लड्न आएको प्रतीक हो । एकादशीको बिहान देवीको प्रतिमा रथमा राखेर विविध बाजासहित देवीलाई विधिको पूजा गरी द्योंछेमा राख्ने गरिन्छ ।

⏮

# बनेपाको सांस्कृतिक सम्पदा

बनेपा पहिले भोलाखाबस्ती मात्र थियो । वंशावलीमा उल्लेख भएअनुसार कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले वरिपरि छरिएका स-साना बस्तीहरूलाई एकीकरण गरी भोलाखाबस्तीसँग मिलाएर नयाँ बनेपाको निर्माण गरेका थिए । त्यस बखत सुरक्षाका लागि ढुङ्गाको ठूलो पर्खालले यस सहरलाई घेरिएको थियो । आठ दिशामा आठ गणेशलाई दिक्पालका रूपमा प्रतिष्ठापन गरी निर्माण गरिएको यस बनेपामा प्रत्येक गणेशको मन्दिरसमीप एक प्रवेशद्वार, एक पाटी र एक पोखरी थिए । प्रत्येक गणेशसँग सम्बन्धित एक-एकवटा दाफा भजनहरू पनि थिए । करिब १३० वर्षअघिसम्म पनि मानिसहरू ती पोखरीहरूमा मुख धोएर अनि पाटीहरूमा बसेर बिहान-बिहान भजन-कीर्तन गरी देवीदेवतालाई आरती अर्पण गरिसकेपछि घर गएर आफ्नो काम गर्ने गर्दथे । बेलुकी पनि विविध बाजा बजाई ती मानिसहरूले त्यस्तै भजन गरेर शुद्ध मनले धर्मप्रति आस्था राखी आनन्दपूर्ण जीवन बिताउँथे । प्राचीन नगरी बनेपालाई त्यस बेला आठ भागमा विभाजित गरिएको थियो । विनायक (गणेश) हरूबाट परिवेष्ठित यस बनेपालाई पुराना ताडपत्रहरू र शिलाभिलेखहरूमा 'विनयापुरी' भनी उल्लेख गरिएको छ ।

बनेपाको बीचमा बहिल भन्ने ठाउँ छ । त्यहाँ पनि पाटीमा बसेर मानिसहरू भजन गर्दथे, हालसम्म पनि त्यस ठाउँका मानिसहरू पर्वपर्वमा भजन गर्दै आएका छन् । हाल कोलागणेशको एक ठाउँमा मात्र पुराना ढुङ्गे ढोकाका केही अवशेषहरू बाँकी छन् । कुनै-कुनै गणेशमन्दिरका पोखरीहरू पुरेर सार्वजनिक कामका लागि प्रयोग भइसकेका छन् । धेरै पाटीहरू भत्केर तिनको नामोनिसान नै बाँकी छैन । तर पनि कुनै-कुनै दाफा भजनहरू अहिलेसम्म पनि भजन गर्ने गरिरहेका छन् । कुनै-कुनै दाफा भजनहरू भने हराइसकेका छन् ।

बनेपाका मानन्धरसमुदाय कोभाः र वांख्य गरी दुई दाफा भजनमा विभक्त छन् । अहिले आएर कोभाः दाफा भजन पनि दुई समूहमा विभक्त भएको छ । ती मानन्धरहरूका दाफा भजनका नौबाजा खिँ, ढोलक, धिमे, भुछ्या, ताः, छुस्या, ख्वालिमाली, कोखिँ, नायखिँ, पछिमा, धाः, टिँ, चटकी, धुलू, डबडब, पस्ता, कहँ, पौँगा छन् । चाडपर्वमा बजाइने ती बाजाहरूको ध्वनिले देशका विघ्नबाधा आदिलाई हटाइदिन्छ भन्ने जनविश्वास छ ।



नायखिँ र छुस्या बाजा जात्रापर्वमा अनिवार्य छन् । ती बाजाहरू विशेषतः कसाईहरू बजाउने गर्छन् ।

बनेपामा हिन्दू र बौद्ध धर्मावलम्बीहरू छन् । तिनीहरू एक-अर्कामाथि कुनै भेदभाव राख्तैनन् । यहाँका मानिसहरू दुवै धर्ममा उत्तिकै आस्था राख्छन् । बनेपाकी आराध्यदेवी चण्डेश्वरी हुन् । यी देवीलाई हिन्दू र बौद्धहरूले उत्तिकै मानिरहेका छन् ।। चण्डेश्वरीलाई हिन्दूहरूले भगवतीका रूपमा र बौद्धहरूले एकजटी (तारा) का रूपमा मानिरहेका छन् । एउटा मात्र स्तन र दाँत भएकी र कपाललाई एउटै मुठा पारेकी यी भगवती या एकजटीले बायाँ खुट्टाले (एउटा मात्र खुट्टाले) टेकी दायाँ खुट्टा उचालेर, आफ्ना दुई आँखा बन्द गरेर अनि हुङ्कार गर्दै तेस्रो आँखा मात्र खोलेर दुष्ट दैत्यराज चण्डासुरको बध गरेकी थिइन् भन्ने कथन छ ।



(चण्डेश्वरीको रथजात्रा)

'नेपाल माहात्म्य' मा उल्लेख भएअनुसार तपस्याको बलले देवताहरूलाई साह्रै दुःख दिइरहेको दैत्य चण्डासुरलाई काटिएको चम्पकवृक्षको फेदबाट प्रकट भई यी देवीले बध गरेको कुरा वर्णित छ । चाँपको रूखबाट प्रकट भई चण्डासुरको बध गरिदिएकी हुनाले नै उनको नाम चण्डेश्वरी भएको भनाइ पाइन्छ । यसरी दुष्ट दैत्यको बध भएको खुसियालीमा देवताहरू, गन्धर्वहरू, किन्नरहरू र अप्सराहरूले यी देवीलाई हर्षोल्लासका साथ पुष्पकविमानमा राखी विविध बाजागाजाका साथ सिन्दुरजात्रा गरे भन्ने किंवदन्ती पनि छ । प्रतिवर्ष वैशाख पूर्णिमाको दिन र त्यसको भोलिपल्ट हुने देवी चण्डेश्वरीको रथजात्रा नै त्यसको प्रतिरूप

हो । उक्त जात्राको पर्वमा धिमे, भुछ्या, कहँ, पोँगा, नायखिं र अन्य विविध बाजागाजाका साथ दाफा भजनका मानिसहरूले भजन गर्ने गर्दछन् । पूर्णिमाका दिन बिहान सबेरै विविध बाजागाजाका साथ असङ्ख्य मानिसहरू हातमा चिराक लिई चिराकजात्रा गर्छन् । बनेपाको लायकूदेखि सुरु भई चण्डेश्वरीको जसिगाः (पवित्र तीर्थस्थल) मा टुङ्गिने यो चिराकजात्रा अत्यन्तै आकर्षक, रम्य र रौनकपूर्ण हुन्छ ।

चण्डेश्वरीको मन्दिर चण्डेश्वरीजङ्गलसमीप अथवा चण्डेश्वरी खोलाको नजिक बनेपानगरीबाट करिब २ किलोमिटर पूर्वपट्टि पर्दछ । देवी चण्डेश्वरीको प्राकट्य सत्ययुगको प्रथम पादमा भएको कुरा 'देवमाला वंशावली' मा उल्लेख छ ।[१] चण्डेश्वरीको सबैभन्दा पुरानो अभिलेख ७८१ सालको मात्र छ भनी विद्वान् श्यामसुन्दर राजवंशीले बनेपा नगरपालिकाबाट प्रकाशित 'चण्डेश्वरी स्मारिका' मा रहेको आफ्नो एक लेखमा लेख्नुभएको छ ।[२] तर हालै प्राप्त भएको ने० सं० ५११ सालको एउटा ताडपत्रमा चण्डेश्वरीको जात्रामा एउटा गुठीले ५ वटा बत्ती बाल्ने कुरा उल्लेख छ ।[३] चण्डेश्वरीसम्बन्धी अहिलेसम्म प्राप्त सबैभन्दा पुरानो अभिलेख यही हो ।

बनेपा कुमारी (कन्या) प्रधान नगरी हो । यहाँकी आराध्यदेवी चण्डेश्वरीलाई भक्तजनले कुमारीका रूपमा पनि मान्दछन् । त्यसैले चण्डेश्वरीको मन्दिरअगाडि शिलास्तम्भमा मयुरहरू पनि प्रतिष्ठापन गरिएका छन्, किनभने मयुर कुमारीको वाहन हो । तर यी देवी कुमारी कुमारकी सँगिनीचाहिँ होइनन् । यी देवी त साक्षात जगज्जननी चण्डेश्वरी भगवती हुन् । त्यसैले चण्डेश्वरीको मन्दिरअगाडि दुई शिलास्तम्भमाथि दुई सिंहलाई पनि प्रतिष्ठापन गरिएको छ, किनभने सिंह भगवतीको वाहन हो । देवी चण्डेश्वरीलाई कुमारी (कन्या) का रूपमा मानिएको हुँदा वैशाख पूर्णिमाको भोलिपल्ट वकुटोलमा भोछिभाया खलकका दुई कन्याले देवी चण्डेश्वरीलाई विधिवत लशकुश गरी देवीलाई छोपेको सेतो कपडा अनावरण गरिदिन्छन् । त्यसै बेलादेखि भक्तजनले रथजात्रा गरेर ल्याएकी देवीको मुखको दर्शन गर्न पाउँछन् ।

भाद्र कृष्णपक्ष पञ्चमीका दिन साँझपख बनेपामा भीमसेनको रथजात्रा हुन्छ । बनेपा व्यापारीहरूको थलो हो । व्यापारीहरूका आराध्यदेव

---

[१] देवमाला वंशावली, प्रकाशक : श्री पीरमहन्त क्षिप्रानाथ योगिराज, २०१३।४।९।३

[२] बनेपा सात गाउँ (बनेपा नगरपालिकाको स्मारिका), २०५३

[३] बनेपा-स्तवन, ज्ञानकाजी मानन्धर, प्रकाशक : सुखवेती मानन्धर, २०६६





**(नारायणका दुई मन्दिर)**

भीमसेन हुन् । त्यसैले भीमसेनको रथजात्रा यहाँ भव्य ढङ्गले गर्ने गर्दछन् । त्यस्तै कृष्णाष्टमीको दिन बिहान बनेपा दछुटोलको नारायणस्थानमा भीड लाग्दछ । त्यहाँ नारायणका दुई मन्दिरहरू छन् । यी मन्दिरहरू बनेपाका राजा रण मल्लका पालामा बनाइएका हुन् । नेपालमा नारायणका दुईवटा मन्दिरहरू एउटै हातामा भएको यहाँ मात्र देखिन्छ ।

पूर्वपट्टिको नारायणमन्दिरका ढुङ्गाहरूमा अति कलात्मक सुन्दर मूर्तिहरू कुँदिएका छन् । तर ती कलाकृतिहरू यौनक्रीडाका छन् । बनेपा नारायणस्थान भजनपरिवारका आयोजनामा श्रीकृष्णाष्टमीका दिन साँझपख विविध वाद्यवादन र भजन-कीर्तनका साथ नारायणको सुन्दर प्रतिमा खटमा राखी यहाँ प्रत्येक वर्ष जात्रा गर्ने गरिन्छ ।

भाद्र शुक्लपक्ष पूर्णिमा अर्थात् यँया:पुन्हिका दिन र त्यसको भोलिपल्ट अर्थात् आश्विन कृष्णपक्ष प्रतिपदाको मध्याह्नसम्म भातको देवता (जालुद्यो) लाई बनेपाको दक्षिणकालीमा सार्वजनिक प्रदर्शन गराइएपछि एउटा सिँगारिएको खटमा राखिन्छ र जालुद्यो गुठियारहरूको आयोजनामा कहँ, पोँगा, मुहाली, ढोलक, नायखिँ आदि विविध बाजाहरूसहित खटजात्रा सुरु गरी धनेश्वरनजिक पुण्यमाताखोलामा पुऱ्याइन्छ । एउटा घतलाग्दो किंवदन्ती गाँसिएको यो जालुद्योजात्रा रहस्यपूर्ण छ ।

बनेपा दछुटोलस्थित थानपति नारायणस्थानको पछाडिपट्टि कसाईटोलबाट बग्दै आएको एउटा ढल बहिल हुँदै तुंकप्वः गणेशतिरबाट



(जालुद्यो)

बगी पुण्यमाता खोलामा मिल्न जान्छ । त्यस ढलको पूर्वपट्टिका तीन टोलहरू (भोलाखाटोल, स्वधाःटोल र वकुटोल) का निवासी सबै बनेपालीहरू आश्विन प्रतिपदाका दिन बिहान जुठो बार्ने भनी भात खाँदैनन् । जालुद्योको अन्त्येष्टि गरिसकेपछि घर चोखो पारेर मात्र बेलुकी भात पकाएर खाने गर्दछन् । यो विषय अनुसन्धान गर्न योग्य छ ।

बनेपाको कोनेसाः (कोल) का मानन्धरहरूको आयोजनामा विजया-दशमीका दिन तुकंप्वःगणेशको धातुनिर्मित सुन्दर प्रतिमा रथमा राखी प्रतिवर्ष यहाँ रथजात्रा हुन्छ । उक्त गणेशको रथजात्रा र गणेशसम्बन्धी अन्य कार्यका लागि दत्त राखिदिएको खेत अद्यापि छँदैछ । विविध वाद्यवादन र भजन-कीर्तनसाथ हुने यो रथजात्रा पनि अनुसन्धान गर्न योग्य छ । बनेपाका विविध चाडपर्वमा यहाँ पूजा गर्नका लागि बनेपालीहरूको भीड हुन्छ । किंवदन्ती अनुसार राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा' आठ दिशामा आठ गणेशको प्रतिष्ठापन गर्ने क्रममा तुंकप्वःगणेशलाई नै सबैभन्दा पहिले प्रतिष्ठापन गरेका थिए रे । बनेपाका भिन्नभिन्न गणेशहरू भिन्नभिन्न कार्यसँग सम्बन्धित छन्, तर भाकल गरियो भने यी तुंकप्वःगणेशले हराएको सामान भेट्टाइदिन्छन् र परदेश जानेहरूको खबर ल्याइदिन्छन् भन्ने जनधारणा छ ।

नमोबुद्ध र नाला करुणामयका बीचमा अवस्थित यो बनेपानगरीमा बौद्धधर्मको पनि ठूलो प्रभाव छ । भनिन्छ बनेपालाई आठ बहालहरूले परिवेष्ठित गरी बीचमा बहिल राखी निर्माण गरिएको थियो । बनेपा लायकूको ढुङ्गेधारामा दुईतिर लिच्छविकालीन दुई स्तुपहरू छन् । लायकू दरबारसँगैको राम्रो इँटा र चुनले बनाइएका यी स्तुपहरू पन्ध्रौं शताब्दीका हुन् । बुद्धधर्मसम्बन्धी राम्रा-राम्रा र स-साना २८ वटा देवीदेवताहरू र मङ्गलका प्रतीकहरूसहित राखेर निर्माण गरिएका यी स्तुपहरू हेर्दा तिनमा



बौद्धधर्मका विविध आख्यानहरू भएको आभास हुन्छ । स्तुपका चारैतर्फ बोधिसत्व र ताराका मूर्तिहरू राखेर बीचमा कलापूर्ण तोरणहरूसहित बुद्धलाई राखी बनाइएको यी स्तुपहरू अत्यन्त सुन्दर देखिन्छन् ।



(लायकूपरिसरको चैत्य)

बनेपाको दछुटोलस्थित नारायणमन्दिरहरूको हाताबाहिर पश्चिम-उत्तरकोणतिरको अलि माथिको समथल ठाउँमा आठौं शताब्दीमा इँटा र चुनले बनेको एउटा स्तुप छ । चारै कोणमा लिच्छविकालका स-साना स्तुपहरू राखेर निर्माण गरिएको यो स्तुप हेर्दा महत्त्वपूर्ण नै लाग्छ । यसभन्दा अलिकति माथि उत्तरतिर सातवटा नागहरू ओढाइएका र नागासनमै बसिरहेका भगवान् बुद्धको एउटा सुन्दर मूर्ति छ । मानिसहरू त्यस मूर्तिलाई लिच्छविकालको भन्छन् । पहिले अति नै राम्रो अनुहार भएको यो बुद्धमूर्ति खुला ठाउँमा भएका कारणले पूजा गर्नेहरूले सिन्दुर र टीका लगाइदिने गर्दा यसको अनुहार अलि बिग्रिएको छ ।

बनेपामा धेरै चैत्यहरू छन् । तर सबैभन्दा महत्त्वपूर्ण र ऐतिहासिक चैत्य सम्भवतः तीनधारामाथिको लयन चैत्य हुनुपर्छ जस्तो देखिन्छ । धलछैं खलकका मानन्धरहरूबाट निर्मित उक्त लयन चैत्यको प्रत्येक वर्ष विधिपूर्वक पूजा गर्न, चण्डेश्वरीको दुईदिने जात्रामा बत्ती बाल्न र अन्य धार्मिक कार्यहरू गर्न लयन चैत्य गुठीका नाउँमा ख्वातबुँ नाउँको ३ रोपनी र कोलख्वातबुँको ४ आना जग्गा दत्त राखिदिएको कुरा ने० सं०

५११ सालको एउटा ताडपत्रमा उल्लेख छ ।[४] फेरि कोसिख्वातबुँको १ रोपनी जग्गा पनि चैत्यको बुंसाध्वँ (वार्षिक पूजा) गर्नका लागि अर्को दत्त राखिदिएको कुरा अभिलेखले देखाउँछ । प्रत्येक वर्ष उक्त लयन चैत्य गुठीबाट आवश्यक पूजा भइरहेको छ, तर दत्त राखिएका जग्गाहरू भने लोप भइसकेका छन् ।



**(नारायणस्थानमाथिको बुद्धमूर्ति)**

यहाँ बौद्धमास (श्रावण) मा शाक्यहरू महिनाभरि बिहान-बिहान विविध वाद्यवादनका साथ प्रत्येक बिहान फरक गरी श्रद्धा र भक्तिसाथ देवीदेवताको दर्शन गर्न जान्छन् । प्रतिदिन कालो माटोबाट चैत्यहरू महिनाभरि बनाई ती शाक्यहरू गुँलाधलँको समाप्तिपछि भाद्र महिनाको प्रतिपदाका दिन विभिन्न बाजागाजाहरूका साथ देशपरिक्रमा गरेर महिनाभरि बनाइरहेका ती स-साना चैत्यहरू पुण्यमाताखोलामा बगाइदिन्छन् ।

बनेपाका मानन्धरहरू दुई समूहमा विभाजित छन् – कोभाः र वांख्यः । तिनीहरू दुई दाफा भजनमा विभाजित छन् । गठेमुगल चह्रे (घण्टाकर्ण) का दिनमा कोभाःका मानिसहरू कोभाःसाः (कोल) मा र वांख्यःका मानिसहरू कोनेसाः (कोल) मा विधिपूर्वक पूजा गरेर भोज खाई त्यो वर्ष गुँलाधलँ (एक महिनासम्म गर्ने बौद्ध व्रत) गर्ने या नगर्ने निर्णय

[४] ऐ० ऐ०



गर्दछन् । शृङ्गभेरी कथाका आधारमा गर्ने गुँलाधलँ (व्रत) गर्ने-नगर्ने निर्णय गर्नुपरेको मूल कारण यो व्रत खर्चिलो हुनु र त्यस टोलका लोग्नेमानिस तथा स्वास्नीमानिसहरू एक महिनासम्म नै त्यसैमा लागिपरिरहनु हो । यही कारणले यो व्रत कुनै-कुनै वर्षमा मात्र हुने गर्दछ ।



**(गुँला धलँका महिला सहभागीहरू)**



**(गुँला धलँका पुरुष सहभागीहरू)**

महिनाभरि व्रत बस्ने युवायुवती र बूढाबूढीहरूले कालो माटोबाट स-साना स्तुपहरू बनाउने यो व्रत अत्यन्तै विधिपूर्ण छ । बेलुकी मात्र पालुँका रूपमा रोटी खाएर व्रत बस्नेहरूले नुन पनि खाँदैनन् । केही गरी कुखुरा, कुकुर र अन्य पशुहरूले छोएमा फेरि नुहाउनुपर्ने विधि यसमा छ । प्रत्येक बिहान देवीदेवताका मन्दिरमा नौबाजासहित परिक्रमा गर्न जाने यस व्रतमा धेरै नै परिश्रम गर्नुपरेको हुन्छ ।

गुँलाधलँको समाप्तिपछि अर्थात् श्रावण कृष्णपक्ष प्रतिपदाका दिन २ दिनको यज्ञकार्य सकिए पनि माटोबाट बनाइएका स्वयम्भू चैत्य र नमोबुद्ध चैत्यलाई साना दुईवटा खटमा राखी अनि महिनाभरि बनाइएका स-साना स्तुपहरू बोकी, धूपहरू बाली, समूह-समूहले बौद्धस्तोत्र पढेर, भजन-कीर्तन गरेर विविध बाजागाजाका साथ देश (बनेपा) परिक्रमा गरिन्छ । यो धार्मिक झाँकी अत्यन्तै रम्य, राम्रो, रङ्गीन र विशाल छ । यस झाँकीको अन्त्य धनेश्वरनजिकै पुण्यमाताखोलामा पुगेपछि हुन्छ ।

यो व्रत कहिलेदेखि सुरु भयो भन्ने जानकारी दिने कुनै अभिलेख पाइएको छैन । तर हालसालै प्राप्त भएको एउटा ताडपत्रमा ने० सं० ८३७ मा मानन्धर लत्नसिं र लक्षरामले गुँलाधलँका लागि झुकचाबुँ नामको तीन रोपनी जग्गा र बाकोननीस्थित ३ तले घर दत्त राखिदिएको कुरा उल्लेख छ ।[५] तर सो खेत र घर लोप भइसकेको छ ।

बनेपामा भाद्र कृष्णपञ्चमी र सप्तमीमा गरी प्रतिवर्ष दुईपटक कन्याहरूलाई सडकछेउमा राखेर विविध बाजागाजासहित श्रद्धालु भक्तजनले स्वारी, मालपुवा, बिस्कुट, चकलेट आदि चढाउँछन् । यो पनि बनेपाको एक किसिमको ठूलो पर्व हो ।

हजारौं कन्याहरूलाई पूजा गरिने यो कन्यापूजा कहिलेदेखि सुरु भयो भन्ने कुराबारे कतै केही उल्लेख भएको छैन । तर बनेपाको 'सनातन कन्यापूजा प्रबन्ध समिति' द्वारा प्रकाशित शतवार्षिकी स्मारिकामा उल्लेख भएअनुसार विक्रम सम्वत् १९५९ भाद्र ५ रोज १ को अभिलेखले बनेपाका भद्रभलादमीहरूबाट कन्यापूजाका लागि जम्मा रु. ३१७५२ (तीन सय सत्र रुपियाँ बाउन्न पैसा) सङ्कलन गरी अक्षयकोषको स्थापना गरेको देखाउँछ ।

यस्ता दुई किसिमका कन्यापूजाहरू बनेपामा भइरहेका छन् ।

---

५ ऐ० ऐ०






(बनेपाको कन्यापूजा)

आठ गणेशले परिवेष्ठित विनयापुरी नगरी यस बनेपामा प्रतिवर्ष भाद्र कृष्ण चौथीका दिन कोलाटोलबाट धिमेबाजाका साथ गणेशपूजामा युवायुवती र केटाकेटीहरू देशपरिक्रमा गरी विविध वस्तुहरू ती देवतालाई चढाउँछन् । त्यस्तै वकुटोलको डबलीबाट वाद्यवादनसहित देशपरिक्रमा गरी महादेवको पूजा हुन्छ । भाद्र कृष्णाष्टमीका दिन दछुटोलको नारायणस्थानबाट विविध वाद्यवादनसहित नारायणको पूजा हुन्छ । यसै महिनामा बनेपाका बौद्धमार्गीहरूले आफ्नो अनुकूल समयमा धिमे, भुछ्या र अन्य बाजाहरूसहित देशपरिक्रमा गरी आ-आफ्ना समूहबाट भगवान्को पूजा गर्ने गर्दछन् । ती समूहहरू कोभाः, कोसाः र बांख्यः दाफा भजनका मानन्धरहरू र बनेपाका शाक्यहरूका हुन्छन् । रामनवमीका दिनमा हनुमानको पूजा हुन्छ । यहाँ प्रतिवर्ष नवदुर्गाको मुकुन्डोनाच ल्याउने गरिन्छ ।

बनेपामा धेरै संस्कृतिका पर्वहरू छन् । ती पर्वहरू सम्पन्न गर्न-गराउन धेरै गुठीहरू छन् । ती गुठीहरूका नाममा ती संस्कृति र पर्वसम्बन्धी कार्य गर्नका लागि जग्गाहरू दत्त राखिदिएको कुरा अभिलेखहरूले देखाएका छन् । हालसम्ममा कुनै-कुनै गुठीहरू हराइसकेका छन् । जग्गा र गुठीअन्तर्गतका पुराना-पुराना मूर्ति तथा अन्य सामानहरू हराइसकेका छन् । पहिले काठमाडौँको श्वेतकालीको मुकुन्डोनाच प्रत्येक १२ औं वर्षमा बनेपाको लायकूडबलीमा हुने गर्दथ्यो । यो नाच यहाँ नल्याइएको अहिले धेरै वर्ष भइसक्यो । थारूदीपमा चैत्र मसान्तमा लिङ्गो

उभ्याई बिस्केटजात्रा मनाउने गर्दथे । यो पर्व हराएको पनि धेरै वर्ष भइसक्यो । 'नवदुर्गा देंछु वयेगु' (नवदुर्गा आउने दिन खबर गर्न आउने) को २-४ दिनपछि सिपाख्यःमा जाँडको घ्याम्पो (भैरवको प्रतीक) दुईजनालाई बोकाई कहँ, पौंगा, नाय्खिँ, मुहाली आदि विविध बाजाका साथ खगुठी र सीगुठीका मानन्धरहरू सिकाको जाने चलन २० वर्षभन्दा अघिदेखि नै बन्द भइसकेको छ । दसैंको आगमन भएपछि महिनाभरि घरघरका ढोकाढोकामा बिहान सबेरै गाइनेहरू सारङ्गी बजाई देवीदेवताहरूका मङ्गलगाथाहरू गाउन आउँथे, त्यो चलन पनि हराइसकेको छ । घण्टाकर्णका दिनमा प्रत्येक टोलमा छ्वालीबाट घण्टाकर्ण बनाई अश्लील र फोहोर नाराहरू लगाउने र सहरबाहिर, अझ कुनै-कुनै त खोलापारि नै पुऱ्याएर घण्टाकर्णलाई जलाउने प्रचलन पनि हटिसकेको छ । पहिले यहाँ करुणामयको पनि जात्रा हुने गर्दथ्यो । माघ महिनामा भक्तजनहरू बनेपाबाट चण्डेश्वरीसम्म गुड्दै जान्थे । 'सिलामागरा तुलेगु' भनिने त्यो चलन हराएको पनि धेरै नै भइसकेको छ ।

ज्येष्ठ शुक्ल षष्ठीका दिन कुमारको जन्म भएको हुनाले त्यस दिनलाई 'कुमारषष्ठी' भनिन्छ । श्री स्कन्दस्वामीले राजा गुणकामदेवलाई स्वप्नमा निर्देशन गरेअनुसार केटा र युवाहरू एकै ठाउँमा जम्मा गराई एक दलले अर्को दलमाथि ढुङ्गाले हान्ने तमासा (खेलँ थ्वायेगु) सुरु गरिएकोमा पछि सो तमासा हेरिरहेका अङ्ग्रेज रेजिडेन्ट कोल्भिनलाई सन् १८७० मा ढुङ्गाले लागेपछि उक्त प्रथा प्रधानमन्त्री जङ्गबहादुरले हटाइदिएका थिए । ज्येष्ठ शुक्ल षष्ठी (सिठी नखः) का दिन देवताका सेनापति कुमारको जन्मदिन भएको हुनाले त्यो दिन सैनिक व्यायाम गराउने चलन पनि चलाइएको थियो । यस्तो प्रथा विभिन्न ठाउँहरूमा चलाइएका थिए । सन् १८७० मा उक्त प्रथा काठमाडौंमा हटाइए पनि बनेपामा भने तुकंप्वःगणेशको मन्दिर र कोभागणेशको मन्दिरको ढोकाबाहिर एक दलले अर्को दललाई ढुङ्गा हान्ने त्यो प्रथा वि० सं० २००७ सालको प्रजातन्त्रप्राप्तिपछि मात्र राजदास बादे श्रेष्ठको अनुरोधमा बन्द भएको थियो ।

बनेपाकी आराध्य देवी चण्डेश्वरीको आख्यान झल्कने यहाँको मुकुन्डोनाच अत्यन्तै भव्य र महत्त्वपूर्ण थियो । ३२ गण भएको यो आनुष्ठानिक नाचमा बनेपाका फरक-फरक समूहका मानिसहरूले फरक-फरक मुकुन्डो लगाएर नाच्थे । यी देवीनाचमा येँयापुन्हि (इन्द्रजात्रा) को पर्वमा बनेपाका ९ डबलीमा नचाउने गरिन्थ्यो । कहँ र पौंगाको धुनमा र पछिमाको तालमा हुने यो नाच अत्यन्तै रोमाञ्चकारी थियो । यस्ता



नाचहरू साँगा र पनौतीमा पनि थिए । तर साँगामा २० वर्षजति अघिसम्म चलेको यो नाच मुकुन्डो र पोसाकहरू बाँकी नै भए पनि फेरि चलाउने स्थिति छैन । पनौतीमा धेरै वर्षसम्म बन्द भएको देवीनृत्य फेरि सञ्चालनमा आएको भए पनि अहिले सङ्कटमा परेजस्तो छ । बनेपाको देवीनाच भने लोप भइसकेको ११३ वर्षजति भइसकेको छ । यसरी बनेपाका धेरै सांस्कृतिक पर्व र निधिहरू यहाँका मानिसहरूको बेवास्ताले गर्दा अथवा सम्बन्धित निकाय र यहाँका भद्रभलादमीहरूले ध्यान नदिएका कारणले हराइसकेका छन् ।



# बनेपाको तीनधारा :
# एक सांस्कृतिक पक्ष



(बनेपाको तीनधारा)

नेवार समुदायको संरचना अत्यन्तै राम्रो र वैज्ञानिक किसिमको छ। देश (सहर) निर्माण गर्दा चोक, पाटी, डबली, इनार, पोखरी, ढुङ्गेधारा आदि आवश्यक ठाउँमा मिलाएर बनाइएको हुन्थ्यो । पहिलेका मानिसहरू धर्मप्रति साह्रै नै आस्था भएका हुन्थे । त्यसैले टोलटोलमा प्रतिष्ठापन गरिएका गणेश वा अन्य देवदेवीहरूलाई बेलुकी पाटीमा बसेर विविध वाद्यवादनका साथ भंजन गरी आनन्दले मन शुद्ध गरेर जीवन बिताउँथे। जीवनका लागि पानी अत्यन्तै आवश्यक छ । अतः पानीका लागि ठाउँठाउँमा इनार, पोखरी र ढुङ्गेधाराहरू पनि बनाई व्यवस्था मिलाइएका हुन्थे । त्यस्तै, देवदेवीका विधिको काम गर्न ठाउँठाउँमा डबलीहरू बनाइएका हुन्थे र त्यहाँ देवीको गणनृत्य पनि नचाउने गर्दथे ।

कलिगत वर्ष ४१९७ अर्थात् वि० सं० ११५३ मा राजा आनन्ददेवले निर्माण गरेको बनेपा पनि त्यस्तै किसिमका स्थलहरू बनाई निर्माण भएको थियो । आठ दिशामा आठ गणेशका मूर्तिहरू दिक्पालका रूपमा प्रतिष्ठापित गरिएको बनेपामा गणेशको मन्दिरनजिक पाटी, पोखरी र ढोका थिए । त्यति मात्र होइन, देशभित्र ठाउँठाउँमा धारा, डबली, पाटी, चोक आदि बनाएर व्यवस्था मिलाइएको थियो । त्यसमध्ये बनेपाको एउटा महत्त्वपूर्ण स्थल तीनधारा परिसर हो ।



बनेपाको तीनधारा (स्वधारयिति, हिति) स्थल ऐतिहासिक, सांस्कृतिक एवं व्यापारिक दृष्टिकोणले अत्यन्तै महत्त्वपूर्ण छ । ६ वटा मूल बाटोका बीचमा अवस्थित यो स्थल नै बनेपाको केन्द्रीय स्थल हो । दुईतिर दुईवटा ठूलाठूला पीपलका रूखहरूका बीचमा तीनवटा ढुङ्गेधाराहरू छन् । तिनीहरू दक्षिणाभिमुख छन् । प्राचीन नेवार बस्तीहरूमा लिच्छविकालदेखि नै ढुङ्गेधाराहरूको निर्माण भएको देखिन्छ । अन्य सहरहरूमा जस्तै यहाँ पनि ढुङ्गेधाराहरू छन् । बनेपाका नौवटा ढुङ्गेधाराहरूमध्ये तीनधारा (स्वधारयिति, हिति) यहाँ छन् । काठमाडौँ उपत्यकाको सबैभन्दा पुरानो ढुङ्गेधारा पाटन दरबारको उत्तरपूर्वको सन् ५७० को मँगःहिति (धारा) हो । काठमाडौँको गाःहितिका पानीको स्रोत बालाजु र भक्तपुरको गाःहितिको पानीको स्रोत महादेवपोखरी भएजस्तै बनेपाको तीनधाराको पानीको स्रोत धःगा थियो । धःगा बनेपाको उत्तरीय डाँडातर्फ पर्दछ । अन्य ठाउँहरूमा जस्तै बनेपामा पनि जनैपूर्णिमामा दक्षिणतिर फर्केर नौवटा ढुङ्गेधाराहरूमा भक्तजनहरूले नुहाई पुण्य कमाउने चलन अद्यापि चल्दै आएको छ । ती नौवटा ढुङ्गेधाराहरूमध्ये तीनवटा धारा स्वधारयिति अर्थात् तीनधारा पर्दछ । साँखुका मानिसहरू भने यस उपलक्ष्यमा पूर्वतर्फ फर्केका नौवटा ढुङ्गेधाराहरूमा नुहाउने गर्दछन् ।



(बनेपाको लयन चैत्य)

तीनधारामाथि एउटा समतल जग्गा छ । त्यसको उत्तरछेउतिर पहिले एउटा सरकारी भवन थियो । त्यहाँ पहिले जिल्ला कार्यालय थियो भनी बूढापाकाहरूले भनेको सुनेको थिएँ । पछि त्यहाँ भाषा पाठशाला चलाउँदा म पनि एक हप्ताजति पढ्न गएको थिएँ ।

तीनधारामाथि दाहिनेतर्फको मूल सडकछेउ समतल ठाउँमा एउटा चैत्य छ । त्यसलाई लयन चैत्य भनी ने० सं० ५११ सालको एउटा ताडपत्रमा उल्लेख गरिएको छ । उक्त लयन चैत्यका नाममा लयन चेत भाद (चैत्यगुठी) का लागि बनेपाको धलँछेका निकेश नामका एकजना मानन्धरले आषाढ कृष्णपक्ष अमावस्या तिथि बुधबार सूर्यग्रहणको महापर्वका उपलक्ष्यमा ख्वात बुँ नामको १ कर्ष (४ आना) जग्गा दत्त राखिदिएको कुरा उल्लेख छ । त्यसका साथै कोसि ख्वात बुँ नामको १ रोपनी जग्गा पनि धलँछे खलकका मानन्धरहरूले नै दत्त राखिदिएको कुरा त्यसमा उल्लेख गरिएको छ । ती खेतबाट हुने आम्दानीले चण्डेश्वरीजात्राको दुई दिन र इन्द्रजात्रामा ७ दिन ५ वटा बत्ती बाल्ने, साथै असोज पूर्णिमाका दिनमा हरेक वर्ष त्यस चैत्यलाई विधिपूर्वक पूजा गरी ती खेतको आम्दानीले गुठियारहरूले भोज खाने कुरा उल्लेख छ ।

यस ताडपत्रबाट बनेपाका निम्नलिखित महत्त्वपूर्ण कुराहरू ज्ञात हुन आउँछन् –

१. चण्डेश्वरीको आजसम्म प्राप्त अभिलेखहरूमा यो नै सबैभन्दा पुरानो छ ।
२. पहिले यहाँ इन्द्रजात्रा ७ दिनसम्म धुमधामसाथ मनाइँदो रहेछ ।
३. यो लयन चैत्य ने० सं० ५११ सालभन्दा धेरै पहिले नै बनिसकेको रहेछ ।
४. तीनधारा पनि ने० सं० ५११ सालभन्दा धेरै पहिले नै बनिसकेको रहेछ ।

यी तीनवटा धारा धेरै पहिले नै बनिसकेको कुरा खुल्न आएकाले राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा जनतालाई पानीको व्यवस्था मिलाइदिन सम्भवतः यी तीनवटा धारा पनि त्यसै बखतमा निर्माण गरेको हुनुपर्दछ । यी तीनैवटा धाराहरूमाथि पानी आउने ठाउँमा हितिमगः छन् । हुन पनि ढुङ्गेधाराहरूमा हितिमगः, गोही, मकर आदिका आकृतिका बुट्टाहरू कुँदेर राख्ने चलन थियो । किनभने उनीहरू पानीसँग सम्बन्धित प्राणीहरू हुन् र यी तीनैवटा धाराको पानी बगेर आउने ठाउँमा गोहीले छोपेका छन् । अन्य ठाउँका ढुङ्गेधाराहरूमा र चतुष्कोणात्मक ठाउँमा बनाइएका यी तीनैवटा धारामा पनि गणेशमूर्ति र शिवलिङ्ग छन् । शिवलिङ्गको अगाडि शिर टुक्रिसकेको एउटा साँढे पनि छ । बीचको धाराको भित्तामा भगवान् विष्णुको सुन्दर मूर्ति छ । त्यसै ठाउँमा भएको अत्यन्तै कलापूर्ण सुन्दर मूर्ति यहाँ ल्याई स्थापना गरिएको छ । तीनधाराअगाडि एउटा ठूलो चोक छ । तीनधाराको बायाँपट्टि पहिले मयजुफले (पाटी) थियो । यस पाटीको



अभिलेखअनुसार ने० सं० ८११ सालमा श्री भवानीशङ्कर (महादेव) लाई प्रतिष्ठापन गरी पाटी बनाउनेहरूमध्ये रामावती मयि र तारादेवी मयिसमेत भएका हुनाले यो फले (पाटी) को नाम नै 'मयजु (मयि) फले' भएको हुनुपर्छ । नेपाल भाषामा 'मयजू' आइमाईलाई सम्मान गरी प्रयोग गरिने शब्द हो । उहिलेका युवतीहरू दिउँसो ज्या (यँ, पुरानो खालको चर्खा) लिएर त्यहाँ बसी धागो कात्ने गर्दथे । त्यस बखत त्यहाँ ती युवतीहरूबीच हाँसोठट्टाका कुराहरू पनि हुन्थे । पछि त्यस पाटीका सामग्रीहरू लगेर काँथुगणेशका पछाडि चण्डेश्वरी जाने बाटोछेउ अर्को पाटी बनाइएको थियो ।

धुलिखेलको केन्द्रीय स्थल नारायणचोकमा सोह्रखुट्टे पाटी भएजस्तै श्रीखण्डपुर र पनौतीका केन्द्रीय स्थलहरूमा पनि आ-आफ्ना सोह्रखुट्टे पाटीहरू छन् । ती सोह्रखुट्टे पाटीहरूमा देशका प्रतिष्ठित व्यक्तिहरू बसेर मानिसहरूका झैझगडा र पर्न आएका मुद्दामामिला छिनोफानो गरी पहिले-पहिले न्याय दिने काम गर्दथे । त्यस्तै, बनेपाको यो तीनधारा चोकको दक्षिणपट्टि पहिले सोह्रखुट्टे पाटी थियो । भनिन्छ यहाँ पनि प्रतिष्ठित व्यक्तिहरू बसेर न्याय दिने काम गर्दथे । अहिले पनि केही बूढापाकाहरू आफूलाई अन्याय पर्न आएमा 'लौ आऊ, तीनधारा डबलीमा बसेर कुरा गर्नें' भन्ने गर्दछन् । यसरी तीनधारा चोक हरेक दृष्टिकोणले पहिल्यैदेखि महत्त्वपूर्ण थलो बन्दै आएको छ ।

यो तीनधाराचोक सांस्कृतिक दृष्टिकोणले धेरै नै महत्त्वपूर्ण छ । भक्तपुरबाट नवदुर्गानाच ल्याउँदा गणनृत्य यहाँ पनि गरिन्छ । सानो खटमा राखेर ल्याउने नवदुर्गाकी मुख्य देवी महालक्ष्मीलाई सिफोद्यो भनिन्छ । तिनलाई सबभन्दा पहिले चोकको पूर्वतर्फ पश्चिमाभिमुख गरी राख्ने गरिन्छ । सिफोद्योलाई जहाँ पनि पश्चिमाभिमुख गरेर नै राख्नुपर्दछ । चोकको दक्षिणपट्टि छेउमा वादकहरू बस्तछन् र विधिअनुसार सुरुदेखि अन्त्यसम्म यहाँ ती देवदेवीहरूको नाच हुने गर्दछ । बेलुकी यहाँ कुमारी तुइकेगु कार्य हुन्छ । कुमारी तुइकेगुमा वादकहरूका राग र तालमा देखिने कुमारीका अङ्गप्रत्यङ्गको हाउभाउले ती देवीमा चर्को वेदना रहेको प्रतीत हुन्छ ।

'कुमारी तुइकेगु' कार्यपछि बनेपाका भोछिभोया खलकका नाइकेले कँलाली (बाँसका टुक्राहरूबाट बनाइएको टोकरी) पूजा ल्याएर भैरवलाई भक्तिसाथ दिने गर्दछन् । उक्त पूजा लिएर भैरवले सिफोद्योलाई विधिवत पूजा गर्दछन् । पूजा सकिएपछि भैरवले एउटा सलिँचा (माटोबाट बनाइएको पाला) मा दसवटा सुपारी राखेर त्यसलाई अर्को सलिँचाले

छोपी पासुका (पवित्र धागो) ले बाँध्छन् र त्यसमा फेरि देवीका फूलहरू (प्रसाद) राखेर फेरि अर्को पासुकाले त्यसलाई बाँधी ती नाइकेलाई दिन्छन्। भैरवले दिएका ती दसवटा सुपारी स्वायाँपुन्ही (वैशाखपूर्णिमा) भन्दा अगाडिको अष्टमीका दिन चण्डेश्वरीमा देवाली पूजा गर्न जाँदा देवीलाई चढाउँछन् । त्यसपछि ती दसैवटा सुपारी लिएर सोझै बनेपाको लायकूमा गई द्वारेलाई बुझाउँछन् । चण्डेश्वरी रथजात्राका लागि द्वारेले ती दसवटा सुपारी हनुमानढोकामा बुझाएर त्यहाँबाट एउटा तरबार ल्याउने परम्परा छ । त्यो तरबार राष्ट्रनायकको प्रतिनिधि हो । नवदुर्गानाचको तेस्रो दिनमा यस तीनधाराचोकमा ङा लायकेगु अर्थात् माछा मार्ने गरिन्छ ।

तीनधाराचोकको पश्चिमपट्टि एउटा ठूलो डबली छ । डबली सांस्कृतिक पूजापर्व अर्थात् देवदेवीसम्बन्धी परम्परागत विधिअनुसार काम गर्नका लागि बनाइएको हुन्छ । चण्डेश्वरी रथजात्राको काम त्यहीँबाट सुरु हुन्छ । झन्डै एक महिनाअगाडिदेखि यःसिंगुँ (नाला र भक्तपुरका बीचको एउटा जङ्गल) बाट दुईवटा लामा ठूला तुसिँ (सत्तरी) ल्याई राखिन्छ । जात्राका लागि मानन्धर समुदायका सिकर्मी गुठीयारहरूले रथ बनाउँछन् र खगुठीका मानन्धरहरूले रथलाई बेतले बाँध्ने काम गर्दछन् भने सो रथलाई राजवाहकहरूले विविध रङ्गका कपडाहरूले सिँगारिदिन्छन् ।

वैशाख पूर्णिमाको बिहान ३ बजेतिर करिब ४ सयजना भक्तजनहरू हातमा चिराक लिई बनेपा लायकू दरबारमा जम्मा हुन्छन् । त्यस बखत त्यहाँ विधिको पूजा सकिएपछि द्वारेको नेतृत्वमा कहँ, पौँगा, धिमे, भुछ्या, नायबाजा आदि विविध बाजागाजाहरूसहित मतापूजा (Procession of Torches) सुरु हुन्छ । त्यस बखत तीनधाराचोकको पूर्वतिर परालबाट बनाइएको एउटा ठूलो राक्षसको प्रतीक तयार पारिराखिएको हुन्छ ।

इन्द्रादि देवताहरू र मनुष्यहरूलाई अत्यन्तै दुःख दिने दैत्यराज चण्डासुरलाई देवी चण्डेश्वरीले बध गरेको खुसियालीमा इन्द्रादि देवताहरूले देवीलाई सिन्दुरजात्रा गरेका थिए । त्यही सिन्दुरजात्राको प्रतिरूप नै प्रतिवर्ष यहाँ हुने चण्डेश्वरीजात्रा हो । त्यस सिन्दुरजात्रामा सहभागी बन्न र देवीलाई स्वागत र शुभकामना दिन यो मतापूजा भएको थियो र यो प्रथा त्यसै बखतदेखि चल्दै आइरहेको छ । तर त्यस बखत चण्डासुरको एक सेनापति उक्त मतापूजामा पनि अवरोध खडा गर्न आएको भनी तीनधारामा आगोको ज्वालास्वरूप बलिरहेको परालको डल्लो नै असुरको प्रतीक हो भनी अद्यापि देखाउने गरिएको छ । तर येनकेन हर्षोल्लासका साथ यो मतापूजा चण्डेश्वरीतर्फ नै जान्छ ।



दिउँसो २ बजेतिर तीनधारा डबलीमा चण्डेश्वरीको रथ तयार भइसकेको हुन्छ । धिमे, भुछ्या, खिँ, बाँसुरी, मादल, कहँ, पौँगा, नायखिँ, छुस्या आदि विविध बाजासहित त्यहाँ मानिसहरूको भीड भइसकेको हुन्छ । त्यसबखत ख गुठीयार, सिकर्मी गुठीयार, राजवाहक आदि सम्बन्धित मानिसहरूलाई विधिवत रूपमा बोलाउन जाने गर्दछन् । त्यसै बखत तीनधाराअगाडि एकजना कनफट्टाले विधिको पूजा गरेर जोगीचक्र दिन गर्दछ । जोगीचक्रमा एउटा भेडा र एउटा भाले पनि बलि दिने गर्दछन् । जोगीचक्र दिनुको अर्थ ठूलो काममा कुनै विघ्नबाधा नआइनलागोस् भन्नु हो । त्यसपछि खगुठी, सिगुठी, सिकर्मी गुठीका मानिसहरू, राजवाहकहरू र अन्य विविध व्यक्तिहरूलाई हर्षोल्लासका साथ रथमा बसेर द्वारेले टीका लगाउँदै सुपारी र अन्य मिठाई वितरण गर्ने गर्दछन् । खगुठी र सिकर्मी गुठीका मानन्धरहरूले रथको अघिल्लो भागमा उठेर हपा दिने गर्दछन् भने पछाडि सिगुठीका मानन्धर र एकजना राजवाहक पनि रथमा बस्ने गर्दछन् । रथ ज्यादै ठूलो र गरुङ्गो हुने भएकाले यस्तो गर्नुपरेको हो । रथ बोक्न अगाडि र पछाडि गरेर १०० जनाजति मानिसको आवश्यकता हुन्छ । यो कार्यभन्दा केही समयअगाडि ख गुठीका मानन्धरहरूबाट ल्याइएका तीनवटा किसिली, द्वारेबाट ल्याइएको एउटा किसली र राजवाहकबाट ल्याइएको एउटा किसिली जम्मा गरी पाँचवटा किसिली रित्तो रथमा राखिसकेका हुन्छन् । 'ल्हाका पालुं हा' गर्दै प्वँख (रित्तो रथ) जात्रा सुरु हुन्छ । डबलीबाट मानिसहरूले रथ तल खसाल्छन् । त्यसपछि देवीको रथ चण्डेश्वरीतर्फ लान्छन् । डबलीमा मिलाइएका ठूलाठूला ढुङ्गाहरू जात्रामा तल खस्न सक्छन् । खसेका ती ढुङ्गाहरू घण्टाकर्णअगाडि डकर्मीहरूले मिलाइसक्नुपर्ने परम्परा छ ।

'देवमाला वंशावली' का अनुसार गुणकामदेव प्रथमले महालक्ष्मीको निर्देशनअनुसार उपत्यकामा तीन ठूला सहरहरू (काठमाडौँ, भक्तपुर र पाटन) बसाई महालक्ष्मी, महाकाली र महासरस्वती नामका तीन देवीहरूलाई तीनै सहरका इष्टदेवीका रूपमा स्थापना गरी प्रत्येक सहरका आठ दिशामा अष्टमातृकालाई सहरको रक्षाका लागि थप स्थापना गरेर तीनै सहरमा तीन मातृकाहरूका अलग-अलग नृत्य चलाएका हुन् र ती अझै प्रचलित छन् ।[1] त्यस्तै किसिमले चण्डेश्वरीको निर्देशन पाई राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा बनेपा सातगाउँको निर्माण गर्दा पनि

[1] तुलसी दिवस : अष्टमातृका मुकुन्डो नृत्यनाटक : एक जीवन्त सांस्कृतिक परम्परा, मधुपर्क, २०५० वैशाख

अलग-अलग मुकुन्डो लगाएर नाच्ने देवीनृत्य चलाएका थिए । तिनीहरूमध्ये साँगाको देवीनृत्य २० वर्षजति अघिदेखि हराइसकेको छ भने पनौतीको देवीनृत्य पहिले हराएर गए पनि पछि त्यहाँका मानिसहरूको प्रयासले जीवित भएको छ । बनेपाको देवीनृत्य चण्डेश्वरीसँग सम्बन्धित छ । यसलाई कुमारीनृत्य भनिन्थ्यो । किनभने चण्डेश्वरी नै कुमारी हुन् । यस मुकुन्डोनाचमा ३२ गण हुन्थे र बनेपाका विभिन्न जातका मानिसहरू एउटा-एउटा मुकुन्डो लगाएर नाच्तथे । दुर्भाग्यवश देवी चण्डेश्वरीको आख्यान झल्केको यो मुकुन्डोनाच हराएको झन्डै ११३ वर्षजति भइसक्यो । भनिन्छ त्यो आनुष्ठानिक नाच बनेपाका नौवटा डबलीमा नचाउने गरिन्थ्यो । बनेपाको तीनधाराको डबलीमा पनि नचाउने यस नाचका विषयमा एउटा रोचक कथा छ –

एक मल्लराजाका दुईवटी रानी थिए । ती दुवै रानी एक-अर्कासँग मिल्दैनथे । बनेपाको केन्द्रीय स्थल यो तीनधारा डबलीमा कुमारीनृत्य देखाइँदा एउटी रानी तीनधारामाथिको दरबारबाट उक्त नृत्य हेर्ने गर्दथिन् भने अर्की रानी दक्षिणपट्टिको घरको अति कलात्मक ढङ्गले पाँच नागहरू कुँदिएको झ्यालबाट हेर्दथिन् । त्यसरी दुईतिरबाट रानीहरूले सो नृत्य हेरिरहँदा जेठी रानीलाई डाहा भई कुमारीनृत्य छेक्न उनले डबलीको दक्षिणतिर एउटा ढुङ्गाको स्तम्भ ठड्याएर त्यसमाथि पञ्चबुद्ध सम्मिलित गराई एउटा चैत्यको स्थापना गरिदिइन् । तर त्यस चैत्यको स्तम्भ एक हुलको झगडामा टुक्रिएपछि त्यसको सट्टा अर्को स्तम्भ राखी उक्त चैत्य यथावत स्थापना गरिदिएको हो भनी मेरा पूज्य बुबा स्व० मोहनलाल खिँले एकचोटि मलाई भन्नुभएको थियो । उक्त चैत्य त्यस ठाउँमा अद्यापि विद्यमान छ ।



# बनेपामा नवदुर्गा

एकचोटि एकजना तान्त्रिकले आफ्नो तन्त्रले नाला र भक्तपुरका बीचको एउटा जङ्गलमा नवदुर्गागणको प्रतिस्थापन गरे । तर ती देवीदेवताहरूलाई त्यो ठाउँ ग्राह्य भएन । त्यसैले आक्रोशित भएर बाटामा आउने-जाने व्यक्तिहरूलाई अपहरण गरी जङ्गलभित्र लगेर ती देवीदेवताहरूले तिनीहरूको भोग लिने गर्दथे ।

मानिसहरू एकपछि अर्को गरी धमाधम गायब हुँदै गएपछि नालाका एक ख्यातिप्राप्त तान्त्रिकले नवदुर्गाको त्यो कार्य रोक्न र समाजमा उब्जेको भय-त्रास निवारण गर्न आफू भक्तपुर जानुपर्ने कुरा प्रकाशमा ल्याए । त्यो कुरा थाहा पाएर नवदुर्गाका दूत सिम्ब र दुम्ब मानिसको भेष लिई ती तान्त्रिकलाई भक्तपुरसम्म साथै लैजान आए । तान्त्रिक आफ्नो पूजाका सामग्रीहरू लिएर बाहिर निस्के । तीनैजना भक्तपुरतिर लागे । जब तिनीहरू जङ्गलको नजिकै पुगे, सिम्ब र दुम्बले आफ्नो सही रूप देखाएर भने – "हे मनुवा ! तिमीले भोर भयो भन्ने ठानेका रहेछौ, तर अहिले त मध्यरात नै छ । हामी दुवैजना नवदुर्गाका दूत हौं । नवदुर्गाले तिमीलाई भेट्न चाहेका छन् । जाऔं जङ्गलभित्र देवीदेवताहरूको दर्शन गर्न ।"

तिनीहरू जङ्गलभित्र पसे । त्यहाँ ती तान्त्रिकले नवदुर्गागणलाई देखे । त्यस बखत काली (नवदुर्गामध्येकी एक) ले भनिन् – "ए मनुवा ! हामीजस्ता देवीदेवताहरूलाई आफ्नो देह भोग दिन पाउने तिमी त भाग्यमानी रहेछौ ।"

अनि ती तान्त्रिकले बिन्ती गरेर भने – "हे प्रभो ! हे देवीदेवताहरू हो ! मेरो एउटा प्रार्थना हजुरहरूले सुनिदिनुपर्‍यो । मैले हजुरहरूको पूजा गर्न पूजाका सामग्रीहरू ल्याएको छु । पहिले मेरो पूजा नै ग्रहण गर्नुहोस्, अनि मेरो भोग लिनुहोस् ।"

कहिल्यै पूजा थाप्न नपाएका ती देवीदेवताहरूले त्यस मान्छेका कुरा स्वीकारे । त्यसपछि ती देवीदेवताहरूलाई क्रमैसँग राखेर प्रत्येक देवीदेवताका अगाडि ख्वःजा (कलश अथवा चैत्यस्वरूपको चिउराबाट देवीदेवतालाई पूजामा प्रयोग गर्ने वस्तु) र जजङ्गा (पूजामा प्रयोग गरिने पवित्र धागो) राखी ती तान्त्रिकले एकपछि अर्कोलाई पूजा गर्दै आफ्नो तन्त्रले सबैलाई चल्नै नसक्ने गरेर बाँधिदिए । त्यसपछि उनले नवदुर्गालाई

आफूलाई भोग लिन आग्रह गरे । उनीहरू चल्न नसकेपछि तन्त्रले हामीहरू बाँधियौं भन्ने कुरा उनीहरूलाई थाहा भयो । भोर हुन लाग्यो । भोर भएर अरूले देखे भने बेइज्जती हुने भएकाले नवदुर्गागण ती तान्त्रिकले जे भने पनि स्वीकार्न तयार भए । तान्त्रिकले पनि उनीहरूलाई गोप्य कोठामा राखी कसैले नदेख्ने गरेर विधिपूर्वक नित्यपूजा गर्ने बाचा गरे । त्यसपछि तान्त्रिकले भनेजस्तै गरी नवदुर्गा स-साना ढुङ्गामा परिणत भए र तान्त्रिकको कल: (पूजा गर्ने एक किसिमको टोकरी) मा प्रवेश गरे । तान्त्रिकले पनि ती देवीदेवताहरूलाई आफ्नो गोप्य कोठामा राखी प्रत्येक दिन नित्यपूजा गरे ।

त्यो गोप्य कोठामा के छ भनी तान्त्रिककी स्वास्नीले जहिले सोद्धा पनि 'त्यो कुरा भन्नु हुँदैन' भनेर तान्त्रिकले टारिदिन्थे । एक दिन आफ्नो लोग्ने नभएका बखतमा उसले ढोकाको खापाको प्वालबाट हेर्दा कोठाभित्र नाचिरहेका नवदुर्गागण कुपित भए र त्यही प्वालबाट बाहिर निस्केर बाटामा भेटिएको एउटा सुँगुरको भोग पनि लिए । बाटोमा आउँदै गर्दा नवदुर्गागण अति कुपित भइरहेको देखेपछि ती तान्त्रिकले डमरू बजाई आफ्नो तन्त्रबाट त्यो कोप शान्त पारिदिए । नवदुर्गाको कोप शान्त भइसकेपछि उनले ती देवीदेवताहरूलाई आफ्नो घर फर्कन आग्रह गरे, तर उनीहरूले फर्कन मानेनन् । कुराको सिलसिलामा भक्तपुरमा एउटा देवगृह बनाई त्यहाँ उनीहरूलाई प्रतिस्थापन गर्ने र ती देवीदेवताहरूको मुकुन्डोनाचको व्यवस्था गर्ने अनि मुकुन्डो लगाउने मानिसहरूमा ती देवीदेवताहरू प्रवेश गरी मानिसको पूजा ग्रहण गर्ने निर्णय भयो । त्यसपछि नवदुर्गागण त्यहाँबाट अकस्मात अलप भए । त्यसपछि ती तान्त्रिकले भक्तपुरको ग:छैं भनिने एउटा टोलमा देवमन्दिर बनाई त्यहाँ नवदुर्गाको प्रतिस्थापन गरे अनि त्यहाँका गथु (माली, मालाकार) हरूबाट मुकुन्डो लगाई गणनाच गरिने व्यवस्था गरिदिए ।

महाकाली, कुमारी, वाराही, ब्रह्मायणी, माहेश्वरी, वैष्णवी, इन्द्रायणी, महालक्ष्मी र त्रिपुरासुन्दरी सम्मिलित समूह नै नवदुर्गा हुन् । दुर्गाहरू नै तन्त्रमा शिवकी शक्ति पार्वतीका विभिन्न रूपहरूका प्रकटीकरण हुन् । नवदुर्गाको गणनाचमा त्रिपुरासुन्दरी सम्मिलित हुन्नन् । उनको मुकुन्डो गोप्य ढङ्गले नवदुर्गाका अन्य गोप्य वस्तुहरूसँगै द्योछें ( देवगृह) मा राखिएको हुन्छ । त्यस्तै, महालक्ष्मीको मुकुन्डो पनि नवदुर्गाको गणनाचमा हुँदैन । यी देवीलाई तान्त्रिक विधिले भित्रको कलशमा राखी देवीका रूपमा स्थापना गरिएको हुन्छ । नेवारी (नेपाल) भाषामा यी देवीलाई सिफोद्य: भनिन्छ । उनी नवदुर्गामध्येकी उच्चकोटीकी मुख्य देवी





(नवदुर्गागण)

हुन् । यी देवी तलेजूभवानीसँग सम्बन्धित छन् । नवदुर्गाको देवगृहमा यी देवीलाई कहिल्यै ननिभ्ने (अखण्ड) बत्ती बालेर सुवर्णसिंहासनमा राखिएको हुन्छ । जलघडायुक्त अमृतले भरिएको पूर्णकलशभित्र विभिन्न वस्तुहरू राखेर प्रतिस्थापित गरिएकी यी देवीले गणनाचप्रस्थानका समयमा अगुवाको भूमिका खेलेकी हुन्छिन् । एकजना गथुले यी कलशयुक्त देवीलाई आफ्नो कम्मरमा अडेस लगाउँछन् र आफ्नो बायाँ हातले समाएर दायाँ हातले डमरु बजाई बाजाको 'घिनताल' को तालमा बाटाभरि महालक्ष्मी ( सिफोद्य:) लाई अगुवा बनाएर अन्य देवीदेवताहरूलाई पछिपछि लगाएका हुन्छन् । गणनाच हुने स्थलमा पुगेपछि महालक्ष्मीलाई एउटा सानो खटमा पश्चिमाभिमुख गरी राखिन्छ ।

नवदुर्गागणमा शिव, भैरव, श्वेतभैरव, सिम्ब र दुम्ब अनि खिँबाजा, कायँबाजा, महापात्र र नकीं पनि हुन्छन् ।

पहिले द्य:चा (मुकुन्डो बनाउने माटो) १३ भागमा विभाजन गरिन्छ । अनि विधिअनुसार चित्रकारहरूले १३ वटा मुकुन्डोहरू बनाएर रङ्गाउने काम गर्दछन् । गठामुगचःन्हे (घण्टाकर्ण) को दिनदेखि एकपछि अर्को हुँदै यस धरतीमा देवीहरूको पुन: आगमन हुन्छ । तलेजूभवानीका पुजारी कर्माचार्यबाट मन्त्र पढेर बनाइएका नवदुर्गाका मुकुन्डोहरूलाई गुह्य विधिबाट जीवन्यास (चेतनाको प्रविष्टि) गराएपछि ती मुकुन्डोहरू देवीदेवता बन्दछन् । त्यसपछि बिहानै गथुहरूले भक्तपुरको ब्रह्मायणी

पीठमा नवदुर्गाका ती मुकुन्डोहरू भक्तजनहरूलाई दर्शन गराउन प्रदर्शन गराउने गर्दछन् । अनि भक्तपुरका जम्मा २४ वटा टोलहरूमा नवदुर्गाको गणनाच गर्ने गर्दछन् । यसरी भक्तपुर र अन्य आसपासका सहरहरूमा नवदुर्गाको गणनाच सकिएपछि भलभलअष्टमीको अघिल्लो मध्यरातमा मुकुन्डोधारी देवीदेवताहरू तलेजूभवानीकहाँ जाने गर्छन् । त्यो नै नवदुर्गाको त्यस वर्षको अन्तिम समय हो । मध्यरातमा तलेजु-भवानीकहाँ जाँदा नवदुर्गाहरू, अझ विशेषतः काली अति क्रोधित भएर पुगेकी हुन्छिन् । किनभने उनीहरूलाई आफ्नो मृत्युको दिन आइरहेछ भन्ने कुरा थाहा हुन्छ । त्यसैले कुनै व्यक्ति बीच बाटोमा भेटियो भने उनीहरूले ज्यान पनि लिन सक्तछन् । तलेजूस्थलमा पुगेपछि पुजारीले मन्त्रवाचन गरेर ती देवीदेवताहरूलाई सिःजा अर्थात् रातो भात खुवाउँछन्, त्यसपछि उनीहरू मर्ने स्थितिमा पुग्छन् ।

ज्येष्ठ कृष्ण अष्टमी अर्थात् भलभलअष्टमीका दिनमा यस धरतीका सबै देवीदेवताहरू 'जलय् विज्याइगु' (मुर्दातुल्य) हुन्छन् । त्यो दिन सबै देवीदेवताहरूलाई धरतीभित्र प्रवेश गर्नुपरेझैं लागिरहेको हुन्छ । हाम्रो देशका विभिन्न देवीदेवताहरूका मुकुन्डोनाचहरू पनि त्यस दिनमै आ-आफ्ना विधि अथवा चलनअनुसार सम्पन्न हुन्छन् । भलभल अष्टमीको दिनमा हुने नवदुर्गाको गणनाचमा अत्यन्तै दैन्य र बिजोगको दृश्य प्रादुर्भाव हुन आउँछ । नाच्तै जाँदा ती देवीदेवताहरू मुर्दातुल्य हुन्छन् । अतः ती १३ वटै शवरूपी मुकुन्डोहरूलाई विधिवत सेतो वस्त्रले छोपेर आ-आफ्नो मुकुन्डो आ-आफ्नै काँधमा राखी मलामीबाजाका साथ ब्रह्मायणीको मसानघाटमा लान्छन् र चितामा राखी कालभैरवको भूमिका निर्वाह गर्ने वनमाला (गथु) ले दागबत्ती दिई जलाइदिन्छन् ।[1]

कसैले भक्तपुरका नवदुर्गाको मुकुन्डोनाच लिच्छविकालदेखि चलाइएको हो भन्दछन् भने कोही भक्तपुरका राजा आनन्ददेवको पालादेखि चलाइएको हो भन्दछन् । काभ्रे जिल्लाका सात मुख्य बस्तीहरू राजा आनन्ददेवले नै कलिगत वर्ष ४१९७ मा निर्माण गराएका हुँदा यस क्षेत्रमा पनि नवदुर्गानाच ल्याइएको हुनुपर्दछ । यसै सन्दर्भमा बनेपामा पनि प्रत्येक वर्ष नवदुर्गाको नाच भइरहेको छ । नवदुर्गा बनेपाकी देवी चण्डेश्वरीसँग सम्बन्धित छन् । नवदुर्गा बनेपामा आउनुभन्दा एक हप्ताजति अगावै गथुहरू आएर चण्डेश्वरीसँग सम्बन्धित निकायका मानिसहरूकहाँ

---

१ भक्तपुरको नवदुर्गागण, लेखक : पुरुषोत्तमलोचन श्रेष्ठ, प्रकाशक : बबिता श्रेष्ठ, भक्तपुर, वि० सं० २०६०



नवदुर्गाका पासुका (पवित्र धागो) र फूल-प्रसाद दिएर नवदुर्गा आउने निश्चित दिन भनेर जान्छन् । गथुहरूले द्वारे, चण्डेश्वरीको रथ बनाउने खगुठीका मानिस, भोछिभोया खलकका मानिस, देशकी नकीं आदि व्यक्तिहरूलाई सम्पर्क राख्छन् । त्यसपछि खगुठी र सिगुठीका गुठीयारहरू (मानन्धरहरू) बनेपाको दक्षिणपट्टि धनेश्वरसमीपको एउटा चौरमा नायखिं, म्हाली, कहँ, पौंगा आदि बाजाहरूका साथमा दुईजना मानिसले नोलमा राखेर जाँडको घ्याम्पो (भैरवको प्रतीक) बोकाई जान्छन् । त्यहाँ उनीहरूले विधिपूर्वक पूजा गरेर भोज खान्छन् । 'सिकाको' नगएसम्म नवदुर्गा बनेपामा ल्याउन नहुने चलन छ ।

बनेपामा नवदुर्गा आउँदा सर्वप्रथम बनेपाका पश्चिमी द्वारको तलापुखु गणेशस्थानमा गणनाचका मुकुन्डो, पोसाक र अन्य आवश्यक सामग्रीहरू राख्छन् । मोटरमा बसेर आउन नहुने, खालि पैदल हिँडेर सामग्रीहरू बोकेर आउनुपर्ने भएकाले यहाँ गथुहरू केही समयसम्म आराम लिने गर्दछन् । तलापोखरी गणेश तलेजूसँग सम्बन्धित छन् । नवदुर्गाको गणनाचमा भाग लिने सबै गथुहरूले गणेशका अगाडि मोहनी (कालो टीका) लगाउँछन् । पोसाक र मुकुन्डो लाएका नवदुर्गागणले नगरभित्र प्रवेश गर्नका लागि आफ्नो गणनाच सुरु गर्न लाग्दा बनेपाका न्ह्च्छे मकै (सागर) ले कोतपूजा ल्याई भुइँमा कपडा बिछ्याइदिन्छन् र बिछ्याइएका कपडामा एउटा सुपारी र एउटा ल्वाङ राखेर त्यहाँ पूजा गर्दछन् । यस्तो पूजाको काम मकै खलकका मानिसहरूले पहिलेदेखि नै गर्दै आएका छन् । भुइँमा बिछ्याइएको कपडामा सुपारी र ल्वाङ राख्नुको अर्थ नवदुर्गा जाँदा सुपारीमा अडेस लगाउनु र ल्वाङको काँडाले बिझाइदिन खोज्नु हो । शुभकार्यमा यस्तो गर्नु नै मङ्गलदायक हुन्छ भन्ने मानिसहरूको धारणा छ । त्यसैले व्रतबन्ध गर्दा, गुरुजु (शाक्य, वज्राचार्य) हरूको चूडाकर्म गर्दा र मानिसहरूको भीमरथारोहण गर्दा यसरी सुपारी र ल्वाङ राखी हिँडाउने चलन छ ।

तलापोखरी गणेशस्थानबाट बनेपाको लायकू, नारायणस्थान, भोलाखा गणेशस्थान हुँदै नवदुर्गाको गणनाच तीनधारा डबलीमा पुग्दछ । त्यहाँ रोकिएर सिफोद्यः (महालक्ष्मी) लाई पश्चिमाभिमुख गरी पूर्वपट्टि एउटा सानो खटमा राखिन्छ । बाजाको तालमा आफ्नो विधिअनुसार सुरुदेखि अन्त्यसम्मको नाच हुन्छ । त्यसपछि त्यहाँबाट वकुटोलको देवी चण्डेश्वरीको रथ बिसाउने ठाउँ आइपुग्दा भोछिभोया खलकका दुई कुमारीले देवी चण्डेश्वरीलाई लशकुश गर्ने स्थानमा लैजान्छन् र नवदुर्गालाई पनि त्यहीं रोकेर नाच गर्ने गर्दछन् । त्यस बखत

भक्तजनहरूबाट आएको पूजा देवीदेवताहरूले ग्रहण गर्दछन् । साँझपख नवदुर्गालाई त्यहाँबाट थाछुटोलको नारायणस्थानमा पुऱ्याइन्छ । त्यहाँ पुगेपछि भवानी कुसलेको घरबाट ल्याइएको पूजासामग्रीबाट देवीको पूजा गरिन्छ । त्यस बखत सरकारी पूजा प्रधान खलकबाट ल्याएर देवीदेवताको पूजा गर्दछन् । राति 'कुमारी तुइकेगु' कार्य हुन्छ । त्यसपछि बनेपाको लायकूमा पनि नवदुर्गाको नाच हुन्छ । अन्य सहयोगी सबै गथुहरू त्यहाँ सुत्ने गर्दछन् ।

भोलिपल्ट बिहान अर्थात् दोस्रो दिनमा नवदुर्गाका सबै देवीदेवताहरूका मुकुन्डोहरू लायकूमा सबै भक्तजनहरूलाई दर्शन गराउन मिल्ने गरेर प्रदर्शन गराइन्छ । भक्तजनहरू लाइनमा बसेर सर्वप्रथम महालक्ष्मीलाई पूजा गर्छन् र त्यसपछि एकपछि अर्काको गर्दै सबैलाई पूजा गर्दै जान्छन् । यहाँ भक्तजनको भीड हुन्छ । बिहानको काम सकिएपछि फेरि अघिल्लो दिनजस्तै नवदुर्गाको गणनाच लायकूदेखि वकुटोलसम्म हुन्छ । फर्कंदा जब तीनधाराचोकमा आइपुग्छन्, त्यहाँ महालक्ष्मीलाई पूर्वतिर पश्चिमाभिमुख गरी सानो खटमा राखिन्छ । त्यहाँ पनि विधिवत गणनाच हुन्छ । त्यस स्थलमा भक्तजनहरू सबै देवीदेवताहरूको दर्शन गर्न आउँछन् । राति त्यहाँ 'कुमारी तुइकेगु' कार्य हुन्छ ।

नवदुर्गामा 'कुमारी तुइकेगु' रहस्यपूर्ण नाच हो । यो नाच कुमारी (नवदुर्गामध्येकी एक देवी) ले उठेर नाच्ने नाच होइन । यसमा कुमारीले भुइँमा बसेर बाजा र सम्वादको तालमा आफूले लाइरहेको मुकुन्डोको ताज भुइँमा छुवाएर बारम्बार घुमुवा लिएकी हुन्छिन् । मुकुन्डोको ताज त्यसरी भुइँमा घिसारेर घुमाउने कार्य कठिनजस्तो देखिन्छ । यो दृश्य अति नै कारुणिक जस्तो पनि देखिन्छ । 'कुमारी तुइकेगु' को अर्थ स्पष्ट रूपमा कतै लेखिएको देखिँदैन जस्तो लाग्छ । कोहीचाहिँ नवदुर्गानाचबाट थाकेर आराम लिएको भन्दछन् । तर यो कुरो असान्दर्भिक जस्तो भान हुन्छ । महालक्ष्मीको अगाडि हुने 'कुमारी तुइकेगु' को अर्थ गर्दै कसैकसैले भैरव (कुमारीका बाबु) ले एकचोटि सबैलाई खाना बाँडेर खुवाएका तर कुमारीलाई भने रित्तो पात्र दिएकाले उनलाई साह्रै चित्त दुखेर रोएकी भन्ने गरेका छन् ।

'कुमारी तुइकेगु' को हाउभाउ हेर्दा यी देवीले अलापविलाप गरेको जस्तो देखिन्छ । कुनै पनि छोरीचेली अथवा कन्याको दुःख हेर्नु हुँदैन भनी मानिसहरू भन्ने गर्दछन् । देवी कुमारी पनि कन्या नै हुन् । त्यसैले धेरैजसो मानिसहरूले 'कुमारी तुइकेगु' हेरेका हुँदैनन् । 'कुमारी तुइकेगु' भन्दा अगाडि बाजा बजाउने एकजना गथुले 'आँट हुनेले मात्र हेर, आँट



हुनेले घर फर्के पनि हुन्छ' भन्दछन् । तर पनि कसैकसैले त्यो हेर्ने गर्दछन् ।

'कुमारी तुइकेगु' सकिएपछि भोछिभोया खलकका नाइके (नायः) ले नवदुर्गाकहाँ कलःपूजा (ढक्कन भएको र झोलाएर बोक्ने ढकीपूजा) ल्याउँछन् । नाइकेले सो पूजा भैरवलाई दिन्छन् र भैरवले विधिअनुसार महालक्ष्मीको पूजा गरिसकेपछि एउटा सली (माटोको सानो कचौरा) मा दसवटा सुपारी राखी त्यसमाथि पासुका (पवित्र धागो) र फूल राख्छन् अनि भोछिभोयाका नाइकेलाई दिन्छन् । भोछिभोयाका नाइकेले भैरवले दिएको उक्त सुपारी घरमा लगेर सुरक्षित ढङ्गले राख्तछन् । भोछिभोया खलकको देवाली वैशाख शुक्लपक्ष अष्टमीका दिनमा चण्डेश्वरीमा हुन्छ । चण्डेश्वरी भोछिभोयाहरूकी कुलदेवी हुन् । देवालीपूजामा नवदुर्गाबाट प्राप्त ती दसवटा सुपारीहरू चण्डेश्वरीलाई चढाउँछन् । पूजा सकिएपछि भोछिभोया खलकले नै ती दसवटा सुपारी लिएर त्यहाँबाट सोझै लायकूमा गई द्वारेलाई बुझाउँछन् । द्वारेले चण्डीपूर्णिमाको ३-४ दिनअगाडि ती सुपारी काठमाडौंको हनुमानढोकामा बुझाएर जात्राका लागि त्यहाँबाट एउटा तरबार लिएर आउँछन् । यसपछि बनेपामा चण्डेश्वरीको जात्रा हुने गर्छ ।

बनेपामा नवदुर्गा आएको तेस्रो दिनमा बनेपा तीनधाराचोकमा श्वेतभैरवले माछा मार्ने (ङा लाकिगु) कार्य हेर्न दर्शकहरूको भीड लाग्छ । करिब २ बजेतिर श्वेतभैरव आफ्नो शिरमा सेतो खास्टो राखेर आउँछन् । शिरमा खास्टो राखेर आउने जोसुकै देखे पनि महाकालीलाई सहिनसक्नु हुन्छ । त्यसैले श्वेतभैरव शिरमा त्यसरी खास्टो राखेर आएको देखेर महाकाली क्रोधित भई खास्टो खोसेर लिन्छिन् । त्यस बखत श्वेतभैरव जिल्ल परेको हाउभाउ त्यहाँ देखिन्छ । माछा मार्नका लागि खास्टो पनि आवश्यक भएकाले कालीबाट खास्टो लिन खोज्छन्, तर लिन सक्तैनन् । अनि श्वेतभैरवले कालीलाई रिझाउन एउटा भालेका लागि दर्शकहरूबाट रकम उठाउने काम गर्छन् । भैरवले दर्शकहरूबाट रकम जम्मा गर्छन् । रकम उठाइसकेपछि एउटा भाले लिएर कालीलाई टक्र्याउन खोज्दा खास्टो नदिने किसिमले उनी अर्कातर्फ जान्छिन् । अनि श्वेतभैरवले पछिपछि लागेर बिन्तीभाउ गर्दै त्यो भाले लिन भनी आग्रह गरेको दृश्य त्यहाँ देखापर्छ । अन्तमा काली रिसले उफ्रेर श्वेतभैरवको हातबाट भाले खोसेर लिई खास्टो श्वेतभैरवतर्फ फालिदिन्छिन् र तत्कालै त्यस भालेको भोग लिन्छिन् ।

श्वेतभैरवबाट खास्टो खोसेर दिने, श्वेतभैरवले कालीलाई रिझाउन खोज्ने र कालीले श्वेतभैरवबाट भाले खोसेर खास्टो फिर्ता दिने जुन दृश्य

त्यहाँ देखापर्छ, त्यो घतलाग्दो नाटकीय दृश्यजस्तो छ । त्यसपछि एउटा पुलु (मान्द्रो) लिएर श्वेतभैरवबाट माछा मार्ने काम हुन्छ । मान्द्रो मृत्युसँग सम्बन्धित छ । मानिस मर्दा लास बोकेर लान मान्द्रो चाहिन्छ । फेरि यस धरतीका सबै देवीदेवताहरू भलभलअष्टमीका दिन मुर्दातुल्य हुन्छन् । त्यसैले स्वयम्भू महाचैत्य, खास्ती चैत्य, पशुपतिनाथको मन्दिर आदिका गजुरहरूलाई मान्द्रोले घण्टाकर्णको अघिल्लो दिनसम्म छोप्ने गरिन्छ । त्यसले देवीदेवताहरू यहाँ छैनन् भन्ने सङ्केत गर्दछ । नवदुर्गाको श्वेतभैरवले मान्द्रो प्रयोग गरी माछा मार्नुको अर्थ पनि त्यही हो । जाल छरेर माछा मारेजस्तै श्वेतभैरवले पनि मान्द्रो मान्छेहरूको हुलमा छरेर माछा मार्न खोज्दछन् । श्वेतभैरवको माछा मार्ने काममा मानिसहरू नै माछा मानिन्छन् । त्यस कार्यमा आफू फसिएला भनेर मानिसहरू भागेर पर-पर बस्न खोज्छन् । केही गरी श्वेतभैरव दौडेर आए भने पनि मानिसहरू धेरै परसम्म भाग्छन् । किनभने माछाका रूपमा आफू फसियो भने त्यो वर्ष त्यस व्यक्तिका लागि अशुभ हुन्छ अथवा ऊ मर्न पनि सक्छ भन्ने विश्वास गरिएको पाइन्छ ।

यसरी माछा मार्ने काम बनेपामा करिब डेढ घन्टाजति हुन्छ । माछा मार्ने कामका लागि जेजति खर्च भएको हुन्छ, त्यो सबै बनेपा नगरपालिकाका तर्फबाट गर्ने गरिन्छ । यसरी त्यहाँको अन्य विधिको काम सकिएपछि साँझपख नवदुर्गागण लायकूमा जान्छन् ।

लायकूमा विधिवत रूपमा नवदुर्गागणको गणनाच हुन्छ । नाचका क्रममा त्यहाँ पनि 'कुमारी तुइकेगु' हुन्छ । पश्चिमाभिमुख गरी सानो खटमा राखिएकी महालक्ष्मीका अगाडि कुमारीबाट 'कुमारी तुइकेगु' हुन्छ । त्यस बखत त्यहाँ धेरै दर्शकहरूको भीड हुन्छ । त्यसपछि त्यहाँ मुबाहाँ ( सुँगुर) छोड्ने काम हुन्छ । दर्शकहरूले त्यो सुँगुर कतैबाट पनि भाग्न नमिल्ने गरी घेरामा पारेका हुन्छन् । सुँगुर यताउता दगुरिरहन्छ । अन्त्यमा भैरवले सुँगुरलाई समाती त्यसलाई महालक्ष्मीका अगाडि लान्छन्, आफ्ना हातका औँलाका नङ्ग्राले सुँगुरको छाला च्याती हात घुसारेर मुटु बाहिर निकाल्छन् र सिफोद्यःलाई चढाउँछन् ।

बाजाको तालमा सुरुदेखि अन्त्यसम्मको विधिपूर्वक अबेरसम्म त्यहाँ नवदुर्गानाच हुन्छ । त्यस बखत त्यहाँ देशकी नर्कींबाट कोतपूजा ल्याई देवताको पूजा हुन्छ । पूजामा अन्य सामग्रीहरूका साथै दही, रक्सी, जाँड र समयबजी पनि चाहिन्छ । यी सामानहरू बनेपाका द्वारेबाट पूर्ति गर्ने गरिन्छ ।



# बनेपाको लायकू



(बनेपाको लायकू)

काठमाडौं उपत्यका तलाउका रूपमा छँदा बनेपा एक सानो राज्यका रूपमा थियो भनी इतिहासविद्हरू बताउँछन् । बौद्ध आख्यानको थ्यासफू (हस्तलिखित पुस्तक) मा बनेपालाई 'धर्मपुर' भनी उल्लेख गरिएको छ । धर्मपुरका राजा धन थिए । यी राजाका छोरा सुद्धन राजकुमार थिए । बनेपालाई धर्मपुर भनी उल्लेख गरिएका ताडपत्रहरू अहिले पनि नभएका होइनन् । राजा बस्ने भएकाले यहाँ राजदरबार अवश्य नै हुनुपर्दथ्यो ।

राजा आनन्ददेव (वि० सं० १२०३ – १२२४) ले भक्तपुरको राजधानी बसालेपछि प्राचीन मल्लकालका राजाहरू र त्यसभन्दा अघिका नेपाल उपत्यकाका शासकहरूको राजधानी भक्तपुर नै थियो, तापनि जयभीमदेव आदि प्राचीन मल्लकालका एकथरी राजवंशको मूल घर बनेपामा थियो । यसकारण उक्त राजवंश त्यस बेलाको नेपालको इतिहासमा भ्वन्त अर्थात् बनेपाली भनी प्रसिद्ध थियो ।[1] बनेपाली राजा

[1] गौतमवज्र वज्राचार्य : हनुमानढोका राजदरबार, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, काठमाडौं, वि० सं० २०२३

जयदेवको राज्याभिषेक देउपाटनको जयवागेश्वरीको आसपासमा एन्दन भन्ने ठाउँमा भएको थियो । बनेपामा राजा भएका हुँदा त्यस बखत पनि यहाँ राजदरबार अवश्य नै थियो भन्ने स्पष्ट छ । ने० सं० ४६७ (वि० सं० १४०४) को श्रावण कृष्ण चतुर्थीका दिन दुवै राजकुलको अनुमतिले सबैको सल्लाहअनुसार जयदेव राजा बनाइए ('गोपाल राजवंशावली' को पत्र नं० २८) र ने० सं० ४६७ मा नै वैशाख शुक्ल सप्तमीका दिन जयराजदेवकी पत्नी रुद्रमदेवीका तर्फबाट जयार्जुनदेव जन्मे (ऐ० ऐ० पत्र नं० २८) । जयराजदेवको शेषपछि जयार्जुनदेव बनेपाका राजा बने । त्यसैले बनेपामा पनि राजा बस्ने दरबार थियो भन्ने बुझिन्छ । राजा बसेर शासन चलाउने दरबार नै लायकू हो । लायकू भनेको राजकुल अथवा लालकुल हो । लालकुलबाट लायकू शब्दको व्युत्पत्ति भएको हो । लायकू शब्द मल्लशासनको मध्यकालदेखि चल्दै आएको पाइन्छ ।

मध्यकालीन मल्लराजाहरूका राज्यमा लायकू हुन्थे । यसको क्षेत्र ठूलो हुन्थ्यो । त्यहाँ नाटक मञ्चन गर्न र यस्तै कामहरू गर्न-गराउन डबली, पानीका लागि पोखरी, ढुङ्गेधारा, इनार, विविध किसिमका कार्य गर्न चोकहरूका साथै लक्ष्मी, सरस्वती, गणेश, भगवती, तलेजु, नारायण, महादेव आदि विविध देवीदेवताका मूर्तिहरू पनि प्रतिष्ठापित गरिएका हुन्थे । यीबाहेक मुख्य दरबारको बाहिरपट्टि एउटा पाटी पनि हुने गर्दथ्यो । लिच्छविराजा अंशुवर्माका समकालीन उत्तरभारतका राजा हर्षको दरबारका विषयमा चर्चा गर्दा संस्कृत साहित्यका महाकवि वाणले राजकुलको मध्यभागतिर प्रमुख राजभवन, गुह्योद्यान (दरबारभित्रको बगैँचा), राजदरबारभित्रको पोखरी, व्यायामभूमि, स्नानगृह, भान्साघर, आहारमण्डप आदिको चर्चा गरेका छन् (गौतमवज्र, ऐ० ऐ०) ।

काठमाडौँको लायकू दरबार भनेको हनुमानढोका हो । राजा प्रताप मल्लले दरबारको ढोकामा हनुमानको मूर्ति स्थापना गरेदेखि त्यसको नाम हनुमानढोका भएको हो । मल्लराजाहरू आफूलाई रामचन्द्रका वंशज सम्झने भएका हुँदा रामचन्द्रका भक्त हनुमानकै कारणबाट रामचन्द्रले लडाइँमा विजय प्राप्त गरेकाले आफ्नो दरबार सुरक्षित होस् भन्ने हेतुले प्रताप मल्लले हनुमानको स्थापना गरेका थिए । प्रताप मल्लका पालामा भन्दा पहिले यसको नाम लायकू नै थियो । यसको क्षेत्र भूगोलपार्कको दक्षिणपट्टि हाल नेपाल बैङ्क लिमिटेड रहेको क्षेत्रसम्म, वसन्तपुरचोक, मरुसत्तल, मखनचोकदेखि प्याफलसम्म विस्तृत थियो । वि० सं० १९९० को महाभूकम्पपछि जुद्धसडक बन्यो र त्यसै बेलादेखि मात्र त्यो ठाउँ हनुमानढोकाबाट छुट्टियो (गौतमवज्र, ऐ० ऐ०) । मरुगणेश (अशोक



विनायक) राजदरबारसँग सम्बन्धित देवता हुन् । दरबारको जुनसुकै ठूलो कामको शुभारम्भ गर्दा यी देवताको विधिवत पूजा र दर्शन गर्ने गरिन्थ्यो । त्यस्तै, भक्तपुरको लायकूक्षेत्र पनि विशाल नै थियो । तर हिजोआज अन्य ठाउँको लायकूजस्तै यहाँको लायकू पनि साँघुरिएर गएको छ ।

सुरक्षाका लागि ठूलो ढुङ्गाको पर्खालले घेरेर आठ दिशामा आठ पोखरी, आठ प्रवेशद्वार, आठ पाटी र आठ गणेशको स्थापना गरेर कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले निर्माण गरेको बनेपाको पश्चिमी ढोका पर्ने पर्खालभित्र यहाँको लायकूक्षेत्र रहेको छ । तलापोखरी, तलापुखु गणेशदेखि यता अहिलेका ४ र ५ नं० वडासमितिको कार्यालयदेखि विद्युत प्राधिकरण रहेको स्थानसम्म, पूर्वतिर श्री गोपालदास बादेको बगैँचाको पर्खालबाहिरको डबलीसम्म, दक्षिणपट्टि क्वलाःगणेशको पोखरीदेखि उत्तर केही ठाउँ छाडी सबै लायकूक्षेत्र हो । अहिले घरेलु र अन्य कारणहरूले गर्दा यो क्षेत्र पनि साँघुरिएर गएको छ । पहिले यहाँ सातवटा चोकहरू रहेका थिए भनी बूढापाकाहरू बताउँछन् ।

सातगाउँ (साँगा, नाला, बनेपा, धुलिखेल, श्रीखण्डपुर, चौकोट र पनौती) का बीचमा अवस्थित बनेपा पहिले राजधानी कहलिएको थियो । बनेपालाई राजधानी भनी उल्लेख गरिएका अभिलेखहरू पनि नपाइएका होइनन् । यहाँका राजा बखत-बखतमा सम्भवतः साँगा, श्रीखण्डपुर, पनौती आदि ठाउँमा गएर बसेका हुनुपर्दथ्यो । त्यसैले पनौती, साँगा, श्रीखण्डपुर आदि ठाउँमा लायकूहरू छन् भनी मानिसहरू अहिले पनि भन्ने गर्दछन् । त्यहाँ तलेजुभवानी र लायकूसम्बन्धी सामग्रीहरू अद्यापि नभएका होइनन् । राजा बस्ने ती राजगृहहरू पनि लायकू नै थिए अथवा ती ठाउँहरूमा देशनायक वा क्वाथनायक बस्ने गरेको हुनुपर्दथ्यो । त्यहाँ पनि दसैँ आदि पर्वमा विधिको पूजा हुने गर्दथ्यो ।

तलापुखुसँगैको तलापुखुगणेश बनेपाका अष्टगणेशमध्ये पश्चिमी द्वारमा अवस्थित काठमाडौँको मरुगणेशजस्तै दरबारसँग अथवा तलेजुसँग सम्बन्धित देवता हुन् । राज्यारोहण र अन्य राजकाजसम्बन्धी कार्यमा यी देवताको विधिवत पूजा र दर्शन हुने गर्दथ्यो । बनेपामा नवदुर्गाको नाच ल्याउँदा कालो टीका लगाएर गथुहरूले यी देवताको विधिवत दर्शन गरेपछि गणनाच सुरु भएर बजार भित्रिने गर्दछ । बनेपाको लायकूचौरको उत्तरपट्टि मूल सडकछेउको अलि तलतिर दक्षिण र पूर्वतर्फ फर्केका दुई ढुङ्गेधाराहरू छन् । ती ढुङ्गेधारापरिसरमा विविध देवीदेवताहरू प्रतिष्ठापित गरिएका छन् ।


(लायक्‌छेउको ढुङ्गधारो)


(लायकूछेउको चोरी भइसकेको सरस्वतीको मूर्ति)

त्यहाँ लिच्छविकालीन दुई साना बौद्ध स्तुपहरू, गणेशको मूर्ति र अन्य ऐतिहासिक र पुरातात्त्विक वस्तुहरू छन् । त्यहाँ प्रतिष्ठापित चौधौं शताब्दीको राम्रो कालो ढुङ्गामा कुँदिएको सरस्वतीको सुन्दर मूर्ति सन्



१८७० मा चोरिएको थियो ।[२] यहाँको पूर्वतर्फ फर्केको ढुङ्गालाई तलाहिटी अर्थात् तलेजुसँग सम्बन्धित धारा भनिन्छ । दसैंमा घटस्थापना गर्न र असारको पूर्वसन्ध्यामा गरिने देशपूजामा देशकी नकींले यहाँ कोतपूजा राख्ने क्रममा त्यही तलाहिटी (धारा) बाट जल ल्याउनुपर्ने चलन अद्यापि चल्दै आएको छ । चण्डेश्वरीको रथजात्रा यहाँ आएपछि देवीलाई लसकुस (स्वागत) गर्नुपर्दछ । रथजात्राको अवधिभर ९-१० पटक चण्डेश्वरीलाई पूजा राख्न त्यही तलाहिटी (धारा) बाटै जल ल्याउनुपर्दछ । आजसम्म यही विधि चल्दै आएको पाइन्छ ।


(सूर्यमूर्ति)

ग्रहनायक सूर्य सम्पूर्ण जगत्का आत्मा हुन् र उनी नै सबै प्राणीहरूका आँखा खुलाइदिने देवता हुन् । ब्रह्मा, विष्णु र महेश्वरका संयुक्त रूप नै सूर्य हुन् ।[३] सात रङ्गका प्रतीक सात घोडाहरूलाई तान्न लगाएर अरुणलाई सारथि बनाई सूर्यका दुई सँगिनी उषा र प्रत्युषालाई दुईतिर राखिएको बनेपाको सूर्यमूर्तिलाई बनेपाकै उत्कृष्ट कलाकृतिमध्ये एक मानिन्छ । उक्त सूर्यमूर्ति यहाँको लायकूदरबारनजिकको ढुङ्गेधारा परिसरमा वि० सं० १४५० मा स्थापना गरिएकोमा चोरेर लाने भयले हाल बनेपा नगरपालिकामा सुरक्षित राखिएको छ ।

---

[२] Lain S. Bangdel : Stolen Images of Nepal, Publisher : Royal Nepal Acedemy, Kathmandu, 1998

[३] विरिञ्चिनारायण, जीतबहादुर मानन्धर, प्रकाशिका : श्रीमती तारादेवी मानन्धर, लायकुसाल, काठमाडौं, २०४६

लायकूचौरको बीच भागमा मूल सडकछेउ पहिले तलेजुभवानीको मन्दिर थियो । लामो समयसम्म बनेपा एक स्वतन्त्र राज्यका रूपमा रहन नसकी पछि भक्तपुर राज्यसँग मिल्न गएकाले यहाँको लायकूदरबारभित्रका मन्दिर र देवदेवीका मूर्तिहरू सुरक्षाका अभावले लोप भए । तलेजुमन्दिर नभए पनि म सानो छँदा त्यहाँ पूजा गरी राखिएका विविध देवदेवीका मूर्तिहरू थिए । त्यो ठाउँ अलिकति खाल्डोजस्तो थियो । तत्कालीन ग्रामविकास कार्यालयका कर्मचारी गणेशलाल सिकुले हाँकेको कार्यालयको गाडी त्यस खाल्डोमा परी दुर्घटनाग्रस्त भएपछि खाल्डो पुरेर चौर फराकिलो पारिएको थियो । तलेजुभवानीको अस्तित्व पनि त्यही बेलादेखि समाप्त भएको थियो । तर पनि हरेक वर्ष चण्डेश्वरीको जात्रामा तलेजुभवानी रहेको ठाउँमा कोतपूजा राखी एउटा हाँस बलि दिने चलन अद्यापि चल्दै आएको छ ।

स्वर्गका राजा इन्द्रले लामो समय तपस्या गरेबापत महादेवबाट हरेक दिन विधिपूर्वक पूजा गर्ने गरी प्राप्त श्रीयन्त्रस्वरूप तलेजुभवानीलाई लङ्काका राजा रावणका छोरा मेघनादले इन्द्रलाई लडाइँमा हराई स्वर्गबाट लङ्कामा ल्याएका थिए । पछि रावणलाई रामले लडाइँमा बध गरिसकेपछि ती देवीलाई अयोध्यामा ल्याएका थिए । ने० सं० ४४४ मा सिम्रौनगढका राजा हरिसिंहदेव मुसलमानहरूको हमलाबाट बच्न आफ्नी कुलदेवी तलेजु (तुलजा) भवानीलाई लिएर नेपाल आएका थिए (देवमाला वंशावली) । त्यसै बेलादेखि तलेजूभवानीलाई भक्तपुरमा स्थापना गरिएको हो भन्ने किंवदन्ती छ । अलौकिक शक्तियुक्त श्रीयन्त्रस्वरूप नै तलेजुभवानी हुन् । यी देवी यहाँ ल्याउँदा नेपाल उपत्यकामा अरि मल्ल र रुद्र मल्लको संयुक्त शासन चलेको थियो । अतः तलेजुको मूल घर (मन्दिर) भक्तपुरमा हो । उनी नै मल्लराजाहरूकी कुलदेवी हुन् । पछि मल्लराज्य टुक्राटुक्रा भएर आ-आफ्नै किसिमका स्वतन्त्र राज्य खडा भए । त्यही सन्दर्भमा बनेपा पनि एक स्वतन्त्र राज्य बन्यो । अरू ठाउँहरूमा जस्तै यहाँ पनि मन्दिर बनाएर मल्लराजाले आफ्नी कुलदेवी तलेजूभवानीलाई स्थापित गराए । मल्लराजाहरूले आफ्नी कुलदेवी तलेजुलाई विधिपूर्वक पूजा नगरीकन केही पनि नगर्ने चलन थियो । मल्लराजाहरूका राज्यमा तलेजुका दुई मन्दिरहरू हुने गर्दथे – एउटा तलेजूभवानीको प्रतिमा स्थापना गरेर बनाइएको मन्दिर र अर्को श्रीयन्त्र राखी बनाइएको मन्दिर । बनेपामा पनि तलेजुका दुई मन्दिर थिए । श्रीयन्त्र स्थापना गरेर बनाइएको मन्दिर तीनधारामा रहेको दक्षिणकालीको मन्दिरपछाडि रहेको थियो । त्यहाँ उत्खनन गरे श्रीयन्त्रको अवशेष फेला पर्ने सम्भावना छ । त्यहाँ दुई सिंहहरू पनि हुनुपर्छ । किनभने सिंह तलेजूको वाहन हो । बनेपा



लायकूको तलेजुमन्दिरअगाडि एउटा राम्रो पोखरी थियो । त्यस ठाउँमा तेलिया इँटा छापिएको पानी नभए पनि पोखरीका रूपमा देखिने बूढापाकाहरू बताउँछन् । भनिन्छ त्यस पोखरीमा मल्लरानीहरू नुहाउने गर्दथे । त्यहाँ दुई इनारहरू एउटा हाल बनाइरहेको मञ्चको दायाँपट्टि र अर्को शिक्षासदन मा० वि० को परिसरतिर छन् ।

स्व० रत्नलाल, धर्मलाल बादेको घरअगाडि एउटा डबली छ । त्यो लायकूडबली हो । भनिन्छ त्यस डबलीमा पहिले विभिन्न पर्वहरूमा देवदेवीका कामहरू हुने गर्दथे र हाल पनि केही सांस्कृतिक पर्वका कामहरू भइरहेका छन् । काठमाडौं नरदेवीको श्वेतकालीको मुकुन्डोनाच प्रत्येक १२ वर्षमा यहाँ ल्याएर त्यही डबलीमा नचाउने गरिन्थ्यो । त्यो मुकुन्डोनाच यहाँ नल्याएको धेरै वर्ष भइसकेको छ । श्वेतकाली बनेपाकी चण्डेश्वरीकी आमा हुन् । त्यसैले त्यो मुकुन्डोनाच काठमाडौंबाट यहाँ ल्याउने गरिन्थ्यो । चण्डेश्वरीको कथासँग गाँसिएको उक्त मुकुन्डोनाच यहाँ नल्याउँदा एउटा सांस्कृतिक परम्परा लोप भएको छ । त्यस्तै, ३२ गणसहितको मुकुन्डो लगाएर नाच्ने चण्डेश्वरीको कुमारीनाच सबैभन्दा पहिले यही डबलीमा नचाउने गरिन्थ्यो । त्यो नाच हराएको पनि एक शताब्दीभन्दा बढी भइसक्यो । पहिलेका मल्लराजाहरू सङ्गीत, कला, साहित्य र संस्कृतिका प्रेमी थिए । उनीहरू नाटक पनि लेख्ने गर्दथे । बनेपाका राजा रण मल्ल (ने० सं० ६२२ तिर) ले लेखेको नाटक पनि सबैभन्दा पहिले यहीं मञ्चन गरिएको थियो । श्रावण शुक्ल पूर्णिमा (गुन्हीपुन्हि) का दिन र त्यसको भोलिपल्ट त्यस डबलीमा यज्ञ हुन्थ्यो । श्री गोपालदास बादेको कथनअनुसार देशका नाइकेको संलग्नतामा भएको उक्त यज्ञमा कुनै गुठीका नयाँ देव वा देवीलाई स्थापना गर्नुपर्दा त्यहाँ ल्याएर ती देवीदेवतालाई विधिपूर्वक जीवन्यास गर्ने चलन थियो । पूर्णिमाकै दिन त्यहाँ विधिपूर्वक साँछो नयकेगु (गाईलाई सरकारी स्तरबाट गहुँ खुवाउने) चलन अद्यापि चल्दै आएको छ । त्यस बखत त्यहाँ कहँ, पोँगा, नायखिँ, छुस्या, मुहाली, ढोलक आदि विविध बाजाहरू बजाउने चलन अहिलेसम्म चल्दै आएको छ ।

लायकूदरबारको परिसरबाहिर एउटा पाटी अवश्य नै हुनुपर्थ्यो । तर त्यस पाटीका बारेमा कसैलाई थाहा नभएको पाइयो । उक्त पाटीमा बसेर मुहाली (सहनाई) बजाउने दुई कुसुलेहरू, ढोलक बजाउने एक दोँ (डोम ?) र माता बजाउने अर्को एकजना गरी जम्मा चारजनाले बिहान-बिहान देवी तुलजाभवानीलाई मङ्गलधुन सुनाउने गर्थे । त्यसका लागि जग्गा दत्त राखिएको हुन्थ्यो । म सानो छँदा बनेपाकै तुकंप्वःगणेशमा पनि

त्यहाँको पाटीमा बसेर कालु जुगी (कालु नाम गरेको कुसुले) ले बिहान-बिहान मुहाली बजाएको सुन्ने गर्दथेँ । तुकंप्व:गणेशमा यसरी बाजा बजाउनेहरूलाई जग्गा (करेसाबारी) दत्त राखिदिएको कुरा अभिलेखले देखाउँछ ।[४]

मल्ल राजाहरूका महामन्त्री हुन्थे । बनेपाका राजा जयराजदेवका महामन्त्री ज्योतिराम वर्द्धन थिए । ज्योतिराम वर्द्धनले राजा जयराजदेवलाई ठूलो सहयोग गरेको कुरा 'गोपाल राजवंशावली' मा उल्लेख गरिएको छ । ज्योतिरामका छोरा अनेकराम वर्द्धन पछि महाथ (महामन्त्री) थिए । अर्जुन मल्लहरू र रामवर्द्धनहरू बनेपाली थिए ।[५] जयसिंहराम वर्द्धन पनि बनेपाका राजा जयार्जुन मल्लका महामन्त्री थिए । यी रामवर्द्धनहरू क्वाथमा बस्थे । क्वाथको अर्थ दरबार अथवा किल्ला, गढ हो । शत्रुहरू हमला गर्न आउँदा त्यही गढबाट देशलाई बचाउने काम गरिन्थ्यो । अहिले पनि त्यस ठाउँलाई बनेपालीहरू क्वाथ नै भन्ने गर्दछन् ।

लायकू मल्लराजाहरूको अत्यन्तै महत्त्वपूर्ण ऐतिहासिक थलो हो । त्यहाँका पुरातात्त्विक वस्तुहरू, कलाकृतिहरू र निर्माणकार्यको संरचना कम अर्थपूर्ण, कम मूल्य र कम महत्त्वका होइनन् । भक्तपुरको लायकूदरबारको ५५ झ्याल, त्यहाँभित्रका टुँडालमा कुँदिएका सुन्दर र अर्थपूर्ण काष्ठकलाकृतिहरू र मूर्तिहरू, त्यस्तै काठमाडौँको हनुमानढोकामा राखिएका शिलालेखहरू र अन्य कलापूर्ण मूर्ति र मन्दिरहरू, अनि पाटनको लायकूदरबारभित्रका सम्पदाहरू कति आकर्षक, गहकिला र अर्थपूर्ण छन् भन्ने कुरा गरिसाध्य नै छैन । तर बनेपाको लायकूसम्बन्धी पुरातात्त्विक वस्तुहरू र यहाँका सांस्कृतिक सम्पदाहरूको अवशेष बाँकी भएको देखापरेको छैन । इतिहास देशका लागि महत्त्वपूर्ण हुने भएकाले सम्बन्धित निकायले बनेपाको लायकूदरबारको उत्खनन गरेर विज्ञहरूबाट तथ्य पत्ता लगाउनु आवश्यक छ ।



४ ज्ञानकाजी मानन्धर : बनेपा-स्तवन, पृष्ठ २४ र २५

५ धनवज्र वज्राचार्य : शक्तिशाली भारदार रामवर्द्धनहरू र तत्कालीन नेपाल, पूर्णिमा, अङ्क ७, वि० सं० २०२२



# धुलिखेल : एक परिचय

पूर्वमा प्रकृतिको एउटा सुन्दर पर्दाजस्तै देखिने हरियो वन, पश्चिममा समतल जग्गाको फाँटसँगै बनेपा सहर, उत्तरमा पहाड-पर्वतका शृङ्खला हुँदै हिमालयको अति सुन्दर दृश्य र दक्षिणमा चौकोट र अन्य समतल फाँटको पृष्ठभूमिमा करिब ५३३० फिटको उचाइको समतल जग्गामा अवस्थित धुलिखेल सुन्दर र रमणीय सहर हो । उचाइमा रहेको सहर भएका कारणले गर्दा नै कुनै-कुनै अभिलेखहरूमा यस सहरलाई 'शिखरपुरी' भनी उल्लेख गरिएको हुनुपर्छ ।

करिब ६२ वर्षपहिले धुलिखेलका एकजना बूढा मानिस मेरा बुबासँग भेट गर्न आएका थिए । त्यस बखत कुराको सिलसिलामा मेरा बुबाले 'आठ दिशामा आठ गणेशहरू दिक्पालका रूपमा प्रतिष्ठापित गरी हाम्रो बनेपा कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले बनाएका थिए' भन्नुहुँदा अलि जान्ने-बुझ्नेजस्तै देखिने धुलिखेलका ती व्यक्तिले पनि 'पूर्व, पश्चिम, उत्तर र दक्षिण गरी चार दिशामा चार गणेशको स्थापना गरी धुलिखेलको निर्माण पनि उनैले गरेका हुन्' भनेका थिए । त्यस बखत म १३-१४ वर्षको थिएँ । अहिले पनि धुलिखेलका चार दिशामा चारवटा गणेश भएको बोध हुन्छ ।

ने० सं० २२० को 'आर्योष्णीय विजयमान धारपी' नामक ग्रन्थमा उल्लिखित 'धवलश्रोत' यहाँ मननयोग्य छ । अनि यही 'धवलश्रोत' बाट धवलखेल, धवलख्यो, धवलख्या, धौख्यो, धलिख्यो भई वर्तमान 'धुलिखेल' नाम रहन गएको देखिन्छ ।[१] 'गोपाल राजवंशावली' को अतिरिक्त पत्रमा धुलिखेललाई 'धरिक्षल' भनी उल्लेख गरिएजस्तै अन्य अभिलेखहरूमा धरिखेल, धलिखेल, धौख्य: आदि नामहरू उल्लेख गरिएको पाइएको छ ।

राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा बनेपालगायत सात गाउँको निर्माण गर्दा धुलिखेलको पनि निर्माण गरेको कुरा वंशावलीमा उल्लेख गरिएको छ । धुलिखेल धेरै माथिल्लो भागमा परेको सहर भएको हुनाले यहाँ हुरीबतासले खूबै धूलो उडाउने गर्थ्यो, त्यसै कारणले यस

१ धुलिखेल : एक सङ्क्षिप्त परिचय, हरिराम जोशी, Souvenir, Nepal Jaycees, XXIX National Convention, December 20-22, 2002

सहरलाई धुलिखेल (धूलो उड्ने सहर) भनिएको हो भन्ने धारणा पनि मानिसहरूमा नभएको भने होइन ।

जे होस्, धुलिखेल प्राकृतिक सौन्दर्यका दृश्यहरू अवलोकन गर्ने एक अत्यन्त मनमोहक थलो हो । यहाँबाट हिमशिखरका सुन्दर दृश्यहरू हेर्न पर्यटकहरू यहाँ धेरै सङ्ख्यामा आउने गर्दछन् । यो अहिले जिल्लाको सदरमुकाम पनि हो । यहाँ पर्यटन-विकासका धेरै सम्भावनाहरू छन् ।

धुलिखेलको पूर्वी भागलाई वटोल भन्ने गर्दछन् । नेवारी (नेपाल) भाषामा 'व' को अर्थ 'पूर्व' हो । बनेपाको पूर्वपट्टिको टोललाई पनि वकुटोल भन्दछन् । त्यस्तै, माथिल्लो भाग च्वयुछेंटोल हो । नेवारी भाषामा 'च्वय्' को अर्थ 'माथिल्लो' हो । बीचको भागलाई 'लाछी' भन्ने गर्दछन् । 'लाछी' शब्द पनि नेवारी भाषाकै हो । त्यसको अर्थ 'बजार' हो । त्यसरी यी ठाउँका नामहरूका लागि नेवारी भाषाका शब्दहरू अहिलेसम्म नै चलिरहेकाले धुलिखेल नेवारहरूको बस्ती हो भन्ने कुराको बोध हुन्छ । त्यसमाथि पनि यहाँका मानिसहरूले प्रयोग गर्ने कुनै-कुनै शब्दहरू अत्यन्तै ठेट प्रकारका छन्, जुन शब्दहरू काठमाडौँका नेवारहरूले प्रयोग गर्न छाडिसकेका छन् ।

धुलिखेलकी आराध्य देवी त्यहाँको च्वयुछेंटोलको उचाइमा प्रतिष्ठापित देवी भगवती हुन् । यी देवीका विषयमा एउटा रोचक कथा पनि छ ।

परापूर्वकालमा एक साँझ धुलिखेल र श्रीखण्डपुरको फाँटको बीचमा एउटी केटी रोइरहेकी थिइन् । त्यसरी एउटी विलक्षण केटी रोइरहेको देखेर श्रीखण्डपुरका मानिसहरूले ती केटीका विषयमा जानकारी लिए । कुराकानीका सिलसिलामा उनी देवी भगवती हुन् भनी उनीहरूलाई ज्ञान भयो । वास्तवमा बसोवासका लागि उनले ठाउँ खोजिरहेकी थिइन् । श्रीखण्डपुरका मानिसहरूले उनलाई लिएर जान खोज्दा सुनका गहनाहरू दिए मात्र देवीले उनीहरूसँग जाने कुरा गरेकीले ती मानिसहरू सुनका विविध गहनाहरू लिन श्रीखण्डपुरतिर दौडेर गए । त्यो कुरा धुलिखेलका मानिसहरूलाई थाहा भयो । उनीहरूले सुनजस्तै फर्सी, तोरी आदि फूलहरूका माला र अन्य गहना बनाएर श्रद्धा र भक्तिपूर्वक ती देवीलाई दिए र धुलिखेलको च्वयुछेंको माथिल्लो डाँडाजस्तो ठाउँमा प्रतिष्ठापित गरे । पछि श्रीखण्डपुरका मानिसहरू त्यो कुरा थाहा पाएर सुनका विविध गहनाहरू लिई धुलिखेल गए र देवीलाई ती गहना देखाएर श्रीखण्डपुर जान अनुरोध गरे । तर देवीले त्यहीँ बस्ने इच्छा प्रकट गरेपछि श्रीखण्डपुरका मानिसहरू क्रुद्ध भए र झोकले गर्दा ती देवीको नाक काटेर



ल्याई श्रीखण्डपुरमा स्थापना गरे । त्यसपछि ती देवी त्यहाँ पनि भगवती भइन् । धुलिखेलकी देवी भगवतीको नाक अहिलेसम्म नभएको कारण त्यही हो भन्ने गरिन्छ ।

एउटा राम्रो प्राङ्गणको उच्च ठाउँमा तीनवटा वेदीहरू तहतह गरी बनाएर त्यस ठाउँको बीचमा तीनतले अति सुन्दर र ठूलो मन्दिरमा पूर्वाभिमुख गरी राखिएकी देवी भगवती अत्यन्तै सुन्दर देखिन्छिन् । देवीका दायाँ र बायाँ विविध देवीदेवताहरू छन् । तीनवटा वेदीहरूमध्ये पहिलो वेदी ठूलो छ । चारपाटे उक्त वेदीमा पेटी बनाएर मन्दिरको परिक्रमा गर्न फराकिलो पारी भुइँमा इँटा छापिएको छ । दोस्रो वेदी पहिलोभन्दा अलि सानो छ र तेस्रो वेदी अझ सानो पारिएको छ । भुइँमा इँटा छापेर ठाउँ फराकिलो पारी मन्दिरको परिक्रमा गर्न सजिलो बनाइएको छ । मन्दिरको प्राङ्गणमा सरस्वती, चैत्य, गणेश, शिवलिङ्ग आदि विविध देवीदेवताहरू छन् । मन्दिर प्यागोडा शैलीमा बनाइएको भए तापनि नयाँ नै देखिन्छ । पुरानो मन्दिर धमिराले खाएर भत्कन लाग्दा धुलिखेलका मानिसहरू, यहाँका कर्माचार्य पुजारी र अन्य निकायको पहलमा सो मन्दिरको पुनर्निर्माण भएको कुरा पुजारी कृष्णप्रसाद कर्माचार्यबाट ज्ञात भएको छ ।



**(धुलिखेलकी भगवतीको मन्दिर)**

धुलिखेलकी भगवतीको जात्रा दसैँमा हुन्छ । सर्वप्रथम फूलपातीको दिन हनुमानढोकाबाट यहाँ तरबार ल्याउँछन् । मुख्य जात्रा दशमीको दिनदेखि सुरु हुन्छ । उक्त दिन द्योछेंबाट भगवतीको प्रतिमा ल्याई भगवतीको मन्दिरमा राख्तछन् । त्यस बखत श्रद्धालु भक्तजनको ती

देवीको पूजाका लागि घुइँचो लाग्दछ । अपराह्न लगन डबलीबाट खाली रथ भगवतीको मन्दिरतिर ल्याइसकेपछि धुलिखेलका प्रत्येक घरबाट एक-एक सदस्य आफ्ना पूजाकोठामा पूजा गर्ने गरेका तरबार अथवा खड्गहरू लिएर मन्दिरको परिसरमा जम्मा हुन्छन् । त्यस बखत हनुमानढोकाबाट ल्याइएको तरबारका साथ मानिसहरू हातमा आ-आफ्ना खड्ग अथवा तरबारहरू लिएर भगवतीको मन्दिरबाट क्वाचासम्म तीनपटक ओहोरदोहोर गर्दछन् । यसरी अति भव्य ढङ्गले खड्गजात्रा हुन्छ । यो एक किसिमको अर्थपूर्ण जात्रा हो । त्यसपछि साँझपख भगवतीको प्रतिमालाई रथमा राखी विधिवत् जात्रा हुन्छ । रथ पश्चिमको गणेशस्थानमा पुगेपछि त्यहीँ बास बसाइन्छ । भोलिपल्ट अर्थात् एकादशीका दिन मानिसहरू जम्मा भई धुलिखेलका विविध ठाउँहरूमा रथलाई घुमाइसकेपछि पुजारी कर्माचार्यले तान्त्रिक विधिका साथ देवी भगवतीको प्रतिमा खाछें परिवारलाई सुम्पिदिन्छन् । चतुर्दशीका दिन बेलुका भगवतीलाई पहिलेकै द्योछें (देवगृह) को स्थानमा विधिवत् राख्ने गर्दछन् ।

काभ्रेका विभिन्न सहर र गाउँहरूमा चैत्र मसान्ततिर र नववर्षारम्भमा बिस्केटजात्रा भएजस्तै धुलिखेलमा पनि आफ्नै किसिमले सो जात्रा हुने गर्दछ । उक्त अवसरमा यहाँ विविध देवीदेवताहरूको जात्रा हुनुका साथै महादेव र पार्वतीको रथ जुधाउँछन् ।

शेषनारायणको मन्दिर धुलिखेलको केन्द्रीय स्थल मानिने दथुटोलको नारायणचोकमा अवस्थित छ । प्यागोडा शैलीको यी देवताको तीनतले विशाल मन्दिरको निर्माणका विषयमा कुनै अभिलेख नभए तापनि भक्तपुरका विश्व मल्लकी अर्धाङ्गिनी गङ्गा महारानीको शासनकाल (ने० सं० ६७८ – ७२३) मा 'यिनै महारानीले यो मन्दिर बनाइदिएकी हुन् भन्ने भनाइ यहाँका बूढापाकाहरूको रहेको छ । तर पनि ने० सं० ८९९ मा यहाँका मुनि भारो आदिले गरुडस्तम्भको स्थापना गर्नुका साथै इँटा छाप्ने कामसमेत गरिदिएका छन् । त्यस्तै, चोछेंटोलका कृष्णनारायणले आफ्ना पूर्वजहरूको स्मृतिमा सुनको ढोका र तोरण चढाएको कुरा ने० सं० १००८ को त्यहींकै स्वर्णपत्रले देखाउँछ ।

धुलिखेलमा भाद्र कृष्णपक्ष अष्टमीका दिन विविध बाद्यवादनका साथ श्रीकृष्णको रथजात्रा हुन्छ । तर जात्रा गर्ने पुरानो धातुनिर्मित कलात्मक मूर्ति पहिले नै चोरी भइसकेको छ । त्यसैले श्रीकृष्णको नयाँ प्रतिमा बनाई यी देवताको प्रतिवर्ष जात्रा गर्ने गरिन्छ । बनेपामा पनि यहाँको दछुटोलमा नारायणका दुईवटा मन्दिरहरू छन् । नेपालमा एउटै प्राङ्गणमा दुईवटा नारायणका मन्दिरहरू भएको सम्भवतः यहीँ मात्रै हो ।



बनेपामा पनि धुलिखेलमा जस्तै श्रीकृष्णाष्टमीका दिनमा श्रीकृष्णको रथजात्रा हुन्छ । श्रीकृष्ण विष्णुका दस अवतारमध्ये आठौँ अवतार लिएर वसुदेव र देवकीका पुत्र भई गोकुलमा जन्मेका हुन् । उनी द्वापरयुगका अलौकिक शक्तिका प्रसिद्ध महापुरुष मानिन्छन् ।

धुलिखेलकी एक अत्यन्तै महत्त्वपूर्ण त्रिशक्तिदेवी हरसिद्धि हुन् । यी देवीको तीनतले मन्दिर धुलिखेलको केन्द्रीय स्थल नारायणचोकको पूर्वपट्टि दटोलमा छ ।

श्री ३ उग्रतारादेवी प्रसन्न भएर राजा विक्रमादित्यलाई 'ती देवीलाई गुप्त गरी नराख्नू र नाटक बनाई प्रख्यात गर्नू' भनी अनुग्रहवाणी भएको हुँदा पछि देवीकै निर्देशनमा हरसिद्धिपुराणअन्तर्गत त्रिशक्तिदेवीस्वरूपा भारतको उज्जयिनीपीठकी भवानीलाई आवाहन गरी देवीलाई प्रतिष्ठापन गरिएको हो भन्ने आख्यान छ । तीनवटा घटमा स्थापित हरसिद्धिदेवी माहेश्वरी, वैष्णवी र कौमारीको संयुक्त रूप हो । यी देवीलाई ब्राह्मी, माहेश्वरी र वैष्णवीको संयुक्त रूप त्रिशक्तिदेवी मान्नेहरू पनि कोही-कोही छन् । पाटन लुभूमा मूल देवीका रूपमा तीनवटा कलशहरू स्थापना गरिएझैं धुलिखेलमा तीन देवीका मूर्तिहरू स्थानक अवस्थामा छन् । राजा विक्रमादित्यको पालादेखि चलाउँदै गरेको हरसिद्धिको नाच कुनै-कुनै राजाहरूका पालामा बन्द भए पनि सो नाच अहिले चलाइँदै आएको छ ।




**(धुलिखेलको हरसिद्धिनाच)**

धुलिखेलमा देवी हरसिद्धिका विषयमा त्यति पुरानो अभिलेखचाहिँ छैन । तर पनि ने० सं० ९६७ को अभिलेखमा यी त्रिशक्तिदेवी हरसिद्धिको मन्दिर शिखरापुरवासी जोगनारायणले बनाइदिएको कुरा उल्लेख भएकाले

हरसिद्धिको धेरै पहिलेदेखि नै धुलिखेलसँग सम्बन्ध भएको देखिन्छ । पाटनबाट ल्याइने हरसिद्धिको नाच धुलिखेलमा पनि १२ वर्षको एकपटक नाच्ने गरिन्छ । त्यस बखत धुलिखेलमा भव्य मेला लाग्ने गर्दछ । मानिसहरूले त्यस बखत श्रद्धा र भक्तिका साथ यी देवीको पूजा गर्ने गर्दछन् । हरसिद्धिको नाच वि० सं० २०६६ सालमा धुलिखेलमा ल्याइएको थियो । भक्तपुरको नवदुर्गानाच भने काभ्रेका अन्य सहरहरूमा जस्तै प्रत्येक वर्ष यहाँ पनि ल्याउने गर्दछन् । त्यस बखत यहाँ ठूलो मेलाजस्तै लाग्दछ । धुलिखेलका मानिसहरूले श्रद्धा र भक्तिका साथ यी देवीदेवताहरूलाई मान्दछन् । नवदुर्गानाच यहाँ तीन दिनसम्म हुन्छ ।

धुलिखेलको पूर्व डाँडामुनि खाल्डोमा एक पवित्र तीर्थस्थल छ । त्यो हो गौखुरेश्वर । 'गौ' को अर्थ 'गाई' हो र 'खुर' को अर्थ कुनै पशुको अथवा गाईको 'खुट्टा' हो । 'गौखुरेश्वर' लाई अर्थ्याउँदा 'गाईको खुरसहित प्रकट भएका महादेवको रूप' भन्ने अर्थ लाग्छ । यो गौखुरेश्वरको उत्पत्तिका विषयमा एउटा रोचक कथा छ । कथा यसप्रकार छ –

किरातकालमा धेरैजसो मानिसहरूको पेसा खेती गर्ने र गाईपालन गर्ने हुन्थ्यो । त्यस बेला धुलिखेलका मानिसहरूको पेसा पनि गाईहरूको पालन नै थियो । एकपटक एकजना ग्वालाको गाईले बेलुका सधैँ दूध दिन छाड्यो । ग्वालालाई चिन्ता पर्‍यो । त्यसैले त्यस ग्वालाले एक दिन आफ्नो गाई चराउन जाँदा त्यो दूध नदिने गाईको चियो गरिरहेको थियो । गाईले भिरालो बाटो हुँदै तल खाल्डोमा गई त्यहाँको कुण्डको पानी मजाले खायो र सँगै रहेको एउटा ठाउँमा आफ्नो दूध चढायो । ग्वालाले त्यहाँ खनेर हेर्दा गाईको खुर भएको शिवलिङ्ग देख्यो । ग्वालाले ती देवतालाई नमस्कार गरी फर्किएर आएपछि त्यो कुरा सबैलाई सुनायो । गाईको खुरसहितको शिवलिङ्ग भएकाले ती देवता 'गौखुरेश्वर' नामले प्रसिद्ध भए ।

गौखुरेश्वरमा ने० सं० ७९० को एउटा लामो शिलालेख छ । शिलालेखमा त्यस स्थललाई 'गोसाइँकुण्ड' भनेर पनि उल्लेख गरिएको छ । भनिन्छ यहाँको पानीको मुहान रसुवा जिल्लाको गोसाइँकुण्डमा छ । रसुवा जिल्लाको गोसाइँकुण्डका महादेवलाई एउटा पुरानो हस्तलिखित पुस्तक अर्थात् थ्यासफूमा 'नीलकण्ठ' भनी उल्लेख गरिएको छ ।[२] समुद्रमन्थनत गर्दा

---

२ (क) धुलिखेलया ने० सं० ७९० या शिलापत्र : छगु अध्ययन, छत्रबहादुर कायस्थ, नेपाल संस्कृति, २०५८ भाद्र
(ख) नाला देय्या ७९८ या शिलापत्र : छगु अध्ययन, नेपाल संस्कृति, २०६१ आश्विन






**(धुलिखेलका गौखुरेश्वर महादेव)**

निस्केको कालकुट विषले संसार नै ध्वस्त होला भनेर सबैको रक्षाका लागि महादेवले सो विष पिए । उनले विषलाई घाँटीमा अड्काए, तर विषको प्रभावबाट आफैँ छटपटिएर विषको प्रभाव शीतल पार्नका लागि हिमालयको तल रहेको गोसाइँकुण्डको पानीभित्र पसे । विषले महादेवको कण्ठलाई नै नीलो पारिदिएकाले ती देवताको नाम नीलकण्ठ भएको हो भनिन्छ । धुलिखेलको गौखुरेश्वरलाई बनेपालीहरू 'नीलकण्ठ' भन्ने गर्छन् । गोसाइँकुण्डसँग सम्बन्धित भएकाले नै यी देवतालाई नीलकण्ठ भनिएको हुनुपर्छ । फेरि, बनेपालीहरूमा यी देवतालाई 'नीर महादेव' भन्नेहरू अहिले पनि नभएका होइनन् । सम्भवतः गोसाइँकुण्डको पानी यी महादेवको कुण्डको पानीसँग मिल्न आएको कुरा अभिलेखले देखाएकाले पनि यी देवतालाई 'नीर महादेव' भनिएको हुनुपर्दछ । किनभने 'नीर' को अर्थ 'पानी' हो । त्यसैले पानीसँग सम्बन्धित भएकाले नै यी देवतालाई 'नीर महादेव' भनिएको हो । अझ असारमा रोपाइँ गर्न पानी परेन भने गौखुरेश्वरमाथिको डाँडामा धुलिखेलका मानिसहरू गएर 'हरहर महादेव पानी देऊ' भनी माग्ने चलन पनि नभएको होइन ।

बनेपाका मानन्धरहरूमा श्रावण (बौद्धमास) महिनाभरि व्रत बस्ता टिँ, धुनु, पछिमा, पोँगा, मुहाली, भ्याली, धाँ, धिमे, भुछ्या, पस्ता, कोखिँ, नायखिँ आदि विविध बाजागाजाका साथ 'नीर महादेव' भन्दै ती बाजाहरू बजाई यी देवतालाई सभक्ति दर्शन गर्न आउने चलन अद्यापि चल्दै आएको छ ।

भक्तपुरका राजा जगत्प्रकाश मल्लका छोरा जयजितामित्र मल्लका मन्त्री भायुरामको नाम उल्लेख भएको यस शिलालेखमा गौखुरेश्वरको विविध विधिको पूजा र अन्य कार्यका लागि पाँच रोपनी जग्गा दत्त राखिएको कुरा उल्लेख छ । त्यसको गुठी पनि छ । गुठीका गुठीयारहरू कनकशरण दुवाल, हरिसिंह दुवाल, हरिनन्दन दुवाल, धर्मसिंह दुवाल, सुखु अतमल, दतु मनु आदि देखिन्छन् । ती गुठीयारहरूले गौखुरेश्वरको परिसरमा रहेका भवानीशङ्कर, उमामहेश्वर, विश्वेश्वर, गौखुरेश्वर र लक्ष्मीनारायणका साथै धुलिखेलकी आराध्यदेवी भगवतीलाई पनि विधिको पूजा गर्नुपर्ने कुरा उल्लेख गरिएको छ ।

त्यस्तै, यिनै मन्त्री भायुरामले नालामा पनि ढुङ्गेधारा, पाटी आदि बनाई श्री ३ भवानीशङ्कर, श्री ३ विश्वेश्वर, श्री ३ महादेव, श्री ३ उमामहेश्वरको प्रतिष्ठा गरी र यी देवीदेवताहरूको पनि पर्वपूजा आदि गरी गुठीको स्थापना गरेर ७ रोपनी जग्गा दत्त राखिदिएको कुरा ने० सं० ७९८ को शिलाभिलेखले देखाउँछ ।

गौखुरेश्वरको ने० सं० ७९५ को अभिलेखमा गौखुरेश्वरका लागि ढुङ्गाको मन्दिर बनाइएको चर्चा छ भने ने० सं० ८५४ को अभिलेखमा यहाँका पतिमन भारोले गणेशको मूर्ति प्रतिष्ठापन गरी पाँच रोपनी जग्गा दत्त राखेर विविध देवीदेवताको विधिको पूजा गर्न गुठी बनाई गुठीयारहरूलाई जिम्मा दिएको कुरा उल्लेख छ । त्यस्तै, ने० सं० ९४५ को अभिलेखमा यहाँका धनकर सिं र उनका परिवारले यस तीर्थस्थलमा विविध देवीदेवता प्रतिष्ठापन गरी सत्तलको निर्माण गरेको कुरा उल्लेख गरिएको छ । त्यस्तै अरू पछिका अभिलेखहरूमा पनि यस्तै धर्मका कामहरू उल्लेख गरिएका छन् । तर ने० सं० ७९० को शिलापत्र नै ऐतिहासिक दृष्टिकोणले बढी महत्त्वपूर्ण भएको देखिन्छ ।

धुलिखेलमा पुराना-पुराना अभिलेखहरू हुनुपर्ने थियो, तर त्यति पुराना अभिलेखहरू प्राप्त भएको देखिएन । अनुसन्धान गरियो भने त्यस्ता पुराना अभिलेखहरू अवश्यमेव प्राप्त हुनेछन्, किनभने धुलिखेल पहिलेदेखि नै एक महत्त्वपूर्ण ऐतिहासिक थलो हो ।

धुलिखेलमा अनेकौं कलाकृतिहरू थिए । कुनै-कुनै त अति नै प्रशंसनीय कलाकृति पनि थिए र छन् । तीमध्ये धुलिखेलको चोच्छेटोलमा प्रतिष्ठापित गणेश र कुमारका साथ बसिरहेकी गौरीको मूर्ति अत्यन्त कलापूर्ण छ । त्यहाँको सूर्यमूर्ति पनि अर्थपूर्ण छ भनी सुनेको थिएँ । तर उक्त सूर्यमूर्ति अहिले देखापरेको छैन जस्तो छ ।





**(चोरी भइसकेको धुलिखेलको उमामहेश्वरको मूर्ति)**

धुलिखेलको वटोलमा प्रतिष्ठापित उमामहेश्वरको मूर्ति बाह्रौं शताब्दीको थियो । उक्त मूर्तिको कलाकृति अत्यन्तै सुन्दर थियो । ललित आसनमा आफ्नी सँगिनी उमाका साथ बसिरहेका महेश्वरले आफ्नो बायाँ खुट्टा आफ्नै आसनमा अड्याइरहेका र दायाँ खुट्टा तलतिर झुन्ड्याइरहेका छन् । आफ्नो माथिल्लो दायाँ हातले जपमाला (रुद्राक्षको माला) समाइराख्नुको सट्टा आफ्नो कपालको मुठो समाइरहेका र माथिल्लो बायाँ हातले त्रिशूल समाइरहेका महेश्वरले आफ्नो अघिल्लो दायाँ हातले मायालु ढङ्गबाट आफ्नी सँगिनी उमालाई च्यापिरहेको जस्तो दृश्य प्रादुर्भाव भएको सो मूर्तिमा उनको दायाँ हातले अभय वर प्रदान गरिरहेको देखिन्छ । जटा-मुकुट लगाएका महेश्वरले चुरा, माला, पेटी आदि विविध गहनाहरू लगाएका छन् । बायाँपट्टि आफ्ना पतिदेव महेश्वरसित अडेस लागेर बसिरहेकी उमाले आफ्नो दायाँ हात शिवको काखमा राखेको र उमाले हारमाला, चुरा, मुन्द्री आदि विभिन्न गहनाहरू लगाएको देखिन्छ । दायाँपट्टि उभिइरहेका उमाका दुई अनुचरहरूमध्ये एकले देवीलाई छाताले ओढाइरहेको छ भने महेश्वरका दायाँपट्टि नन्दी र महेश्वरकै पुत्र कुमार रहेका छन् । मूर्तिको माथिल्लो भागमा ठूलो छत्र र सूर्यचन्द्र पनि छन् । छत्रभन्दा मुनि गङ्गाले आफ्नो नृत्यमुद्रामा महेश्वरको शिरमाथि आफ्ना दुवै हातले जलधारा बगाइरहेकी छन् । तर यस्तो अर्थपूर्ण र महत्त्वपूर्ण दुर्लभ

मानिने धुलिखेलको पुरानो कलाकृति सन् १९८२ मा चोरी भइसकेको छ ।[३]

**सन्दर्भस्रोत :**


१ धुलिखेलको सांस्कृतिक सर्वेक्षण, हरिभक्त खोजू श्रेष्ठ, नेपाल तथा एसियाली अनुसन्धान केन्द्र, त्रि० वि०, कीर्तिपुर, २०४३




३ Stolen Images of Nepal, Lain S. Bangdel, Royal Nepal Academy, Kathmandu, Nepal, 1989



# श्रीखण्डपुरका श्वेतभैरव

काठमाडौँ उपत्यकाबाहिरको पूर्वी क्षेत्रमा बनेपासहित सातवटा सहरहरू बनाउने सन्दर्भमा ढुङ्गाको ठूलो पर्खालले घेरेर चार दिशामा चारवटा पोखरीहरू र सहरमा प्रवेश गर्नका निम्ति चारै दिशामा चारवटा ढोकाहरू बनाई धनेश्वर पीठनजिक राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ (वि० सं० ११५३) मा श्रीखण्डपुर बनाएका थिए । धुलिखेल नगरपालिका वडा नं० ८ र ९ अन्तर्गत करिब ८६ डिग्री पूर्वी देशान्तर र २८ डिग्री उत्तरी अक्षांशमा पर्ने यो सहर समुद्री सतहबाट करिब १४०० मिटर उचाइमा पर्दछ । ९२३ वर्षपहिले नयाँ श्रीखण्डपुरको निर्माण भए पनि यो सहर किरातकालमा नै बस्तीका रूपमा विकसित भएको देखिन्छ । त्यस बखत यस बस्तीको नाम सम्भवतः 'खन्पू' हुन सक्तछ । त्यसैले त्यस बखत राजा आनन्ददेवले आसपासमा छरिएका ससाना बस्तीहरू एकीकृत गरी श्रीखण्डपुरको निर्माण गरेको हुनुपर्दछ । यस सहरको नाम खंपू, खन्पू, खड्पू, श्रीखण्डपुर आदि छन् । पहिले यहाँ श्रीखण्डका बोटहरू थिए । ती बोटहरूलाई काटी यहाँ सहर बसाल्ने काम भएको हो भन्ने धारणा यहाँका मानिसहरूको छ । त्यसैले नै यस सहरको नाम श्रीखण्डपुर भएको हो भनी यहाँका मानिसहरू गर्व गर्दछन् । पछिसम्म बाँकी भएको श्रीखण्डको एउटा बोट काटी सो रूखको फेदको काठबाट दीपङ्कर बुद्धका दुईवटा टाउका बनाएर अति कलात्मक आकृति कुँदी प्रतिष्ठापन गरिएका दुई दीपङ्कर बुद्ध १७-१८ वर्षपहिल्यै चोरी भइसकेका छन् । त्यस श्रीखण्डको रूखको फेद सम्याई त्यहाँ बनाइएको चैत्य अहिलेसम्म यथास्थितिमै छ ।

बनेपाको तीनधारामा, धुलिखेलको नारायणस्थानमा, पनौतीको अघाटोलमा बनाइएजस्तै श्रीखण्डपुरमा पनि सहरको मध्यभागमा सोह्रखुट्टे पाटी निर्माण गरिएको थियो । त्यस बखत सहरको केन्द्रीय स्थलमा सोह्रखुट्टे पाटी निर्माण गरी त्यहाँ बुद्धिजीवी एवं मान्यजनहरू बसी अपराधीहरूलाई सजाय दिएर न्यायिक काम गर्दै देशमा सुखशान्ति दिने काम हुन्थ्यो । त्यस्तो काम श्रीखण्डपुरको सोह्रखुट्टे पाटीबाट पनि हुने गर्दथ्यो । अहिले त्यो सोह्रखुट्टे पाटी त्यहाँ छैन ।

पुण्यमाता खोलाको तटमा अवस्थित यस सहरको पूर्वमा धुलिखेल, पश्चिममा महाकालदेवीको जङ्गल अर्थात् छलेश्वरवन र धनेश्वर पर्दछन्

भने उत्तरमा बनेपा नगरपालिका वडा नं० ११ बुडोल – गोसाइँकुण्ड र दक्षिणमा चौकोट र पनौती पर्दछन् । सानो सहर भए पनि साना बस्तीहरूको बीचमा भएको हुँदा पहिलेदेखि नै यो सहर एक किसिमको व्यापारिक केन्द्रजस्तै बनेको छ । पहिले श्रेष्ठ, प्रधान, कर्माचार्य, सुवाल, मानन्धर, रन्जितकार, धुँजू, महाजू, गुभाजू, प्रजापती, नापित, साही, कपाली आदि नेवार जातिहरू मात्र भएको यस सहरमा हाल अन्य जातिका केही मानिसहरू पनि बस्न थालेका छन् । मल्लकालीन समयमा व्यवस्थित ढङ्गले स्थापित यस सहरको पूर्वपट्टि लायकू दरबार थियो । पहिले तीन तला भएको यो दरबार भएको ठाउँमा हाल आधुनिक किसिमको भुइँतले घर निर्माण गरिएको छ र त्यहाँबाट सामूहिक काम भइरहेको छ ।



(श्वेतभैरवको मन्दिर)

कीर्तिपुरका आराध्यदेव बाघभैरव भएजस्तै श्रीखण्डपुरका आराध्यदेव श्वेतभैरव हुन् । भैरव नै शिवका उग्ररूप हुन् । '..... महाभयङ्कर रौद्ररूपका वेदपुरुष नै तन्त्रका दृष्टिमा भैरव मानिन्छन् ।' ठूलो शिलाका रूपमा रहेका श्रीखण्डपुरका श्वेतभैरवका दायाँ र बायाँतर्फ आठवटा ससाना अमूर्त ढुङ्गाका देवताहरू छन् । तिनीहरूलाई यहाँका मानिसहरूले अष्टभैरव भनी मान्ने गरेका छन् । अष्टभैरवहरू असिताङ्ग, रुरु, चण्ड, क्रोध, उन्मत्त, कपाल, भीषण र संहार हुन् । ती आठैवटा भैरवहरूका आ-आफ्नै किसिमका छुट्टाछुट्टै रङ्ग र वाहनहरू पनि छन् । भनिन्छ नेपालमा ५० लाख भैरवहरू छन् । तिनीहरू कुनै मन्दिरमा, कुनै मन्दिरका भित्तामा, कुनै मसानमा, कुनै घाटमा, कुनै चौरमा, कुनै ढुङ्गेधाराको परिसरमा, कुनै चौबाटोमा र कुनै प्रवेशद्वारमा छन् । तिनीहरू धातु, माटो, काठ, कागज आदि वस्तुहरूबाट बनाइएका छन् ।



श्रीखण्डपुरको उत्तरी ढोकासमीप श्वेतभैरवको मन्दिर अवस्थित छ । तीनतले प्यागोडा शैलीको यो मन्दिर मल्लकालीनजस्तै देखिए पनि वि० सं० १९९० सालको महाभूकम्पमा भत्किएर यहाँका श्रद्धालु भक्तजनको प्रयासले पहिलेकै स्वरूपमा यस मन्दिरको पुनर्निर्माण भएको थियो । तर पहिले मन्दिरका चारैतर्फ चारवटा ढोका भएकोमा पुनर्निर्माण गर्दा पूर्वाभिमुख गरी एउटा मात्र ढोका राखिएको थियो । देवालयको चारैतर्फ पहिलो तलामा ४-४ वटा, दोस्रो तलामा २-२ वटा र प्रत्येक कोणमा थप १-१ वटा टुँडाल राखी निर्माण गरिएको यस मन्दिरको तेस्रो तलाका चार कोणमा चारवटा टुँडालहरू छन् । प्रत्येक टुँडालमा देवीदेवताका सुन्दर आकृतिहरू कुँदिएका छन् । कोणमा राखिएका टुँडालहरूमा चाहिँ पखेटा भएका सिंह-शार्दूल छन् । यी अजीव प्राणीहरू अलौकिक शक्ति भएका र दुष्ट प्रवृत्तिका प्राणीहरूलाई, अमङ्गलकारी तत्त्वहरूलाई मन्दिरभित्र प्रवेश गर्न नदिने सिपाहीहरूजस्तै देखिन्छन् ।

मन्दिरको प्रवेशद्वारको दायाँ र बायाँ ढुङ्गाद्वारा निर्मित दुईवटा ठूला सिंहहरू छन् । मन्दिरको पहिलो तलाको छानो झिँगटीले छाइएको छ भने दोस्रो र तेस्रो तलाका छानाहरूमा तामाको पातामा सुनको मोलम्बा लगाइएको छ । मन्दिरको दक्षिणतर्फ एउटा ठूलो घण्टा झुन्ड्याइएको छ । भक्तजनले त्यो घण्टा बजाई भैरवनाथप्रति आफ्नो भाव र भक्ति व्यक्त गर्दछन् । दोस्रो र तेस्रो तलाका छानाको मुठलमा झुन्ड्याइएका ससाना घण्टीहरूमा हावा लाग्दा टाङटिङटुङ आवाज आउँछ । त्यस्तो आवाजबाट भक्तजनले देवताप्रति देखाएको भाव र भक्ति प्रकट भएको आभास हुन्छ । माथिल्लो तलाको छानाको बीच भागमा धातुनिर्मित गजुरको मास्तिरको भाग माथिमाथि लक्षित गर्दै चुच्चिएर गएको देखिन्छ । यसले आकाशसँग यसको नित्य सम्बन्ध देखाउँछ र यो दिव्यात्माको प्रतीक पनि हो । पहिले यस गजुरमा धातुनिर्मित अति नै कलात्मक रूपमा बनाइएका तीनवटा नागहरू थिए, तर दुईवटा नागहरू चोरी भएकाले हाल एउटा नाग द्योछेँ (देवगृह) मा सुरक्षित ढङ्गले राखिएको छ ।

श्वेतभैरवको प्रवेशद्वारमाथि एउटा ठूलो र सुन्दर तोरण छ । भनिन्छ तोरण मन्दिरको ऐना हो, जहाँ सम्बन्धित देवी या देवताका अनेकौं कुराहरू झल्केका हुन्छन् । तोरणको बीच भागमा रहेका दसवटा बाहु भएका श्वेतभैरवका दायाँ र बायाँ गणेश र कुमार छन् । दुवैतिर कलात्मक ढङ्गले कुँदिएका मकरहरू पनि छन् । मकर समुद्रका अधिष्ठाता देवता वरुणका वाहन हुन् । तोरणको माथिल्लो भागमा पखेटायुक्त गरुड भएको यस तोरणमाथि गजुर पनि छ । गरुडका दुवैपट्टि नागकन्या छन् ।

नेपालका प्रत्येक गाउँ या सहरका देवीदेवताको जात्रा आ-आफ्नै निश्चित तिथिमितिमा प्रत्येक वर्ष चलाइँदै आएजस्तै श्रीखण्डपुरका श्वेतभैरवको जात्रा पनि यहाँको बिस्केटजात्रामा हुने गर्दछ । भक्तपुर र नालाका बीचको ल्योसिँ गुँ (जङ्गल) बाट लिङ्गो ल्याई चैत्र मसान्तको अघिल्लो दिन विधिको पूजा गरिन्छ र विविध वाद्यवादनका साथ लिङ्गो उभ्याउने काम हुन्छ । श्वेतभैरवको रथजात्राका लागि सानो र ठूलो गरी दुईवटा रथ बनाइएको हुन्छ । मच्छेगाउँका अशोकविनायकको, बनेपाकी देवी चण्डेश्वरीको, भक्तपुरका भैरवको, काठमाडौँका (अहिले तयारी रथहरू हुनुभन्दा पहिले) कुमारी, भैरव र गणेशको, काठमाडौँकै अजिमाको रथ मानन्धर जातका मानिसहरूले बनाउने काम गरेजस्तै श्रीखण्डपुरका श्वेतभैरवको सानो र ठूलो गरी दुईवटा रथहरू यहाँका मानन्धरहरूले नै बनाउने गर्दथे । पहिले यसको छुट्टै गुठी हुने गर्दथ्यो । हाल त्यस्ता गुठीजग्गा हराइसकेका छन् । बाँकी भएको अलिकति जग्गाको पनि त्यति प्रयोजन नभएको जस्तो देखिन्छ । हाल श्री मच्छे मानन्धर एकजनाले मात्र रथ बनाउने काम गरिरहेका छन् । रथहरू बनाइसकेपछि रातो र सेतो कपडाले सिँगार्ने काम यहाँका श्री शिवाचार्य (हाल चैतलाल) ले गर्ने चलन छ । उनी नै श्वेतभैरवको नित्य पूजा गर्ने व्यक्ति हुन् ।



**(श्वेतभैरवको रथजात्रा)**

श्रीखण्डपुरका श्वेतभैरवको जात्रा बिस्केटजात्राका सन्दर्भमा गर्ने गरिन्छ । तर त्यस जात्रामा गणेश र कुमारलाई पनि त्यही रथमा राखेर जात्रा गर्ने चलन छ । चैत्र मसान्तको बेलुकी १०-११ बजे द्योछेँ (देवगृह)



बाट गणेश, श्वेतभैरव र कुमारलाई सानो खटमा राखेर चाफको डबलीमा ल्याइन्छ । त्यसपछि पुजारी वज्राचार्यबाट देवताहरूलाई विधिको पूजा हुन्छ । रथजात्रा सकिएपछि देवताहरूलाई श्वेतभैरवको मन्दिरमा राख्ने काम हुन्छ । केही बेरपछि चाफको डबलीबाट मतापूजा सुरु हुन्छ । श्रीखण्डपुरका वासिन्दाहरूले मतापूजा (Procession of Torches) मा हातमा चिराक, सुकुन्दा र मैनबत्तीहरू लिएर अति भव्य ढङ्गले बाजागाजासहित हर्षोल्लासका साथ देशपरिक्रमा गर्दछन् । यो दृश्य रम्य, उच्च र विशाल देखिन्छ ।

वैशाख १ गते प्रत्येक घरबाट श्वेतभैरवको मन्दिरमा भक्तहरू पूजा गर्न जान्छन् । दिउँसो १२ बजेतिर लायक् दरबारबाट देवताहरूको पूजा गरिन्छ । त्यो सरकारी पूजा सकिएपछि अन्य पूजा गर्न मनाही गरिएको छ । त्यसपछि शिवाचार्यबाट देवताहरूको विधिवत लशकुश हुन्छ । अनि मलामीबाजाका साथ द्वाकामा बौपा राख्ने गरिन्छ । वैशाख २ गते पनि बिहान ११ बजेतिर रथजात्रा हुन्छ । रथलाई पूर्वी द्वारतिर लगेपछि लायक् दरबारअगाडि रथलाई विश्राम गराइन्छ । त्यहाँ द्वारे (हाल टेकबहादुर प्रधान) को पूजा हुन्छ । पूजापछि द्वारेले विविध वस्तुहरू रथमाथि छरिदिन्छन् । त्यसै बखत भक्तजनले ल्याएका चटामरी, मिठाई, बिस्कुट आदि वस्तुहरू रथ र भीडमा छरिदिन्छन् । त्यसलाई कलँदान भनिन्छ । यसरी जात्रा सकिएपछि व्रत बस्ने दुई कन्याहरूले गणेश, भैरव र कुमारलाई पूजा गरेर देवताहरूलाई देवगृहमा भित्र्याउने काम हुन्छ । ती देवताहरूलाई वैशाख ५ गतेसम्म एउटै कोठामा त्यसै राखिदिन्छन् । वैशाख ५ गते लिङ्गो ढालिसकेपछि विधिको पूजा गरी गणेश, भैरव र कुमारलाई सुरक्षित ढङ्गले देवगृहको आफ्नै ठाउँमा राखिदिन्छन् ।

वंशावलीमा उल्लेख भएअनुसार एकजना उपाध्याय ब्राह्मणले आफ्नी इष्टदेवी नवदुर्गालाई सम्हालेर राख्न नसक्ता उनले मानिसहरूलाई अपहरण गरी भोग लिने गरेकी थिइन्, पछि राजा आनन्ददेवका पालामा कलिगत वर्ष ४१९० – ९७ मा सुनन्द आचार्य नाम गरेका एक ख्यातिप्राप्त तान्त्रिकले तन्त्रोक्त विधिबाट नवदुर्गालाई सम्हालेर भक्तपुरका गथुखलकका मानिसहरूबाट यी नवदुर्गाको गणनाच चलाएका थिए । तिनै राजा आनन्ददेवले बनेपा सातगाउँको निर्माण कलिगत वर्ष ४१९७ मा गरेका थिए । त्यही कारणले सम्भवतः नवदुर्गाको नाच काभ्रेका मुख्य सात सहरहरूमा लाने गरिन्छ । त्यसै सन्दर्भमा श्रीखण्डपुरमा पनि नवदुर्गाको गणनाच प्रतिवर्ष हुने गर्दछ । तर त्यहाँ नवदुर्गागण सबै लाने गरे पनि सिम्ब, दुम्ब, गणेश, कुमार र कुमारीको मात्र नाच हुने गर्दछ । तर

श्रीखण्डपुरका वासिन्दाहरू सबै देवीदेवताहरूलाई लाय्कुमा गएर पूजा गर्दछन् । श्रीखण्डपुर श्वेतभैरवको थलो भएको कारणले गर्दा नवदुर्गागणको श्वेतभैरवको नाच र यिनै श्वेतभैरवबाट 'ङा लाय्केगु' अर्थात् माछा मार्ने चलन भने छैन । 'श्वेतभैरव पात्रलाई नवदुर्गागणमा इन्द्रको प्रतीक पनि मानिन्छ ।'[१]

'देवमाला वंशावली' अनुसार गुणकामदेव (प्रथम) ले महालक्ष्मीको निर्देशनअनुसार उपत्यकामा तीन सहरहरू (काठमाडौं, भादगाउँ र पाटन) बनाई ती तीनै सहरमा अष्टमातृकागणका अलग-अलग नृत्य चलाएजस्तै राजा आनन्ददेवले चण्डेश्वरीको निर्देशनअनुसार बनेपा सातगाउँको निर्माण गरी यहाँ पनि मुकुन्डोनाचहरू चलाएको कुरा खुल्न आएको छ । बनेपामा चण्डेश्वरीको देवीनाच (जुन ११३ वर्षअघिदेखि हराइसकेको छ), पनौतीमा ब्रह्मायणीसँग सम्बन्धित देवीनाच र साँगामा नासिकादेवीसँग सम्बन्धित देवीनाच (जुन नाच २०-२१ वर्षअघिदेखि भएको छैन) भएजस्तै श्रीखण्डपुरको श्वेतभैरवनाच (कीर्तिपुरको बाघभैरवनाचजस्तै) अष्टमातृका गणसहित अवश्य पनि हुनुपर्दथ्यो । तर श्रीखण्डपुर सहर सानो भएका कारणले र यस्तो नाचमा धेरै मानिसको सहभागिता चाहिने हुनाले त्यो नाच लोप भएको हुन सक्तछ । तर यस्तो नाच पहिले थियो कि थिएन, अनुसन्धानको विषय भएको छ ।

ꟷ

[१] नवदुर्गागण : तत्कालीन समाजको दिग्दर्शन, नारायणमान बिजुक्छे, नवदुर्गा स्मारिका, २०६६ असोज



# चौकोटका श्वेतगणेश

श्रीखण्डपुरबाट करिब १ कि० मि० दक्षिण-पूर्व माथि उठेको शान्त र रमणीय एउटा ठाउँमा चौकोट नामक बस्ती अवस्थित छ । 'पर्वतीय वंशावली' अनुसार बनेपालगायत सातबस्तीको निर्माण गर्दा वि० सं० ११५३ मा राजा आनन्ददेवले चकोर ऋषिको आश्रमनजिक चौकोट नामक बस्ती निर्माण गरेका थिए ।[१] चकोर ऋषिको आश्रमनजिक बनेको हुनाले नै यस गाउँलाई सम्भवतः चौकोट भनिएको हुनुपर्दछ । भनिन्छ सुरक्षाका लागि ठूलो पर्खालले घेरेर पहिले चौकोटका चार दिशामा चार प्रवेशद्वार (ढोका) निर्माण गरिएका थिए रे । तर हाल ती चार ढोकाको कतै कुनै अवशेष देखिएको छैन । बरू चौकोटको पूर्वतर्फको ठाउँलाई हाल ढोकाटोल भन्नेचाहिँ गर्दछन् । पहिले चौकोटभित्र प्रवेश गर्न यहाँ ढोका राखिएको हुनाले नै यस ठाउँको नाम ढोकाटोल भएको हुनुपर्दछ । साथै, यहाँ आउन एउटा सानो तँ (उकालो) लाई ढोकातँ भन्नेहरू अहिले पनि नभएका होइनन् । श्रीखण्डपुरबाट चौकोटतिर लाग्दा उकालो चढ्ने ठाउँमा केही वर्षअगाडिसम्म भएका ढुङ्गाहरू उत्तरपट्टिका ढोकाका अवशेषहरू हुन् भनी मानिसहरूले अनुमान गरेका छन् ।[२]

त्यस्तै गङ्गाडोल, जलेश्वरतिर जाने बाटोको पश्चिमतर्फको ढोका र दक्षिणतिरको चौकोट बस्तीको सिमानामा पनि पहिले ढुङ्गेढोकाका अवशेषहरू भएकाले त्यो ठाउँ दक्षिणको ढोका भएको ठाउँ हो भनी यहाँका बूढापाकाहरू भन्ने गर्दछन् । तर धुलिखेलमा चार दिशामा चार गणेशको स्थापना गरेजस्तै चौकोटमा कुन देवी या देवताको स्थापना गरियो भन्ने प्रश्नमा अहिले कोही केही भन्न सक्तैनन् ।

संस्कृतिका ज्ञाता मेरा बुबा मोहनलाल खिं मानन्धरले आफ्नो गफका सिलसिलामा बरोबर भन्नुहुन्थ्यो – "राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा चौकोटबाट एउटा राम्रो शिला ल्याएर सबैभन्दा पहिले बनेपाको दक्षिण दिशामा तुकंप्वःगणेशको स्थापना गरेका थिए भन्ने

[१] Nepal - History of the Country and the People, Daniel Wright, Cosmo Publication, 1983 A. D., New Delhi

[२] चौकोट तथा श्वेतगणेश, कृष्णलाल राजवंशी

किंवदन्ती छ । त्यस बखत उक्त स्थापित गणेशलाई चौकोटका मानिसहरू आएर उखेलेर लान खोज्दा उखेल्न सकेनन् र त्यसलाई टुक्र्याएर त्यसको च्वका (माथिल्लो भाग) लगेर उनीहरूले त्यहाँ गणेशका रूपमा स्थापना गरे । बनेपामा यी देवताको प्वः (तलको भाग) मात्रै बाँकी रहेको थियो । टुक्र्याएर बाँकी रहेको प्वः (तलको भाग) लाई तुकंप्वःगणेश भनियो र च्वका (माथिल्लो भाग) लगेर गणेशको स्थापना गरेको त्यस ठाउँको नाम चौका रह्यो । चोका भन्दाभन्दै पछि चोखा भयो ।" अहिले पनि नेवारसमुदायले त्यस ठाउँलाई चोखा नै भन्ने गर्दछ ।

प्राचीन कालमा यहाँ चारवटा ठूला-ठूला गोठहरू थिए रे । चारवटा गोठहरू यहाँ भएका कारणले नै यस ठाउँलाई चौगोठ भनियो र चौगोठ भन्दाभन्दै चौकोट हुन आयो ।[३]



**(चौकोटका श्वेतगणेशको मन्दिर)**

साना-ठूला बस्तीहरूमा विविध देवीदेवताहरू प्रतिष्ठापित गरिएका हुन्छन् । तीमध्ये कुनै एकलाई आफ्ना आराध्य देव या देवी मानिएको हुन्छ । कीर्तिपुरका बाघभैरव, श्रीखण्डपुरका श्वेतभैरव, पनौतीका इन्द्रेश्वर र बनेपाकी चण्डेश्वरीलाई आ-आफ्ना आराध्य देव या देवी मानिएजस्तै चौकोटका आराध्य देव श्वेतगणेश हुन् ।

[३] ऐ० ऐ०



हाम्रो समाजमा चोक, घाट, देवालय, सडकछेउ, घरको ढोका, चौतारा, पोखरीछेउ, ढुङ्गेधारा परिसर आदि ठाउँहरूमा गणेशका मूर्तिहरू प्रतिष्ठापित गरिएका छन् । ती गणेशहरू विविध नामहरू, जस्तै : क्वयृनागणेश, मरुगणेश, सूर्यविनायक, सालाँगणेश, कमलविनायक आदि छन् । गणेशहरू विविध रूप, रङ्ग अथवा गुण भएका हुन्छन् । कुनै गणेश कृषिसँग सम्बन्धित हुन्छन् त कुनै राजकाजसँग, कुनै गणेशले बालबालिकालाई बोल्न लगाउने गर्दछन् त कुनै गणेशले सिद्धि दिने गर्दछन् । भनिन्छ श्वेत वर्णका गणेश अर्थात् श्वेतगणेशको आराधना अथवा पूजा गरे यी देवताले सम्पत्ति जुटाइदिन्छन् ।

चौकोटको मध्यभागको एउटा फराकिलो प्राङ्गणमा दक्षिणाभिमुख श्वेतगणेशको दुईतले मन्दिर छ । मन्दिरअगाडि स-साना सिंह र सिंहिनी छन् । मन्दिरको दायाँपट्टि चिशङ्खुनारायण, विशङ्खुनारायण र एउटा चैत्य छन् । त्यस्तै, त्यो ठूलो र फराकिलो परिधिभित्र अन्य देवीदेवताहरू, जस्तै : महादेव, राम-सीता, हनुमान, चाँगुनारायण, कालभैरव आदि छन् । बीचमा ठूलो पीपलको रूख भएका कारणले त्यो स्थल रमणीय छ । श्वेतगणेशको इतिहास धेरै पुरानो भए पनि यी देवताको मन्दिर त्यति पुरानो देखिएको छैन । सम्भवतः यी देवताको मन्दिर कुनै समयमा भत्किएर यसरी साधारण ढङ्गले बनाइएको होला । मन्दिरमा पूर्व, पश्चिम, उत्तर र दक्षिणतर्फ ४-४ वटा टुँडालहरू प्रयोग गरिएका छन् भने मन्दिरका चार कोणका टुँडालहरू भने पखेटायुक्त, सुन्दर र पुराना सिंहशार्दूल छन् । मन्दिरको पहिलो तलामा चारैतर्फ ३-३ वटा स-साना झ्यालहरू छन्, तर बीचका झ्याल अलि ठूला छन् । ती पुराना खालका झ्यालहरू सम्भवतः ब्रह्मा, विष्णु र महेश्वरका प्रतीक हुन सक्छन् । नेपालमा चाहे बौद्धमन्दिरमा होस् चाहे हिन्दूमन्दिरमा, मन्दिरको प्रवेशद्वारमाथि तोरण राखिएको हुन्छ । तर चौकोटका श्वेतगणेशको मन्दिरको प्रवेशद्वारमाथि तोरण छैन । भनिन्छ तोरण नै मन्दिरको ऐना हो जसमा सम्बन्धित देवीदेवताका गहन कुराहरू झल्काइएका हुन्छन् । यहाँ पनि तोरणको प्रयोग गरिएको भए श्वेतगणेशसम्बन्धी केही कुराहरू खुल्न आउँथे होलान् । त्यसमा पनि चौकोटमा पुराना-पुराना शिलाभिलेखहरू कतै पाइएका छैनन् । तर २५०-६० वर्षपहिलेका शाहकालिक र राणाकालिक लालमोहर, सनद आदि कागज भने नभएका होइनन् । सत्यलाल राजवंशीबाट प्राप्त एउटा कागजमा चौकोटका श्वेतगणेशको 'मेष सङ्क्रान्तिका दिन जात्रा र नित्य पूजा निमित्त .....' आदि कुरा उल्लेख गर्दै विविध ठाउँमा धेरै खेतहरू गुठीमा राखिदिएको कुरा उल्लेख छ । विविध कागजहरू अध्ययन गर्दा चौकोटका राजवंशीहरूले पहिले

त्यहाँ राजकाज चलाउँदै आएको कुरा आभास हुन्छ । राजवंशीहरूले त्यहाँ पहिले राज (शासन) चलाउँथे भन्ने कुरा त्यहाँका बूढापाकाहरूले अहिले पनि भन्ने गरेका छन् । अहिले पनि राजवंशीहरूको त्यहाँ भएको एउटा धेरै पुरानो ठूलो घर दरबारजस्तै देखिन्छ । एकपटक मेरा साथी लक्ष्मण राजवंशीले पनि एक भेटमा यस्तै कुरा गर्दै 'हाम्रा पूर्वजहरू चौकोटका थिए, हामी त्यहींबाट काठमाडौंमा आएका हौं भन्ने मैले सुनेको थिएँ' भन्नुभएको कुरा अहिले मेरो सम्झनामा आएको छ ।

चौकोटका श्वेतगणेशको रथजात्रा वैशाख १ गते हुन्छ । वैशाख सङ्क्रान्तिको ४ दिनअगाडि धातुनिर्मित अति कलात्मक श्वेतगणेशको धेरै नै पुरानो मूर्ति पनौतीका कर्माचार्य पुजारीका घरबाट ल्याएर चौकोटको द्योछें (देवगृह) मा राख्ने गर्दथे । मसान्तको साँझपख सुनले मोलम्बा गरिएको मूल्यवान् उक्त मूर्ति श्वेतगणेशको मन्दिरमा राख्ने गर्दथे । त्यस बखत ती देवतालाई चौकोटका घरघरबाट पूजासामग्री ल्याई पूजा गर्ने गर्दथे । त्यस बखत त्यहाँका दाफा भजनखलकहरूले भजनपाटीमा बसेर देवीदेवताको भजन गरी अन्त्यमा देवीदेवताको आरती गर्ने गर्दथे । त्यस बखत अर्थात् मसान्तको साँझपख र भोलिपल्ट अर्थात् सङ्क्रान्तिको बिहान पनौतीका कर्माचार्यद्वारा विधिको पूजा हुन्थ्यो । मध्यान्तरमा ती देवताको विविध बाजागाजाका साथ धुमधामसँग रथजात्रा हुने गर्दथ्यो । जात्राका लागि रथको तयारी त्यहाँका राजवंशीहरू गर्दथे र त्यसमा मानन्धरहरूले पनि साथ दिने गर्दथे । जात्रा सकिएपछि ती देवताको प्रतिमा उही द्योछें (देवगृह) मा नै राख्ने गर्दथे । चार दिनपछि विधिको पूजा गरेर ती देवताको प्रतिमा कर्माचार्य पुजारीले पनौतीमा लगी आफ्नो घरको पूजाकोठामा विधिवत राख्ने गर्दथे ।

पछि कसैले मूर्ति चोरेर लगिहाल्यो भने आफूलाई गाल पर्ला भन्ने डरले पनौतीका कर्माचार्य पुजारीले उक्त श्वेतगणेशको मूर्ति चौकोटका राजवंशीहरूलाई जिम्मा दिएकाले उक्त मूर्ति चौकोटका राजवंशीको घरमा राख्ने र उनीहरूले नै नित्य पूजा गर्ने गरियो । तर एक रात चोरहरू आएर श्वेतगणेशको मूर्ति र अर्को भीमसेनको मूर्ति चोरी गरी लगे । हाल श्वेतगणेशको अर्को मूर्ति बनाउन लगाएर जात्रा गर्ने परम्परा चलाई चौकोटका मानिसहरूले बिस्केटजात्रा मनाउँदै आएका छन् । अहिले चौकोटमा भजनपाटी पनि भत्किसकेको छ र दाफा भजन पनि लोप भइसकेको छ ।

हरेक सहरमा दाफा भजनहरू हुन्छन् । त्यहाँ विविध देवीदेवताहरूको महिमाका गीतहरू गाउँछन् । अझ आफ्ना आराध्यदेव या



देवी अर्थात् जीवनरक्षकलाई पुकारा गर्दै विविध बाजा बजाएर भजन गर्ने गर्दछन् । धुलिखेल, श्रीखण्डपुर, पनौती, साँगा, नाला र बनेपाका दाफा भजनका कापीहरूमा यस्तै गीतहरू छन् । ती गीतहरूबाट आराध्यदेव या देवीका विषयमा धेरै कुराहरू झल्किएका छन् । त्यस्तै, पहिले-पहिले चौकोटका मानिसले आफ्ना आराध्यदेव श्वेतगणेशका विषयमा गीतहरू लेखेर राखेका होलान् कि भनी चौकोटका ८२ वर्षे पूर्णलाल मानन्धरसँग 'तपाईंको दाफा भजनको भजनकापी एकचोटि हेर्नुपर्‍यो' भनी माग्दा उहाँले 'दाफा भजनको कुनै पनि सामान बाँकी छैन' भन्नुभएको थियो ।

यसरी हाम्रो समाजमा चल्दै आएका यस्ता सांस्कृतिक कामहरू चौकोटमा मात्र नभई अन्य ठाउँहरूमा पनि बिस्तारै एकपछि अर्को गर्दै लोप हुँदै गएका छन् । त्यस्तै, श्वेतगणेशसम्बन्धी गुठीमा राखिएका खेतहरू पनि धेरै नै हराइसकेका छन् । तर पनि यहाँका मानिसहरूबाट श्वेतगणेशको जात्रा र राजवंशीहरूद्वारा विधिको नित्य पूजा भने भइरहेकै छ ।



# पनौती : एक परिचय

समुद्री सतहदेखि ४६०० फिट माथि त्रिवेणी सङ्गमदेखि पश्चिममा अवस्थित शङ्खाकार पनौतीलाई पाञ्चालदेश, पानवती, पन्ती, पुण्यवती र उत्तर प्रयाग पनि भन्ने गर्दछन् । चार दिशामा चार दिक्पालहरू अनि अष्टमातृकाले परिवेष्ठित, कलिगत ४१९७ सम्वत्मा राजा आनन्ददेवबाट पुनर्निर्मित यो पनौती सहर अति पवित्र स्थल हो । 'वासुकी नागराज हामीकहाँका हुन्, हाम्रो देश वासुकी नागले व्याप्त छ' भन्ने धारणा यहाँका मानिसहरूको छ । शान्तिपूर्वक विराजमान भइरहेका वासुकीलाई शान्ति भङ्ग हुन्छ भनेर पनौतीका मानिसहरूले परापूर्वकालदेखि ढिकी राखी धान कुट्न मनाही गरेका छन् । एउटै ढुङ्गामा अडिएको यस सहरमा १९९० सालको महाभूकम्पमा कुनै एउटा घर पनि भत्केको थिएन । ठूलो उपत्यकामा अवस्थित पनौती सहर बिहावर, खोपासी, सुनथान, शङ्खु र श्रीखण्डपुरका बीचमा परेको हुँदा एउटा ठूलो व्यापारिक केन्द्र बनेको छ । यहाँको माटो मात्र राम्रो भएको होइन, अझ पुण्यमाता र रोसीखोलाले सिञ्चित यस ठाउँमा खेती साह्रै राम्रो हुन्छ ।

सांस्कृतिक दृष्टिकोणले पनौती सहर अत्यन्तै महत्त्वपूर्ण छ । बनेपामा जसरी नौवटा बहाल, नौवटा ढुङ्गेधारा, नौवटा ननी, उनान्सयवटा इनार बनाई नौ वस्तुमा प्राथमिकता दिएर बनेपाको निर्माण गरिएजस्तै पनौतीमा सात वस्तुलाई स्थान दिइएको पाइएको छ । काभ्रे जिल्लामा जनकथनअनुसार सात सय पनौती भन्ने चलन छ । किनभने राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा सात सय घरको पनौती सहरको निर्माण गरेका थिए । त्यसमाथि पनि सातवटा ननी (चोक), सातवटा डबली र सातवटा बहाल राखी यो देशको निर्माण गरिएको हो भन्ने यहाँका मानिसहरूको भनाइ छ ।

पनौती सहरभित्र पश्चिमपट्टि पहिले पाँचतले भगवतीको मन्दिर थियो । अहिले यो ठाउँ खाली भएकाले विद्युत-वितरणका लागि एउटा ट्रान्समिटर राखिएको छ । यो ठाउँ एउटा ढिस्कोमाथि थियो । मल्लकालमा यो ठाउँ क्वाठ थियो । यहाँ उत्खनन गर्दा चारैतर्फ चारवटा इनारहरू फेला परेका थिए । क्वाठ भन्नाले नै मल्लकालमा सैन्य-सिपाही राख्ने ठाउँ थियो भन्ने बुझिन्छ । यस ठाउँमा अहिले घटस्थापना गर्ने चलन छैन । विजयादशमीका दिनमा यहाँ सातजना मानिसहरूले सातैवटा तरबारले



कुभिन्डो काट्ने चलन रहेकोमा त्यो चलन हराइसकेको छ । निश्चय नै बनेपामा नौ अङ्क र पनौतीमा सात अङ्कलाई स्थान दिएको किन हो, बुझ्नु आवश्यक छ । कुभिन्डोलाई काटिसकेपछि विपक्षी दलहरूमाथि कुभिन्डोका टुक्राहरूले हानी लडेर रमाउने चलन थियो । भनिन्छ यो लडाइँ देव र दैत्यहरूका बीचमा भएको लडाइँको प्रतीक हो ।

पापमोचन गर्न नेमुनिले विरूपाक्षलाई पनौतीमा गई स्नान गर्नू भन्ने कुरा बोध गराएको कुरा 'पटन' भनिने संस्कृत भाषामा लिखित थ्यासफूमा उल्लेख गरिएकाले पनि पनौती एक ठूलो तीर्थस्थल हो भन्ने कुरा स्पष्ट हुन्छ । त्यसमा पनि अहल्यासँग अनैतिक काम भई गौतम ऋषिको श्रापबाट मुक्त हुन आफ्नी रानी शचीले पार्वतीको र आफूले (इन्द्रले) पनि त्यही ठाउँमा महादेवको तपस्या गरेका थिए । इन्द्रले तपस्या गरेपछि प्रत्यक्ष भएका यहाँका महादेवलाई इन्द्रेश्वर महादेव भनिएको हो भन्ने किंवदन्ती छ । यसरी पनौतीलाई ठूलो तीर्थस्थल मानी प्रताप मल्लले वि० सं० १७२७ मा रानीपोखरी बनाइसकेपछि विभिन्न तीर्थस्थलहरूको जल राख्ता यहाँको पवित्र तीर्थस्थल त्रिवेणीको पनि जल लगेका थिए भनी यहाँका बूढापाकाहरू भन्छन् ।

पनौतीको त्रिवेणीघाटमा अनेकानेक देवीदेवताहरूका मूर्ति छन् । वास्तवमा त्रिवेणीघाट एक किसिमको खुला सङ्ग्रहालय हो । यहाँको चौधौँ शताब्दीको माधवनारायणको मन्दिरको बायाँपट्टिको अर्द्धगोलाकारमा अति कलात्मक ढुङ्गामा कुँदिएको आफ्ना दुई सँगिनी र अन्य देवीहरूका साथमा अरुणलाई सारथि बनाइएको सूर्यमूर्ति सन् १९८० मा, तेह्रौँ शताब्दीको शिवमूर्ति सन् १९८६ मा, चौधौँ शताब्दीको शिव र विष्णुका साथको सूर्यमूर्ति सन् १९८१ मा, चौधौँ शताब्दीकै नवग्रहसहितको अर्को सूर्यमूर्ति सन् १९८० मा, दायाँपट्टि लक्ष्मी र बायाँपट्टि गरुड, बीचमा विष्णु उभिइरहेको चौधौँ शताब्दीको मूर्ति सन् १९८३ मा र अठाह्रौँ शताब्दीको विष्णुको अर्को मूर्ति सन् १९८० मा चोरेर लगिसकेका छन् ।[1] ती कलाकृतिहरू अत्यन्तै महत्त्वपूर्ण र मूल्यवान् छन् ।

उत्तरप्रयाग कहलिएको अत्यन्त पवित्र तीर्थस्थल पनौतीको त्रिवेणीमा प्रतिष्ठापित सुन्दर, अर्थपूर्ण र पुराना-पुराना तर चोरेर लगिसकेका त्यस्ता कतिपय मूर्तिहरूको छोटो विवरण यहाँ प्रस्तुत गर्न चाहन्छु ।

[1] Stolen Images of Nepal, Lain S. Bangdel : The Royal Nepal Academy, Kathmandu, Nepal, 1989

त्रिवेणीघाटको माधवनारायणको बायाँपट्टि प्रतिष्ठापित पूर्वमल्लकालको सूर्यमूर्ति अर्धगोलाकारको एउटा ढुङ्गामा कुँदिएर प्रदर्शित छ । त्यस कलाकृतिका बीचमा आफ्ना दुवै हातले कमलको फूल समाएर उभिइरहेका सूर्यदेवता अनेकौं देवीदेवताहरूद्वारा परिवेष्ठित छन् । आफ्ना दुई सँगिनीका साथ रहेको उक्त सूर्यमूर्तिको कलाकृतिमा सप्तरङ्गका प्रतीक सातवटा घोडाले तानिरहेको रथमा अरूणलाई सारथिका रूपमा देखाइएको छ । प्रभातका प्रतीक उषा र प्रातःकालका प्रतीक प्रत्युषा, यी दुई देवीहरू सूर्यका दायाँ र बायाँ उभिएर धनुष लिई अन्धकार हटाउन वाण हानिरहेको दृश्य सुन्दर ढङ्गले कुँदिएको चौधौं शताब्दीको उक्त मूर्ति सन् १९८० मा चोरी भएको हो ।

त्यस्तै, त्यही ठाउँमा अर्थात् त्रिवेणीघाटको माधवनारायणको भित्रपट्टि स्थापित अर्को सूर्यमूर्तिका दायाँ र बायाँ शिव र विष्णु छन् । सूर्यको दायाँपट्टि उभिएका चार बाहु भएका शिवले विविध गहनाहरू लगाएका र माथिल्लो बायाँ हातले रुद्राक्षमाला समाइरहेका छन् त माथिल्लो दायाँ हातले काँटा समाइरहेका छन् भने अघिल्लो बायाँ हातले कमण्डलु समाइरहेका छन् त बायाँ हातले काँटा (हुक) समाइरहेका छन् ।

सूर्यको बायाँपट्टि उभिइरहेका विष्णुले श्रीपेच र विविध गहनाहरू लगाउनुका साथै धोतीलाई पेटीले बाँधेर कसेका छन् । आफ्ना माथिल्ला दायाँ र बायाँ हातले चक्र र गदा समाएका भगवान् विष्णुका आफ्ना अगाडिका दायाँ हातले शङ्ख समाइरहेका छन् त दायाँ हातका दुई औंलाबाट गोलो आकृति बनाएका छन् । ती तीन देवताहरूमा बीचका रहेको मुख्य देवता सूर्यको मूर्ति ठूलो पारेर त्यसको महत्त्व बढाइएको छ ।

सूर्यका अगाडि रहेर रथ हाँकिरहेका अरूणले कवच लगाएका छन् । उनैका दायाँ-बायाँ उभिइरहेका दुई देवी उषा र प्रत्युषाले धनुष लिई वाण हानिरहेको कला अत्यन्तै राम्रो छ । त्यस कलाको तलतिर पखेटा भएका सात रङ्गका प्रतीक सातवटा घोडाहरू माथि अन्तरिक्षमा उडिरहेका छन् । यो सूर्यमूर्तिको कलाकृतिको माथिको छत्रमा कमलको फूल र अन्य मालाका बुट्टाहरू छन् । तर यस्तो चौधौं शताब्दीको मूल्यवान् कलाकृति सन् १९८१ मा चोरी भइसकेको छ ।

पनौतीको त्रिवेणीघाट माधवनारायणको भित्तामा दक्षिणाभिमुख गरी प्रतिष्ठापित एउटा अर्को सूर्यमूर्ति पनि अत्यन्तै कलापूर्ण छ । कमलासनमा उभिइरहेका भगवान् सूर्यले आफ्ना दुवै हातले कमलको फूल समाएका छन् । सूर्यका दायाँपट्टि तीनवटा ग्रह र बायाँपट्टि चारवटा ग्रह पद्मासनमा



उभिइरहेका छन् भने अलि पर दायाँ र बायाँ एक-एकवटा अन्य ग्रह पनि उभिइरहेका छन् । यस्तो उच्चकोटीको चौधौं शताब्दीको कलाकृति पनि सन् १९८० मै चोरी भइसकेको छ ।






**(चोरी भएका केही मूर्तिहरू)**

त्रिवेणीघाटमा प्रतिष्ठापित कमलासनमा उभिइरहेका विष्णुको मूर्तिको दायाँपट्टि उभिइरहेकी लक्ष्मी र बायाँपट्टि गरूड भएको यस कलाकृतिमा विष्णुका माथिल्ला दुई हातले क्रमशः चक्र र गदा समाइरहेका छन् । तलको बायाँ हातले शङ्ख र दायाँ हातले सम्भवतः कमलको फूलको बिउ लिइरहेको यस कलाकृतिमा भगवान् विष्णुले श्रीपेच, पवित्र धागो र अरू गहनाहरू लगाएका छन् र धोतीलाई पेटीले बाँधेको छन् । यी देवताको दायाँपट्टि कमलको फूलमा त्रिभङ्ग मुद्रामा उभिएकी लक्ष्मीले बायाँ हातले कमलको फूल र दायाँ हातले गाँठ (उभाडा) लिएकी छन् । साथै यी देवीले विविध गहनाहरू लगाएकी छन् । विष्णुको बायाँपट्टि उभिएर बिन्ती गरिरहेका गरूडले धोतीका साथै अन्य विविध गहनाहरू लगाएका छन् । सन् १९८३ मा चोरी भएको उक्त मूर्ति चौधौं शताब्दीको हो ।

त्यस्तै, त्रिवेणीघाटमा प्रतिष्ठापित अर्को एउटा विष्णुको मूर्ति (अठाह्रौं शताब्दीको) सन् १९८० मा चोरी भइसकेको छ। चोरी भइसकेका कलापूर्ण यी मूर्तिहरूको विवरण लैनसिंह बाङ्देलको Stolen Images of Nepal मा उल्लेख गरिएको छ । यीबाहेक पनौतीका अरू महत्त्वपूर्ण मूर्तिहरू पनि चोरी भइसकेका छन् । अब बाँकी भएका पनौतीका त्यस्ता महत्त्वपूर्ण कलाकृतिहरू सम्बन्धित निकायहरू र पनौतीवासीहरूले बचाइराख्नु आवश्यक छ ।



(पनौतीको रथजात्रा)

पनौतीमा प्रतिवर्ष ज्येष्ठ पूर्णिमाका दिन ठूलो मेला लाग्दछ । त्रिवेणीको उत्तरपट्टि माथि दलिनचोकडाँडामा गोरखनाथ र तल पुण्यमाताको किनारामा ब्रह्मायणीको मन्दिर छ । त्रिवेणीघाटको बीचमा उभिएर चारैतिर दृष्टि दिँदा यहाँ भएका अनेकानेक देवीदेवताहरूलाई देखेर यो ठाउँ एक पवित्र धर्मस्थल हो भन्ने लाग्दछ । राधाकृष्ण, नारायण, महादेवका धेरै-धेरै लिङ्गहरू, केदारनाथ, शीतलामाई, मुक्तेश्वर, सङ्कटनारायण र अन्य धेरै देवीदेवताका अति राम्रो ढुङ्गामा कुँदिएका कलापूर्ण देवीदेवताले भरिपूर्ण भएको यो त्रिवेणीघाट धार्मिक र पुरातात्त्विक दृष्टिले अति भव्य र विशाल देखिन्छ । यो अति नै पुण्यस्थल भएको हुँदा धेरै परपरबाट मानिसहरूको लास यहाँ ल्याई विधिपूर्वक दाहसंस्कार गरेर दिवङ्गत आत्मालाई तार्ने चलन अद्यापि छँदैछ । प्रत्येक बाह्र वर्षको माघ महिनाभरि मकरमेला लाग्ने पनि यहीँ नै हो । त्यस बखत टाढाटाढाबाट भक्तजनहरू आई यहीँकै पुण्य तीर्थस्थल त्रिवेणीमा स्नान गरेर आफ्नो मन र आत्मा शुद्ध पार्दछन् ।



ज्यापुन्हि अर्थात् ज्येष्ठपूर्णिमाका दिनमा यहाँ ब्रह्मायणी, भद्रकाली, इन्द्रेश्वर र उन्मत्तभैरवको भव्यताका साथ जात्रा हुन्छ । उन्मत्तभैरवको रथ पछाडिबाट र इन्द्रेश्वर महादेवको रथ अगाडिबाट भद्रकालीको रथसँग जुधाउने यहाँको जात्रा रहस्यमय र अर्थपूर्ण छ । ज्येष्ठ शुक्ल त्रयोदशीका दिन मध्यरातमा 'द्वींचा झय्केगु' गर्ने चलन पनि भावपूर्ण छ । दिनभरि पर्खदा पनि वर्षाका कारणले खोलो बढिरहेकाले पुण्यमाताखोलाबाट पारि गई ब्रह्मायणीलाई गर्नुपर्ने पूजा नै गर्न नसकिएको हुँदा जात्रा नै रोक्का हुने देखिएकाले यहाँका वासुकी नागराजले पुलको रूप लिई मानिसहरूलाई पार गराई ब्रह्मायणीको पूजा गर्न लगाइएको थियो भन्ने कुरा 'द्वींचा झय्केगु' गर्ने यस चलनले देखाउँछ । सामान बोक्ने एक ज्यापू, कोतपूजा बोक्ने एक मूल पुजारी, कँलालीपूजा बोक्ने एक द्वीनी र तरबार बोक्ने एकजना द्वारे, यी चारजनाको टोली पुण्यमातापारि ब्रह्मायणीलाई पूजा गर्न जाने प्रक्रियालाई 'द्वींचा झय्केगु' भन्दछन् । नागराजको शरीर साह्रै नै चिप्लो भएको हुँदा यो टोली जाँदा पुलबाट खसिएला कि भनेर बिस्तारै हिँडेर जाने यो दृश्य अति नै भावपूर्ण र अर्थपूर्ण छ । आजकाल नाग र नागिनीका रूपमा प्रयोग गर्नका लागि दुइटा बाँस राख्ने चलन छ ।

एक समय पनौती सहरभित्र यताउता घुम्दै जाँदा मलाई एकजनाले 'यो नमोबुद्धको घर हो' भनी औंल्याई देखाइदिनुभयो । बौद्धकथनअनुसार एक समय राजा महारथ पनौतीमा राज्य गर्दथे ।[२] राजाका तीनजना छोराहरूमध्ये कान्छा छोरा महासत्व राजकुमारले भोकले मर्न लागेकी एउटी बघिनी र उसका डमरुहरूलाई आफ्नो शरीरको रगत र मासु खुवाएर उनीहरूको प्राणरक्षा गरिदिए । आफ्नो प्राण त्यागेर त्यसरी अर्काको प्राणरक्षा गरी उनले बोधित्व प्राप्त गरे । आफ्ना छोराको बाँकी भएका हाडहरू जम्मा गरी राजा महारथले एक स्तुप बनाए । त्यही स्तुपलाई हामी नमोबुद्ध भन्दछौं । भाद्र कृष्ण द्वादशीका दिन यहाँ नमोबुद्ध ल्याई त्रयोदशीका दिनमा दुइटा दीपङ्कर बुद्धसँगै नमोबुद्धको हरेक वर्ष भव्य ढङ्गले जात्रा हुन्छ । दुई दिनको मेलापछि फेरि पनौतीबाट शङ्खु लाने गरिन्छ ।

नेपालमा चार जोगिनी, जस्तै : फर्पिङकी वज्रयोगिनी (आकाश जोगिनी) बोधियानाचार्यका लागि, साँखुको उत्तरी पर्वतकी खड्गजोगिनी प्राचीन साकेतुक नगरका राजा मणिचूडका लागि, मृगस्थलीकी नैरात्मा

[२] कसैकसैले राजा महारथको राज्य शङ्खु हो भन्ने गरेका पनि छन् ।

जोगिनी (गुह्येश्वरी) मञ्जुश्री बोधिसत्वका लागि र स्वयम्भूको तल नीलगिरीकी विद्याधरी जोगिनी (विजयेश्वरी) पनौतीका पण्डित वज्रपातका लागि प्रत्यक्ष भए । यी प्रमाणहरूका आधारमा पनि पनौती अति पुरानो बस्ती हो भन्ने कुरा थाहा हुन्छ । हरिसिंहदेव पनि सिमरौनगढबाट आउँदा पनौतीबाटै भित्रिएका हुन् भनी यहाँका बूढापाकाहरू भन्दछन् । यहाँ तलेजूको मन्दिर थियो । अहिले पनौतीमा अवस्थित लायकूको उत्खनन भइरहेको छ । उत्खननका क्रममा पनौतीको तलेजूमन्दिरको अवशेष भेटिएको छ । तलेजूको जात्रा पनि यहाँ प्रतिवर्ष भइरहेको छ ।



. (इन्द्रेश्वर महादेवको मन्दिर)

पनौतीका प्रसिद्ध देवता इन्द्रेश्वर महादेव हुन् । यहाँका मानिसहरूमा यी देवताप्रति असीम श्रद्धा र भक्ति छ । त्यसैले यहाँको पहिलो विद्यालयको नाम नै इन्द्रेश्वर माध्यमिक विद्यालय राखिएको थियो । प्रसिद्ध नदी रोसी र पुण्यमाताका बीचमा अवस्थित इन्द्रेश्वरको चोक (जगती) अति नै राम्रो छ । चार दिशामा चार ढोका भएको र पुरानो तेलिया इँटाले छापिएको हाताभित्र मन्दिरका चार कोणमा चारवटा नारायण (लक्ष्मीनारायण, सत्यनारायण, सूर्यनारायण र कृष्णनारायण) र अन्य देवीदेवताहरूका मूर्तिहरू स्थापना गरिएका छन् । यी सबै नारायणका मूर्तिहरू अति कलापूर्ण र आकर्षक ढङ्गले कुँदेर बनाइए तापनि दक्षिण-पश्चिमको सूर्यमूर्ति कल्पनापूर्ण छ । आठ ग्रहले घेरेर सूर्यलाई रथमा राखी अरुणलाई सारथि बनाएर सातवटा घोडाले तान्न लगाई



अन्धकारलाई चिरेर दौडाइएको देखिने यो कलाकृतिको तलतिर दुवैतिरबाट धनुष समात्न लगाई ज्योतिरूपी वाणले हान्न लगाएर जगत्लाई नै उज्ज्वल गर्ने लक्ष्य कलाकारले प्रस्ट देखाएका छन् । अनि कालो ढुङ्गामा कुँदेर बनाइएको यो कला कहिले बनाइयो र यसको कलाकार को हो आदि कुरा यसको पादपीठमा लेखिएको छैन । कलाकारको सुन्दर कल्पनाले भरिपूर्ण यो प्रशंसनीय कलाको माथि टुप्पामा शिवलिङ्ग सजाइएको छ । यो सृष्टिको प्रतीक हो ।

इन्द्रेश्वर महादेवको मन्दिर चोक (जगती) को बीचमा पर्दछ । प्यागोडा शैलीको यो तीनतले मन्दिर राम्रो कलाको नमुना हो । पहिलो तलामा मन्दिरका चारैतिर भित्रबाट झन्डै तीन इन्चका दलिनहरू बाहिर निकाली राम्रा-मसिना घोडाका चित्रहरू कुँदिएका छन् । ती घोडाहरूले बल गरी मन्दिर नै बोकिरहेको जस्तो स्पष्टरूपेण भान हुन्छ । त्यसमा पनि यी दलिनहरूमा बीचमा मङ्गलसूचक वस्तुहरू (अष्टमङ्गल) बुट्टा कुँदी आकर्षक रूपमा कलाप्रदर्शनी गराइएको छ । मटानको तलामा ६-६ वटा टुँडाल राखी मन्दिरको छानालाई अड्याइएको छ । चार कुनाका चारवटा टुँडालमा कुँदिएको शार्दूलले मन्दिरलाई नै बोकेको जस्तो देखिन्छ । यी अनौठा प्राणीहरू अलौकिक शक्ति र सामर्थ्य भएका देखिन्छन् । उनीहरू नै मन्दिरका दिक्पाल हुन् । उनीहरू दुष्ट प्रवृत्तिका प्राणीहरूलाई र अमङ्गलकारी कुराहरूलाई मन्दिरभित्र प्रवेश गर्न नदिने सिपाहीहरू हुन् । पूर्वपट्टिका ६ वटा टुँडालमा यक्ष र यक्षणी, दक्षिणपट्टि युधिष्ठिर, द्रौपदी, भीमसेन, अर्जुन, नकुल र सहदेव, पश्चिममा हनुमान, राम, सीता, लक्ष्मण, भरत र शत्रुघ्न कुँदिएका अति नै भावपूर्ण र आकर्षक कलाकृति छन् । उत्तरपट्टिका ६ वटा टुँडालमा चामुण्डा, माहेश्वरी, भैरव, यक्ष, यक्षिणी र चामुण्डा छन् । त्यति मात्र नभई इन्द्रेश्वर मन्दिरको भित्तामा कुवेर, लक्ष्मी, इन्द्र, नारायण आदि कैयौँ हिन्दू देवीदेवता र देवीदेवताका वाहनहरू कलाकूर्ण काष्ठकलाबाट सजाइएका छन् ।

पनौतीका पूज्य ठाउँहरूमध्ये मुख्यतः इन्द्रेश्वर मन्दिर हो । भोँत (बनेपा) वंशका जयादित्यकी विधवा एउटी अत्यन्तै प्रभावशाली राजकुमारी बिरमदेवीले इन्द्रकुट (इन्द्रेश्वर महादेवको मन्दिर) ने० सं० ४१४ मा बनाइदिएकी हुन् ।[३] 'ने० सं० ४१४ (वि० सं० १३५१) को

---

[३] (क) Gills Beguin, Nepal – Valley of Gods, 1997 A.D., Indian Books Distributer (Bombay) Ltd.

(ख) पनौतीका सांस्कृतिक सम्पदाको एक अध्ययन, लेखक : ऋद्धि प्रधान, बनेपा सातगाउँ (बनेपा नगरपालिकाबाट प्रकाशित स्मारिका)

वैशाख महिनामा युवराज्ञी बिरमदेवीले इन्द्रकुट बनाइन्' भनी 'गोपाल राजवंशावली' को पत्र नं० १७ मा पनि उल्लेख छ ।

मन्दिरभित्रको मध्यभागमा इन्द्रेश्वर महादेव छन् । चतुर्मुखी यी लिङ्गलाई बीचमा पारेर एउटा काठबाट निर्मित मन्दिरस्वरूपको खटमा राखी भक्तजनलाई दर्शन गराउने किसिमले देवतालाई प्रदर्शन गराइएको छ । इन्द्रेश्वरलाई चतुर्मुखी सुनको खोल बनाउन लगाउने व्यक्ति त्यस बखतका महामन्त्री जयसिंहराम वर्द्धन थिए । उनले इन्द्रेश्वर मन्दिरको छानालाई सुनको मोलम्बा लगाइदिए भन्ने कुरा इन्द्रेश्वर मन्दिरभित्रको ने० सं० ५२१ सालको एउटा सुनौला पत्रमा उल्लेख भएको कुरा अभिलेखले देखाउँछ । जयसिंहराम बनेपाली थिए ।[४] उनले राजा जयार्जुनदेवलाई पुष्पाभिषेक र जयस्थिति मल्ललाई पट्टाभिषेक गरेको कुराका साथै मुगल सम्राट सुल्तान समसुद्दीनको आक्रमणबाट ध्वस्त पारिएको पशुपतिनाथको मन्दिरभित्र ने० सं० ४८० मा चारै वेदका आधारमा चतुर्मुखी पशुपतिनाथको मूर्ति बनाउन लगाएर शास्त्रीय विधिअनुसार प्रतिष्ठापन गरेका थिए भन्ने कुरा उक्त अभिलेखले पनि देखाउँछ ।

इन्द्रेश्वरमन्दिरको हातामा दक्षिणपट्टि उन्मत्तभैरवको आगँ छैं छ । त्यहाँ पूर्वपट्टि पश्चिमाभिमुख भई उभिइरहेका उन्मत्तभैरवले दायाँ पाउले मूसो र बायाँ पाउले नाग कुल्चिएका छन् । ठीक त्यसैको सामुन्ने अर्थात् पश्चिमपट्टि पूर्वाभिमुख भएर उभिरहेको अर्को उन्मत्तभैरवको मूर्ति छ । यी भैरव पनौतीजात्रा गर्ने भैरव हुन् । ती दुई भैरवका बीचमा दक्षिणतिरको भित्तापट्टि क्रमशः कुमार, ब्रह्मायणी, माहेश्वरी, कौमारी, वैष्णवी, वाराही, इन्द्रायणी, चामुण्डा, महालक्ष्मी र गणेश राखिएका छन् । पूर्वपट्टिका भैरवको दायाँतिर बेताल पनि छ । भैरवका विविध वाहनका रूपमा प्रयोग हुने गरेको मध्ये मूसाआसन भैरव भक्तपुरको प्रसिद्ध भैरवचोकमा छन् र जितामित्र मल्लको समय ने० सं० ५९७ भाद्र शुक्ल द्वितीयाको शिलापत्रसहित भक्तपुर तलेजु मूलचोकको पश्चिमतर्फ अवस्थित कुमारीचोकमा नागआसनका भैरव छन् ।[५] इन्द्रेश्वरमन्दिरको चोकबाहिर

---

[४] शक्तिशाली भारदार रामवर्द्धनहरू र तत्कालीन नेपाल, लेखक : धनव्रज वज्राचार्य, पूर्णिमा, अङ्क ७, २०२२

[५] पाल्पा जिल्लाका इष्टदेव भैरव, लेखक : विष्णुकान्त शर्मा, अभिलेख, सम्पादक मण्डल : सानुमैया राणा र अम्बिकाप्रसाद रेग्मी, प्रकाशक : श्री ५ को सरकार, शिक्षा, संस्कृति तथा समाजकल्याण मन्त्रालय, पुरातत्त्व विभाग, राष्ट्रिय अभिलेखालय, २०५१



पूर्वपट्टि भैरवको अर्को मन्दिर छ । चोकभित्रका उन्मत्तभैरवलाई बलि दिने चलन छैन । मानिसहरूले बलिपूजा गर्नुपर्दा बाहिरका यी भैरवलाई बलि दिने गर्दछन् ।

नेपालका ६४ लिङ्गहरूमध्ये इन्द्रेश्वर पनि एउटा हो । यो मन्दिर कहिले निर्माण भयो भन्ने कुराको प्रमाण फेला परेको छैन । तर राजा आनन्ददेवले देशनिर्माणको अभियान चलाउँदा पनौती सहरको निर्माण गर्ने सिलसिलामा इन्द्रेश्वरको मन्दिर पनि निर्माण गरेको हुनुपर्दछ भनी यहाँका मानिसहरू भन्दछन् । भनिन्छ काठमाडौँको पशुपति मन्दिर र पनौतीको इन्द्रेश्वर मन्दिर उही समय र उही शैलीमा बनेका थिए । काठमाडौँका राजा-महाराजाहरूले आ-आफ्ना शासनकालमा पशुपतिप्रति भाव र भक्ति देखाई मन्दिरको जीर्णोद्धार गर्दा सुरुको शैली फरक हुँदै आएको तर पनौतीको इन्द्रेश्वर मन्दिरचाहिँ यथावत नै रहेको देखिन्छ । 'पनौती एकीकृत आयोजना' अन्तर्गत अरू मठमन्दिरहरूका साथसाथै इन्द्रेश्वरको मन्दिरको पनि राम्रै ढङ्गले जीर्णोद्धार गरिएको छ । यस मन्दिरको दक्षिणपट्टि एउटा मन्दिरमा उन्मत्तभैरव र अष्टमातृका राखिएका छन् । पश्चिमपट्टिको ठूलो ढुङ्गामा तुलानारायण छन् । यी तुलानारायणसँग जयसिंहराम वर्द्धनको इतिहास गाँसिएको छ । इन्द्रेश्वर मन्दिरभित्र राखिएको एउटा स्वर्णपत्रमा जयसिंहराम वर्द्धनले राजा जयार्जुनदेवको पुष्पाभिषेक र जयस्थिति मल्लको पट्टाभिषेक गरे भन्ने कुरा लेखिएको पाइन्छ ।

इन्द्रेश्वर मन्दिरजस्तै यहाँ अरू मन्दिरहरूले पनि महत्त्वपूर्ण इतिहास बोकेका छन् । दलिनचोकडाँडाको फेदमा अवस्थित ब्रह्मायणीको मन्दिर र अरू कैयौँ देवीदेवताका मूर्तिहरू आ-आफ्ना इतिहास बोकेका छन् । यी सबै विषयमा अनुसन्धान गरे अत्यन्त महत्त्वपूर्ण कुराहरू पत्ता लाग्नेछन् ।



# गणेशसँग मानन्धरहरूको सम्बन्ध

'केन्द्रीय मानन्धर सङ्घ' का सदस्य मङ्गलकृष्ण मानन्धरले मलाई एकचोटि टेलिफोनमा 'माड्साहेब ! मानन्धर सङ्घको स्मारिकाका लागि एउटा लेख चाहियो, गणेशसँग मानन्धरहरूको सम्बन्ध भएको लेख भए झनै राम्रो हुनेछ' भन्नुभयो । उहाँलाई 'खै, एकचोटि प्रयास गर्छु, सके लेखूँला' भनी जवाफ दिएँ । हुन त यस्तो लेख जीतबहादुर मानन्धर (काठमाडौं लायकूसाः टोल) लाई लेखाउनुभए राम्रो हुने थियो । उहाँ यस विषयमा धेरै जान्ने व्यक्तित्व हुनुहुन्छ । अझ भनूँ भने उहाँका बुबाआमाको नाम नै गणेशबहादुर र गणेशमाया हो । फेरि उहाँले 'श्रीगणेशाय नमः' नामक साह्रै राम्रो पुस्तक पनि लेख्नुभएको छ । तर पनि मङ्गलकृष्ण मानन्धरलाई 'हुन्छ' भनिसकेकाले मैले गणका नायक गणेश देवताको विषयलाई लिएर यो लेख लेख्न थालेको हुँ ।

हात्तीको जस्तो टाउको र मानिसको जस्तो शरीर भएका निर्विघ्नताका प्रतीक गणेशलाई गणपति, बक्रतुण्ड, विनायक, एकदन्त, गजानन, लम्बोदर, भालचन्द्र, धूम्रकेतु आदि नाउँहरूले पुकारिन्छ । पाञ्चायन देवता (गणेश, सूर्य, देवी, शिव र विष्णु) मा गणेशको अग्रपूजा हुने गर्दछ । सृष्टिको सुरुदेखि नै असुरहरूले विघ्नबाधा उत्पन्न गर्ने-गराउने हुँदा विघ्ननाशक गणेशको आवश्यकता महसुस गरी महादेव र पार्वतीको प्रयासबाट यी देवता प्रकट भएका हुन् ।

हाम्रो समाजमा व्रतबन्ध, बेलविवाह र भीमरथारोहण गर्ने गरिन्छ । बस्नका लागि घर बनाइन्छ । जीवनमा अति नै महत्त्वका यस्ता कामहरू गर्नमा कुनैकतैबाट विघ्नबाधा आइनपरोस् भन्ने कामना गरी सबैभन्दा पहिले विघ्ननाशक देवता भनी मानिरहिएका गणेश देवतालाई नै पूजा गर्ने गरिन्छ । यसरी हामीलाई नभई नहुने देवता भएका कारणले टोलटोलमा, देवालयमा, घाटमा, बाटामा, पोखरीका किनारमा, ढुङ्गेधारामा आदि-आदि ठाउँहरूमा गणेशका मूर्तिहरू स्थापना गरिराखिएका छन् । त्यसै गरी हामीले आ-आफ्ना घरहरूमा पनि गणेशका मूर्तिहरू स्थापना गरी दिनदिनै पूजा गर्ने गरेका छौं । शिल्पकारहरूले धातु, ढुङ्गा, काठ, माटो आदि अन्य वस्तुहरूबाट दुईदेखि सोह्र हातसम्म भएका गणेशहरू बनाएको हामीले



देखेका छौं । यी देवताहरू कुनै स्थानमा आसीन र नृत्य मुद्राका छन् । चित्रकारहरूले पनि यस्तै किसिमका चित्रहरू बनाउने गरेका छन् । यसरी अति नै महत्त्वका देवता भएका हुनाले हाम्रो देशमा मात्र नभई भारत, चीन, पाकिस्तान, बङ्गलादेश, श्रीलङ्का, जापान, कम्बोडिया, थाइल्यान्ड, इरान आदि देशहरूमा पनि गणेशको प्रसिद्धि छ ।

गणेशका शक्तिस्वरूपा सँगिनीहरू ऋद्धि र सिद्धि हुन् । यी सँगिनीहरूबाट शुभ र लाभ नामका मानसपुत्रहरू जन्मिए भन्ने मानिन्छ । विभिन्न ठाउँहरूमा साँढे, मयुर, गरुड, सिंह र हात्तीमाथि गणेश आरूढ भएको पाइए पनि मुसामाथि आरूढ गणेशका मूर्तिहरू बढी सङ्ख्यामा पाइन्छन् । त्यस्तै, गणेशले समाएका हतियारहरूमा वज्र, शक्ति, दण्ड, खड्ग, पाश, अङ्कुश, गदा, त्रिशूल, चक्र, बन्चरो आदि छन् । विद्या, ज्ञान, बुद्धि, सिद्धि, कीर्ति, सीप, धन, स्त्री, पुरुष र सन्तानहरूको प्राप्तिका लागि यी देवताको आराधना गर्नेहरूमा हिन्दू र बौद्ध दुवै पाइन्छन् ।[१] त्यसरी नै रोगादि कष्टहरू नहोउन् भनेर अथवा रोग निको पार्न, व्यापार राम्रो पार्न, खेती राम्रो पार्न, रक्सी-जाँड राम्रो पार्न, विदेश गएका मानिसहरूको खबर जान्न, हराएको माल भेट्टाउन, बोली नफुट्ने बच्चाबच्चीहरूलाई बोल्न लगाउन आदिका लागि पनि यी देवतालाई पूजा गर्ने गर्दछन् ।

नेवारहरूका विविध चाडपर्वहरूमध्ये यःमरीपुन्हि (मार्ग शुक्ल पूर्णिमा) पनि एक महत्त्वपूर्ण पर्व हो । नेवारहरूले घरघरमा यःमरी (एक किसिमको चैत्य आकारको, भित्र तिल र चाकु राखेर चामलको पिठोबाट बनाइने रोटी) बनाउने गर्दछन् । बिहान यःमरी बनाउँदा चामलको पिठोबाट विभिन्न किसिमका जन्तु, पन्छी अनि लक्ष्मी, सरस्वती, कुबेर आदि देवीदेवताहरू पनि बनाइन्छ । त्यस्ता देवीदेवताहरू बनाउँदा एउटा गणेशको प्रतिमा पनि अनिवार्य रूपले बनाउनुपर्दछ र पूजा गर्दा त्यसरी बनाइएका गणेशलाई नै सबैभन्दा पहिले पूजा गरी पछि मात्र अरूहरूलाई पूजा गर्नुपर्दछ । चार दिनपछि यी देवीदेवता र यःमरीलाई फेरि पूजा गरी मानिसहरूले आफ्नै काममा प्रयोग गर्ने गर्दछन् ।

हामीले हाम्रो समाजमा जसरी यी गणेशलाई श्रद्धा र भक्तिका साथ पूजाआजा गरेर मानिरहेका छौं, त्यस्तै दैवी समाजमा पनि यी देवताको भूमिका ठूलो छ । काठमाडौं, पाटन, ठिमी, भक्तपुर र अन्य सहर तथा

---

१ श्रीगणेशाय नमः, जीतबहादुर मानन्धर, प्रकाशक श्रीमती तारादेवी मानन्धर, लायकुसाल काठमाडौं, २०३१

गाउँमा मुकुन्डो लगाएर नाच्ने गणनाचहरू छन् । अष्टमातृकासहितको गणनाचमा गणनायक गणेश हुन्छन् । यस्ता किसिमका महत्त्वपूर्ण गणनृत्यहरूमा गणेशहरूको भूमिका अत्यन्तै ठूलो हुन्छ ।

गणेशलाई महादेव र पार्वतीका पुत्र भनी मानिएकाले यिनलाई हिन्दूदेवता भनी भन्नेहरू पनि नभएका होइनन्, तर यी देवतालाई बौद्धहरूले पनि उत्तिकै मानिरहेका छन् । महायान र वज्रयान बौद्धसमाजमा यी देवताको महत्त्व अत्यन्तै ठूलो छ । इन्द्रजात्राका समयमा कुमारीको रथयात्रामा शाक्यवंशकी केटीलाई जीवित कुमारी देवी र केटाहरूलाई गणेश र भैरवका रूपमा स्थापना गरी रथमा राखेर जात्रा गर्ने चलन अद्यापि चल्दैछ । पहिले काठमाडौँ उपत्यका नागदहका रूपमा छँदा मञ्जुश्री बोधिसत्वले नागदहको पानी खुलाएर पठाउँदा सबैभन्दा पहिले गणेशलाई नै स्थापना गरेका थिए भन्ने किंवदन्ती छ । यस कुरालाई विचार गरी हेर्दा चोभारमा शिलाका रूपमा भएको जलविनायक नै ती देवता हुन् भन्ने अनुमान गर्न सकिन्छ ।

पहिले-पहिलेका धेरैजसो मानिसहरूको व्यवसाय नै खेती थियो । खेतीबाट अन्न भित्र्याइसकेपछि मानिसहरूले आनन्दको सास फेर्दथे । पहिलेका बनेपाली मानन्धरहरूको मुख्य व्यवसाय नै खेती थियो । धान काट्ता धेरैजसोले हकुवा राख्ने गर्दथे । हकुवा राख्ता धान काटिसकेपछि ती धानका बालाहरूलाई नझारी धान त्यसै चाङ बनाएर राख्ने गर्दथे । आठ-नौ दिनपछि धानका ती बालाहरू झार्न आफ्ना नातेदारहरू र मिल्ने साथीहरूको सहयोग लिई हकुवा दाइँ (मुठामुठा पारी मानिसहरूले खलामा धान झार्ने काम) गर्दथे । धान झार्ने काम गर्नुभन्दा पहिले खेतमा खलो बनाउने गर्दथे । अनि धान झारी पराललाई मुठा-मुठा पारी बाँधेर धान खेर नजाओस् भनी खलामा परालका मुठाहरू मिलाएर बिछ्याउँथे । धान झारिसकेपछि सबै धान खलाको बीचमा थुपार्ने गर्दथे । त्यसपछि घरबाट पूजा ल्याउने गर्दथे । यसरी पूजा ल्याउँदा त्यहाँ कसैले बोका त कसैले भाले बलि दिने गर्दथे । तर कसैकसैले भने घ्यू-कस्ती राखेर पूजा गर्ने गर्दथे । हकुवा झार्ने खलामा आइमाईले भने जान हुँदैनथ्यो । लोग्नेमानिसहरूले पनि त्यहाँ खलामा बसेर अश्लील शब्दहरू बोल्न हुँदैनथ्यो । केही गरी त्यहाँ कुनै व्यक्तिले अनायास त्यस्तो शब्द बोले उसलाई त्यहाँ काम गर्न आएका उपस्थित मानिसहरूले खुट्टा तानेर सजाय दिई उनीहरूलाई मिठाई खुवाउन कबोल गराउँथे ।

म सानो छँदा हामीले पनि हकुवा राखेका थियौँ । हकुवा दाइँ गरिसकेपछि पूजा लिई मेरा दाजु सानकाजी खिँ मानन्धरसँगै म पनि



खेतमा गएको थिएँ । हकुवा झारेको खलाको बीचमा हकुवा थुपारेर राखिएको थियो । त्यस बखत सबैजना आ-आफ्ना ठाउँमा बसिरहेका थिए । त्यसै बखत मेरा पूज्य बुबा मोहनलाल खिँ मानन्धर पूजा गर्न लाग्नुभयो । उहाँले हात धोइसकेपछि भुइँमा बिछ्याइएको एक मुठा पराल आधा भाग मात्र झिकी खलामा उठाइदिनुभयो । त्यो देखेर मैले बुबासँग सोधेँ – "बुबा ! तपाईंले त्यो पराल किन उठाइदिनुभएको ?"

अनि बुबाले भन्नुभयो – "त्यो एकै ठाउँमा थुपारिएको धान भनेको लक्ष्मी हो । अहिले हामीले देवी लक्ष्मीलाई पूजा गर्नुभन्दा पहिले गणेश देवताको स्थापना गरी ती देवतालाई पूजा गर्नुपर्दछ । कसैकसैले थुपारिएको धानमा नै गणेशको आकारमा धर्सो तानेर नै गणेशको पूजा गर्ने गर्दछन् । तर त्यसो नगरीकन गणेशलाई अलग्गै स्थापना गरेर पूजा गर्नु नै राम्रो हुन्छ ।"

त्यसपछि मैले फेरि भनेँ – "यो परालको मुठो त गणेशको रूपजस्तै आकारको हुन आयो । बाँधिराखेको त्यो परालको मुठाका ती दुईवटा पराल उतापट्टि बेरिएर गएकाले त्यो त गणेशको सुँडजस्तै देखियो । झन् तपाईंले सिन्दुर लगाई पूजा गरिसकेपछि त साँच्चिकै गणेशदेवताजस्तो भयो ।"

मेरो त्यस्तो कुरो सुनेर त्यहाँ काममा आउने सबै मानिसहरू हललल्ल हाँसे । यसरी हाम्रो समाजमा जुनसुकै काममा गणेशलाई नै सबैभन्दा पहिले भक्तिका साथ पूजा गर्ने चलन छ ।

मानन्धरहरू पहिल्यैदेखि प्राविधिज्ञ भएका कारणले गर्दा तोरी पेल्दै तेल उत्पादन गरी तेलको व्यापार गर्ने पनि गर्दथे । चौबीस हात लम्बाइ र अठाह्र हातजतिको चौडाइको एक समथर जग्गामा चारैतर्फ गारो लगाई झ्याल, ढोका र भित्रपट्टिका ठाउँठाउँमा खोपा राखिन्थ्यो । त्यसमा परालको छानो राखेर बनाइएको एक किसिमको छाप्रोजस्तो देखिने ठाउँमा राख्न मिल्ने गरी यान्त्रिक कार्य गर्न बनाइएको यन्त्रलाई कोल भनिन्छ । त्यस ठाउँमा मानन्धरहरूले पुर्खौंदेखि काम गर्दै आएका हुन्छन् । त्यहाँ विविध देवीदेवताहरू पनि स्थापना गरिराखिएका हुन्छन् । त्यसमाथि पनि कोलको प्रवेशद्वारमा भित्र दाहिनेपट्टिको खोपामा एउटा गणेशको मूर्ति पनि स्थापना गरिएको हुन्छ । तेल पेल्ने मानन्धरहरूले बिहान घरमा भात पकाइसकेपछि घरबाट सबैभन्दा पहिले आगँजा (देवीदेवतालाई चढाउन ल्याइएको भात) ल्याई यी गणेशलाई नै चढाउने गर्दछन् । त्यसपछि मात्र अरू देवीदेवताहरूलाई चढाउने गर्दछन् । त्यस्तै, पर्वपर्वमा कोलमा पूजा हुँदा पनि सबैभन्दा पहिले यी गणेशको नै पूजा गर्दछन् ।

बनेपामा पहिले अठाह्रवटा कोलहरू थिए । कोभाःगणेशनजिकै कोभाःसाः (कोभाः नामको कोल) थियो । कोनेसाः (कोने नामको कोल) को नजिकै तुकंप्वःगणेश छन् । कोभाःकोल कोभाःगणेशसँग र कोनेसाः ( कोनेकोल तुकंप्वःगणेशसँग सम्बन्धित छन् । कोभाःकोलको आम्दानीमध्ये केही कोभाः दाफा भजनलाई तथा कोभाःगणेश र चण्डेश्वरीमा भजन गर्न दिनुपर्ने हुन्छ । त्यसका साथै कोभाःगणेशको मन्दिरको चारैतर्फ पर्वपर्वमा दीप बाल्नुपर्ने पनि हुन्छ । त्यस्तै किसिमले कोनेसाः (कोनेकोल) का मानन्धरहरूले पनि बाँख्य दाफा भजनलाई तथा तुकंप्वःगणेश र चण्डेश्वरीमा भजन गर्नका लागि उक्त कोलको आम्दानीमध्ये केही आम्दानी बुझाउनुपर्ने हुन्छ । विजयादशमीको बिहान कोनेसाःका मानन्धरहरू तेल पेल्ने सामग्री, जस्तै : पूँ, नँ, गोलकथी, लडी (यी सबै तेल पेल्न चाहिने नेवारी शब्दका सामानहरू हुन्) लिएर परालको पगरी लगाई धिमे, भुछ्या आदि बाजाको तालमा नाच्तै तुकंप्वःगणेशको मन्दिरलाई परिक्रमा गर्ने गर्दछन् । त्यस कार्यलाई नेवारी भाषामा 'पायाः वनेगु' भन्दछन् । त्यसरी नै त्यही दिन कोभाःकोलका मानन्धरहरू कोलका विविध सामग्रीहरू बोकेर कोभाःगणेशलाई परिक्रमा गरी 'पायाः' जाने गर्दछन् । विजयादशमीका दिन तुकंप्वःगणेशलाई एउटा बोको बलि दिई ती मानन्धरहरूले विधिको पूजा गरिसकेपछि बेलुकी सिकाभ्वय् खाने गर्दछन् ।

काभ्रे जिल्लाको बनेपा व्यापारको केन्द्रीय स्थल हो । तर पनि यहाँका मानिसहरूको मुख्य व्यवसाय खेती पनि हो । पहिले यहाँका मानिसहरूको जीवन खेतीमा नै आधारित भएको हुँदा पहिल्यैदेखि यहाँका मानिसहरू पानी परोस् भनी पुकारा गर्दै आषाढ कृष्णपक्ष चतुर्दशीपछिको पहिलोपटक आउने आइतबारका दिन यहाँकी आराध्यदेवी चण्डेश्वरी र अन्य देवीदेवताहरूलाई पूजा गर्थे । ती देवीदेवताहरूलाई अचेल सरकारी स्तरबाट पूजा गरिन्छ र त्यस पूजालाई देशपूजा भनिन्छ । देशपूजा भनेको देशभित्रका सबै देवीदेवताहरूलाई गर्ने पूजा हो । कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा आठ दिशामा आठ गणेशहरूलाई दिक्पालका रूपमा प्रतिष्ठापन गरेका थिए । पाञ्चायन देवीदेवतामा शिवलाई पृथ्वीका, देवीलाई शक्तिका, सूर्यलाई वायुका, विष्णुलाई आकाशका र गणेशलाई जलका अधिष्ठाता मानिएको छ ।[२]

[२] गणेश एक स्वरूप अनेक, चेतोनाथ शर्मा आचार्य, प्रकाशक सूर्यचन्द्र बादे श्रेष्ठ, २०६०



गणेशका विविध गहनाहरूमध्ये नाग पनि एक हो । नाग ना (पानी) सित सम्बन्धित छ । चोभारको क्वयना शिलाका रूपमा रहेका जलविनायक यसको बलियो उदाहरण हुन् । जलसँग बलियो सम्बन्ध भएका कारणले विनायक (गणेश) हरूबाट परिवेष्ठित गरी निर्माण गरिएको विनायकपुरी भनी नाम राखिएको यस बनेपामा खेती राम्रो होस् भनी असारको आगमनमा गरिने देशपूजामा यी आठ गणेशहरूलाई पृथक्-पृथक् समूहले पूजा गर्ने गर्छन् । त्यसमाथि पनि मानन्धरहरूको बाहुल्य भएको बनेपाको आग्नेय कोणका कोभाःगणेशलाई जापाली ( बनेपाका मानन्धरहरूको सी गुठी र ख गुठीको संयुक्त गुठी) का चार नाइकेहरूले एउटा भाले बलि दिई विशेष पूजा गरेर तिनीहरूले सीकाभोज खाने गर्दछन् । यी गणेशलाई कृषिका देवता भनी मान्ने गरिएको छ ।




**(बनेपाको तुकंप्वःगणेशको रथजात्राको प्रतिमा)**

बनेपाको दक्षिण दिशामा दक्षिणाभिमुख गरी प्रतिष्ठापन गरिएका तुकंप्वःगणेशको पनि छुट्टै कथा छ । यहाँको जनश्रुतिअनुसार कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले बनेपाको निर्माण गर्दा सबैभन्दा पहिले यी देवतालाई नै प्रतिष्ठापन गरिएको थियो । यी गणेशलाई पहिले बनेपाको बाँख्यटोलका बोहखलकका जहरमुनि मानन्धरले भक्तिपूर्वक धेरै कामहरू गरिदिएको कुरा अभिलेखले देखाउँछ । आफ्नो घरदेखि यी गणेशको हातासम्म ढुङ्गाले छापेर बाटो राम्रो पार्ने, यी गणेशको राम्रो धातुनिर्मित प्रतिमा बनाइदिने अनि यी गणेशको नाउँमा कोल बनाउने, छब्बीसजना

मानन्धरहरूलाई त्यहाँ नजिकैको जग्गा दान दिने कार्य उनले गरेका थिए। उक्त कोलको आम्दानीको केही प्रतिशत यी देवताको भजन गर्नेलाई र पर्वपर्वमा देवालयका चारैतर्फ बत्ती बालिदिने कुरा पनि अभिलेखमा उल्लेख छ। साथै, उनले तुकंप्व:गणेशको मन्दिरमा सुनको मोलम्बा लगाई गजुर पनि राखिदिएका थिए भन्ने कुरा ने० सं० १००८ को अभिलेखमा उल्लेख गरिएको छ। यसका साथै सोही फाँटको २ रोपनीभन्दा बढी जग्गा यी गणेशका नाउँमा कोनेसा:का छब्बीसजना मानन्धरहरूलाई उनले दत्त राखिदिएकोमा त्यो अद्यापि छँदैछ। फेरि, गणेशको मन्दिरअगाडि बिहान मङ्गलधुन बजाउने कृष्णवीर, राम्बा कुसलेहरू, ढोलक बजाउने कालू द्वं (डुम) र माताबाजा बजाउनेलाई करेसाबारी दिएको कुरा पनि अभिलेखले देखाउँछ।

पर्वपर्वमा यी तुकंप्व:गणेशको पूजा गर्न बनेपाका धेरै ठाउँहरूबाट मानिसहरू आउँछन्। विजयादशमीका दिन करिब २ बजेतिर यी देवताको रथ तयार भइसकेको हुन्छ। रथजात्रा कोनेसा:का मानन्धरहरूकै आयोजनामा हुन्छ। त्यहाँ पुग्ने सबैलाई देवताको प्रसादस्वरूप एक मुठी समयबजी दिन्छन्। अति नै कलात्मक ढङ्गको धातुनिर्मित यी गणेशको प्रतिमाको व्यवस्था उही धार्मिक मनोवृत्ति भएका जहरमुनि मानन्धरले मिलाइदिएका थिए। चारैतर्फ कदमका रूखहरूले घेरिएको, बीचमा आसीन मङ्गलमूर्तिका यी गणेशलाई मानन्धरहरूले गर्ने यस गणेशजात्रामा भजन-कीर्तन, कहँ, पौंगा, धिमे, भुछ्या आदि वाद्यवादनसहित देशपरिक्रमा गराइन्छ र त्यो परिक्रमा दशमीको बेलुकातिर सकिन्छ। जात्रा सकिएपछि बेलुकी कोनेसा:का एक सदस्य सानकाजी खिँ मानन्धर (मेरा दाजु) को घरमा एउटा ठूलो सेफमा विधिको पूजा गरी राख्ने गरिन्छ। आश्विन शुक्लपक्ष पूर्णिमा (कतिपुन्हि) का दिन त्यहाँ कोनेसा:का मानन्धरहरू कोल र खेतको आम्दानी सबै हिसाब गरी तुकंप्व:गणेशलाई पूजा गरेर भोज खाने गर्दछन्।

भक्तपुरको सा:कोलानबाट अलिकति पश्चिमतिर सालाँगणेश छन्। मानिसहरूले सिद्धिप्राप्तिका लागि यी देवतालाई मान्ने गरेका छन्। तीनतले प्यागोडा शैलीको यी देवताको मन्दिर दक्षिणाभिमुख छ। मन्दिरलाई दृष्टिगत गर्दा मल्लकालीनजस्तो लाग्छ। अति नै राम्रो धातुनिर्मित यी गणेशको मूर्ति राख्नका लागि गुठी संस्थानअन्तर्गत यी देवताको देवगृह अलग्गै छ। यी देवतालाई भाद्र शुक्लपक्ष पूर्णिमा (येँयापुन्हि) का दिन किसानहरूले धा: (ढोलकजस्तो बाजा) बजाई खटमा राखेर जात्रा गर्ने बेलामा सा:कोलानका धा:बाजँ खलकका मानन्धरहरूले



यामता (विशेष जात्रामा प्रयोग गरिने त्रिशूलजस्तै बत्ती) लानुपर्दछ। यो दिन भक्तपुरका सबै देवीदेवताहरूलाई सगुन दिँदा यी गणेशलाई पनि सगुन दिने गर्दछन्। भक्तपुरका धा:बाजँ खलकका मानन्धरहरूले यी सालाँगणेशलाई बिस्काजात्राका सन्दर्भमा वैशाख ३ गते राति महादेवको पाटीमा भक्तजनहरूले दर्शन गर्न पाउने गरी राख्तछन्। त्यसै बखत त्यहाँ भक्तजनहरू पूजा पनि गर्न आउँछन्।

पहिले-पहिलेदेखि नै आफ्नै किसिमको संस्कृति र इतिहास भएको भक्तपुर सा:कोलानका मानन्धरहरू, अझ धा:बाजँका मानन्धरहरूले वैशाख ३ र ४ गते यी गणेशको जात्रा गर्दै आएका छन् र यो अति नै प्रशंसनीय कार्य भएको छ। जात्रा अथवा अन्य विधिको पूजा गर्न यी देवताको नाममा कसैले कुनै दत्त राखिदिएको देखिँदैन। तर पनि यी देवताको जात्रा विधिवत ढङ्गले अहिलेसम्म सामूहिक रूपमा चल्दै आउनु कम गर्वको कुरो होइन। यस्ता धेरै चाडपर्वका जात्राहरूमध्ये कतिपय त हराइसकेका पनि छन्, तर यी देवताको जात्रा यहाँका किसान र मानन्धरहरूले रथ बोकी वाद्यवादनका साथ सबैको सहयोग लिएर चल्दै आइरहेको छ। यो जात्रा धेरै नै राम्रो हो। विविध ठाउँमा यो रथ घुमाई यी देवतालाई इनाच्व, दत्तात्रेय, भीमसेन, थालछैं, याताछैं, नासचा आदि ठाउँमा पनि लगिसकेपछि देवगृहअगाडि राखेर मानन्धरहरूले भजन-कीर्तन गर्छन् र आरती गरिसकेपछि एउटा भाले बलि दिई पूजा गर्छन् अनि देवगृहभित्र विराजमान गराइदिन्छन्।

त्यस्तै, आश्विन कृष्णपक्ष तृतीयामा भक्तपुर गोमरीटोलको शिवरात्रिगुठीका मानन्धरहरू बेलुकी छुमागणेशकहाँ सुकुन्दामा बत्ती बाली फर्किन्छन् र गोमरी पुगेर यामता बाल्दछन्। त्यसपछि छुमागणेशलाई खटमा राखी भक्तपुरको लायकू दरबारमा ल्याउँछन्। त्यसपछि शिवरात्रिगुठीका सबै मानन्धरहरू याँमत लिई जान्छन्। अनि गोमरीटोलका मानन्धरहरू लायकू दरबारमा पुगेपछि छुमागणेशको जात्रा सुरु हुन्छ। यस जात्रामा छुमागणेशलाई पछिपछि राखी गोमरीटोलका मानन्धरहरू यामता लिएर अघि बस्छन् र बाजागाजाका साथ भक्तपुर नगरको परिक्रमा गर्दछन्। जात्रा त्रिपुरासुन्दरीमा पुगेपछि छुमागणेशलाई तेल थपेर बत्ती बाल्छन्। त्यो काम सकिएपछि यी गणेश देवतासँग बिदा लिई आ-आफ्ना घरमा फर्कन्छन्।

मानन्धरहरूको सम्बन्ध मच्छेगाउँका अशोकविनायकसँग पनि छ। मङ्सिर कृष्णपक्ष नवमीका दिन मच्छेगाउँमा यी गणेशलाई कालिका, विष्णु, महेश्वर र भैरवसँग एउटै रथमा राखी यी देवीदेवताको रथजात्रा

हुन्छ । अशोकविनायकको मन्दिरअगाडि दायाँतिर मण्डपमा राखिएको रथमा विधिवत रूपमा गणेश, कालिका, विष्णु, महेश्वर र भैरवलाई राखिदिन्छन् । यो कार्य दिउँसो १२ बजेतिर हुन्छ । त्यस बखत त्यहाँका मानिसहरू आ-आफ्नै किसिमले पूजा गर्न आउँछन् । साँझ ६-७ बजेतिर मानन्धरहरूले रथमा नोल राखी बाँध्ने काम गर्दछन् । त्यसपछि अन्य जातका बाजाहरूका साथ मच्छेगाउँका मानन्धरहरूको दाफा भजनमा सम्मिलित भई रथजात्रा हुन्छ । त्यस बखत ती मानन्धरहरूमध्येबाट केहीले सातवटा चिराकबत्ती बालेर जात्रासँगसँगै जानुपर्दछ । त्यो रथ नैकापमा पनि लगी त्यहाँसमेत जात्रा गर्ने गर्दछन् । दशमीका दिन उक्त रथ मच्छेगाउँमा फिर्ता ल्याइन्छ । त्यो दिन विविध वाद्यवादनका साथ मच्छेगाउँमा रथ घुमाई भव्य जात्रा हुन्छ, अनि जात्रा सकिन्छ । तर जात्राभरि मानन्धरहरूको दाफा भजन र चिराकबत्ती साथमा रहिरहन्छ ।




**(काठमाडौँका मरुगणेशको जात्रा गर्ने प्रतिमा)**

काठमाडौँमा पनि जङ्गबहादुर राणाको शासनकालमा कोतपर्वपछि सुब्बा धर्मनारायण मानन्धरले चाँदीको मरुगणेश (अशोकविनायक) को प्रतिमा बनाई प्रतिष्ठापित गराएको थिए । त्यो ठूलो मूर्तिको रथजात्रा विजयादशमीका दिन गर्ने गरिन्छ । यी देवताको जात्रा हालसम्म पनि चलिरहेको छ । सुब्बा धर्मनारायण मानन्धरले यो प्रतिमा राख्नका लागि एउटा देवगृह बनाई यी गणेशका नाममा धेरै नै जग्गा पनि दत्त राखिदिएका थिए । धर्मनारायण मानन्धर गणेशका भक्त थिए । अझ



उनलाई मरुगणेशको अवतार भन्नेहरू पनि नभएका होइनन् । उनले मरुगणेशको मन्दिरमा सम्वत् १९०४ मिति माघ सुदि ८ रोज २ मा सुनको पातलो छाना लगाइदिए । सुब्बा धर्मनारायण मानन्धरको जङ्गबहादुर राणासँग बलियो सम्बन्ध भएका कारणले जङ्गबहादुर राणाले सिंहसत्तलमा पसल राख्नेहरूसँग बहाल लिई मरुगणेशको विविध पूजा र रथजात्रा गर्ने धर्मनारायण मानन्धरलाई नै सत्तलको तैनाथ गरिदिए । फेरि त्यस बखत काठमाडौँका आठ कोल (कोथसाः, दक्षसाः, न्हुसाः, तँलाछिसाः, थँहितिसाः, युतुसाः, तालसाः र वँतुसाः) मा तेल पेलेबापत तेल करका रूपमा तिर्नुपर्ने हुन्थ्यो । पछि त्यो पनि नआउने भएपछि त्यसको सट्टा ती आठ कोलहरूको रकम मरुगणेशको गुठीमा राखी धर्मनारायण मानन्धरलाई जिम्मा दिएको कुरा वि० सं० १९१० सालको एउटा लालमोहरमा उल्लेख गरिएको छ ।[३] काठमाडौँ उपत्यकाका चार गणेशहरूमध्ये भक्तजनले अति नै मान्ने गरेका गणेश काठमाडौँको लायकूटोलसँग सम्बन्धित यिनै मरुगणेश हुन् ।

⏮

---

[३] मानन्धर निबन्ध मुना, जीतबहादुर मानन्धर, २०६०

# काभ्रेका महत्वपूर्ण केही मुकुन्डोनाचहरू

**भूमिका :**

देवता या देवीका आख्यानहरू झल्कने गरी मुकुन्डो लगाएर नाच्ने नाच नेपालका सहर-सहरमा, अझ एउटै सहरभित्रका विभिन्न टोलहरूमा पनि हुने गर्छन् । यस्ता नाचहरूका लागि विभिन्न विधिअनुसार मुकुन्डोहरू बनाइन्छन् । चित्रकारहरूले तिनमा देवदेवीका भाव आकृति झल्कने गरी रङ्गहरू लगाइदिने गर्छन् । साथै ती मुकुन्डोहरूमा तन्त्रद्वारा जीवन्यास पनि गराइन्छ । मुकुन्डो लगाएर नाच्ने कुनै गणनाचका मुकुन्डोहरू भलभल अष्टमीको दिनमा (किनभने त्यो दिन यस धरातलका सबै देवीदेवताहरू जमिनमुनि प्रवेश गर्दछन् अर्थात् मृतकतुल्य हुन्छन् भन्ने विश्वास गरिन्छ) जलाउँछन् । कुनै गणनाचका मुकुन्डोहरू मलामीबाजासहित मसानमा लगेर दागबत्ती दिई जलाइन्छन् । कुनै-कुनै मुकुन्डोहरू देवगृहमा अर्को वर्ष प्रयोग गर्नका लागि भनी सुरक्षित रूपमा पनि राखिन्छन् । नष्ट भइसकेका मुकुन्डोहरू अर्को वर्षमा बनाइन्छन् र तिनीहरूमा जीवन्यास गरी प्रयोग गर्ने गरिन्छन् ।

एकचोटि राजा आनन्ददेव ध्यानमा बसिरहँदा देवी चण्डेश्वरी उनका अगाडि प्रत्यक्ष भई 'हे राजा, तिमी देशनिर्माण गर, म तिमीलाई साथ दिन्छु' भनी निर्देशन दिएपछि राजा आनन्ददेवले त्यस बखतमा यताउता छरिएका स-साना बस्तीहरू एकीकृत गरी 'चण्डेश्वरीपीठनजिक बनेपुर (बनेपा), नेपालको प्रयागतीर्थनजिक पनावती (पनौती), जसलाई प्राचीन कालमा 'पाञ्चालदेश' भनिन्थ्यो, नालाभगवतीनजिक नाला, नारायणनजिक धौखेल (धुलिखेल), धनेश्वरनजिक खड्पू (श्रीखण्डपुर), चकोर ऋषिको आश्रमनजिक चौकोट र नासिकापीठनजिक साँगा निर्माण गरे' भनी पर्वतीय वंशावलीमा उल्लेख छ ।[1]

'देवमाला वंशावली' का अनुसार गुणकामदेव (प्रथम) ले महालक्ष्मीको निर्देशनअनुसार काठमाडौं उपत्यकामा तीन ठूला सहरहरू (

[1] Nepal - History of the Country & the People, Daniel Wright, Cosmo Publication, 1983 A.D., New Delhi



कान्तिपुर, ललितपुर र भक्तपुर) बनाई महालक्ष्मी, महाकाली र महासरस्वती नामका तीन देवीहरूलाई तीन सहरका इष्टदेवीका रूपमा स्थापना गरी प्रत्येक सहरका आठ दिशामा अष्टमातृकालाई ती सहरको रक्षकका रूपमा स्थापना गरेर तीन सहरका तीन मातृकाका अलग-अलग नृत्य चलाएका थिए र ती अझै प्रचलित छन् ।[2]

यीबाहेक आफूलाई चाहिएका बखतमा अथवा आफूले आयोजना गरेका कार्यक्रमलाई सघाउन मुकुन्डो लगाएर देखाउने नाच मनोरञ्जनात्मक नाच हो । बनेपाका मोहनलाल खिं मानन्धर एक ख्यातिप्राप्त नाटककार हुनुहुन्थ्यो । उहाँले वि० सं० १९६३ सालदेखि आफूले नाटक लेखेर आफैँले निर्देशन गरी धेरैपटक विविध वाद्यवादनको तालमा देवीदेवताका नाटकहरू देखाउनुभएको थियो । ती नाटकमा मूल देव या देवी बीचमा र सम्बन्धित अन्य देवीदेवताहरू क्रम मिलाएर यथोचित ठाउँमा राखेर मङ्गलाचरण गराउनुहुन्थ्यो । मङ्गलाचरण सकिएपछि मुकुन्डो लगाएका ती देवीदेवताहरू बाजाको तालमा नाच्थे । तर यस्तो किसिमको नाच निश्चित समय र स्थानमा नचाउने चलन छैन ।

काठमाडौं उपत्यकाका तीन सहरमा मात्र नभई साँखुकी खड्ग (वज्र) योगिनी, थेचोकी महालक्ष्मी, कीर्तिपुरका बाघभैरव र खोकनाकी रूद्रायणीका पनि नाचहरू छन् । यसरी मुकुन्डो लगाएर नाच्ने गणनृत्य दोलखा, नुवाकोट, पाल्पा, बाग्लुङ जस्ता नेवारबस्ती भएका ठाउँहरूमा पनि नभएका होइनन् । यी नाचहरू भैरव या देवीसँग सम्बन्धित गराई नचाइन्छन् । यस्ता नाचहरूमा काठमाडौंको श्वेतकालीनाच र पाटनको हरिसिद्धिनाच त्यहाँका ज्यापूहरूले गर्ने गर्दछन् भने पाटनको गंछि प्याखं (गणनृत्य) गुभाजूहरूद्वारा सञ्चालित छ ।

धेरैजसो यस्ता गणनृत्यहरू (जस्तै : कीर्तिपुरको बाघभैरवनृत्य, भक्तपुरको नवदुर्गानृत्य, काठमाडौंको भद्रकालीनृत्य र पचलीभैरवनृत्य आदि) त्यहाँका माली अर्थात् मालाकार (नेवारीमा गथु वा गाथा) समुदायका मानिसहरूले चलाउने गर्दछन् । यी नाचहरूमध्ये कुनै नाच प्रत्येक वर्ष नाच्ने गरिन्छ त कुनै प्रत्येक ६ वर्षमा र कुनै प्रत्येक १२ वर्षमा निश्चित समय र स्थानमा नचाउने गरिन्छ । मुकुन्डो लगाई तन्त्र र विधिमा बाँधिएर नाचिने यी गणनृत्यहरू आनुष्ठानिक हुन् ।

[2] अष्टमातृका मुकुन्डो नृत्य-नाटक : एक जीवन्त सांस्कृतिक परम्परा, तुलसी दिवस, मधुपर्क, वर्ष २५ अङ्क १२, वैशाख २०५०

मनोरञ्जनात्मक नाचहरूभन्दा आनुष्ठानिक गणनृत्यहरू विधिपूर्ण, तन्त्रयुक्त, खर्चिला र गाह्रा हुन्छन् । यस्ता नाचहरू कुनै गुठीअन्तर्गत चलाइन्छन् । तान्त्रिक विधिअनुसार नाचिने यी नाचहरूमा विधि र तन्त्रद्वारा नै मुकुन्डोमा जीवन्यास गरिने हुँदा यिनको आफ्नै इतिहास र अस्तित्व भएको मात्र होइन, यिनले जनमानसमा बढी प्रभाव पारेका हुन्छन् । यस्ता नृत्यहरू कुनै जाति अथवा गुठीअन्तर्गत निश्चित ठाउँ र समयमा देखाइन्छन् ।

काभ्रे जिल्लाका सात गाउँमा मुकुन्डो लगाएर नाचिने नाचमध्ये लाखेनाच पर्वपर्वमा नचाइन्छ । त्यसबाहेक ती सहरहरूमा प्रत्येक वर्ष नवदुर्गानाच र प्रत्येक १२ वर्षमा साँगा, पनौती र धुलिखेलमा हरिसिद्धिनाच ल्याइन्छ । अन्य सहरहरूमा भने यी नाचहरू लगिँदैनन् । बनेपाकी चण्डेश्वरी र पाटनकी हरिसिद्धि एक-अर्कासँग मिल्दैनन् भन्ने किंवदन्ती छ । तसर्थ हरिसिद्धिनाच धुलिखेलमा लाँदा बनेपाबाहिरको बाटो गरी लगिन्छ । प्रत्येक १२ वर्षमा नरदेवीको श्वेतकालीनाच पनि बनेपामा ल्याई लायकू डबलीमा नचाउने गरिन्थ्यो । तर त्यो नाच बनेपामा नल्याएको धेरै वर्ष भइसकेको छ ।

राजा गुणकामदेव (प्रथम) ले तीन ठूला सहरहरू (काठमाडौँ, पाटन र भक्तपुर) बनाइसकेपछि ती तीन सहरमा तीन मातृकाहरूका अलग-अलग नाच (मुकुन्डो लगाएर नाच्ने गणनृत्य) चलाएजस्तै राजा आनन्ददेवले पनि काभ्रे जिल्लाका सात गाउँ बनाएपछि बनेपा, पनौती र साँगामा त्यसरी नै मुकुन्डो लगाएर नाच्ने गणनृत्य चलाएको पाइन्छ । यी तीन सहरबाहेक नाला, धुलिखेल, श्रीखण्डपुर र चौकोटमा पनि यस्ता गणनृत्यहरू चलाइएका थिए होलान् भन्ने अनुमान गर्न सकिन्छ, तर प्रमाण भने पाइएको छैन । देशरक्षाका लागि देवीको आख्यान झल्कने गरी साँगा, बनेपा र पनौतीमा भने देवीनाच नचाउने गरेको पाइएको छ ।

खास गरेर धेरैजसो देश (सहर) की आराध्यदेवी पूर्वतर्फ विराजमान भएकी छन् । भक्तपुरकी आराध्यदेवी ब्रह्मायणी हुन् । यी देवी त्यस ठाउँको पूर्वतर्फ विराजमान छिन् । त्यस्तै काठमाडौँकी गुह्येश्वरी र पाटनकी ब्रह्मायणी पनि ती ठाउँको पूर्वतर्फ नै अवस्थित छिन् । त्यसै गरी बनेपाकी चण्डेश्वरी, पनौतीकी ब्रह्मायणी र साँगाकी नासिकाभगवतीलाई पनि पूर्वतर्फ नै प्रतिस्थापित गरेर आ-आफ्ना आराध्यदेवीका रूपमा मानिसहरूले श्रद्धा र भक्तिका साथ मानिरहेका छन् । तर ती देवीका आख्यान र ठाउँ फरक-फरक भएकाले तिनीहरूको गणनृत्य पनि फरक-फरक नै देखिएको छ ।



काभ्रे जिल्लाको अत्यन्त महत्त्वपूर्ण सहर बनेपामा छुट्टै किसिमको संस्कृति, परम्परा र रीतिरिवाज छ । यो सहर एकताका राजधानी भनी कहलिएकोले पनि यसको महत्त्व अर्कै हुनुपर्दछ । मनुष्यको जीवनमा व्यापार एक महत्त्वपूर्ण अङ्ग हो । 'बने' को अर्थ व्यापार र 'पा' को अर्थ बस्ती भन्ने हुन्छ । अतः 'बनेपा' भनेको 'व्यापारीहरूको थलो' हो । काभ्रे जिल्लाका ठूला सहरमा बनेपा मध्यभागमा अवस्थित भएकाले पनि यो व्यापारको केन्द्रस्थल रहेको हुनुपर्छ ।

**मुकुन्डो लगाएर नाचिने बनेपाको कुमारीनृत्य :**

भनिन्छ चण्डेश्वरीको आख्यान झल्किएको मुकुन्डो लगाएर नाचिने कुमारीनृत्य प्रतिवर्ष इन्द्रजात्रा (येंयाः पुन्हि) का उपलक्ष्यमा प्रदर्शन गरिन्थ्यो । त्यो गणनृत्यमा ३२ गण (पात्र) हरू हुन्थे । बनेपाका नेवारजातिका प्रत्येक खलक (कुनै जातको थरविशेष) ले प्रत्येक देवदेवीका एक-एकवटा मुकुन्डो लगाएर नाच्ने गरिन्थ्यो । त्यसमा प्रधानखलकका मानिसले भैरवको मुकुन्डो लगाउने गर्दथे भने दुवालखलकका व्यक्तिले गणेशको मुकुन्डो लगाउँथे । खुपाखलकको मानिसले सिंहको मुकुन्डो लगाउँथे । त्यसै गरी अन्य मातृकागणका देवीदेवता, कवाँ (कङ्काल), भुचा (भूत), बेताल आदिको मुकुन्डो अरू नै खलकहरूले लगाएर नाच्ने गर्दथे । यस्तो भावपूर्ण, अर्थपूर्ण एवं सांस्कृतिक नाच बनेपाबाट लोप भइसकेको पनि करिब ११२-११३ वर्ष भइसक्यो । मानन्धरजातका मानिसहरूले कहँ, पोँङा, ढोलक, खिँ, पछिमा, ताः, भुछ्या आदि विविध बाजा बजाउने उक्त नाचमा प्रत्येक देव या देवीको भूमिका अत्यन्त महत्त्वपूर्ण थियो । तर यस्तो गणनृत्यमा भैरवको भूमिका साह्रै ठूलो हुन्थ्यो, किनभने त्यहाँ भैरवले संरक्षकको भूमिका खेलेका हुन्थे । तन्त्रसँग सम्बन्धित देवता भैरवलाई शिवको उग्र रूप मानिएको छ । '..... महाभयङ्कर रौद्ररूपका वेदपुरुष नै तन्त्रका दृष्टिमा भैरव मानिन्छन् ।'[३] गणेशको भूमिका पनि यो मुकुन्डोनाचमा कम थिएन । 'सिद्धिदाता गणेश मातृकागणका नायक मानिन्छन् ।'[४] आठ दिशामा आठ गणेशलाई दिक्पालका रूपमा प्रतिस्थापन गरी निर्माण गरिएको विनयापुरी देश (बनेपा) मा विनायकको ठूलो भूमिका हुने गरेको छ । यो मुकुन्डोनृत्यमा पनि गणेश (विनायक) को महत्त्वपूर्ण भूमिका हुनु स्वाभाविकै हो । खुपाखलकका मानिस सिंह भई

---

[३] वटुकभैरव साधना, डा० रुद्रदेव त्रिपाठी
[४] ऐ० ऐ० नं० २

नाच्ने यो नृत्यमा कङ्काल र भूत भई कुन-कुन खलकका मानिसहरू नाच्थे भन्ने कुरा सोधपुछ गर्दा हाल कसैलाई थाहा भएन। यो नाच लोप भएको पनि धेरै वर्ष भइसक्यो। इतिहासबाट पनि मेटिने डर भइसक्यो।

भनिन्छ, कङ्काल र भूतले मीठा-मीठा कुरा गरेर देवी चण्डेश्वरीलाई फकाई-फुल्याई यहाँ ल्याए रे ! त्यसरी ल्याउँदा पछिमाको ताल र कहँको धुन कस्तो थियो होला र खुट्टाको चाल र हातको हाउभाउ कस्तो थियो होला, अहिले हामीलाई जिज्ञासाको विषय भएको छ। मुकुन्डोनाचमा विविध बाजाहरू अनिवार्य हुन्छन्, किनभने बाजाको धुन नै त्यस्तो खालको नाचको आधार हो।

किंवदन्तीअनुसार एकजना मल्लराजाका दुइटी रानी थिए। ती दुई रानी एक-अर्कासँग मिलेका थिएनन्। बनेपाको केन्द्रस्थल स्वधालयिटी (तीनधारा) को डबलीमा कुमारीनृत्य देखाइँदा एउटी रानी तीनधारामाथिको दरबारबाट त्यो नाच हेर्ने गर्दथिन् भने अर्की रानी त्यसको पारिपट्टि रहेको दक्षिणपट्टिको घरको अति कलात्मक ढङ्गले पाँच नागहरू कुँदिएको झ्यालबाट हेर्ने गर्दथिन्। त्यो देखेर जेठी रानीलाई डाहा भएर कुमारीनृत्य छेक्न उनले डबलीको दक्षिणतिर ढुङ्गाको एउटा स्तम्भ ठड्याएर त्यसमाथि पञ्चबुद्धसहितको चैत्यको स्थापना गरिदिइन्। त्यसो गरेको देखेर कान्छी रानीले पनि जेठी रानीले सो नृत्य हेर्न नमिल्ने गरी दरबारनजिक पञ्चबुद्धसहितको एउटा चैत्य स्थापना गरिदिइन्। चैत्यको स्थापना गरेको ने० सं० ५११ सालभन्दा धेरै पहिले हो भन्ने अभिलेखले देखाउँछ। तर ढुङ्गाको स्तम्भ ठड्याएर माथि चैत्य स्थापना भने ने० सं० ८३५ मा गरेको देखिन्छ। पुरानो स्तम्भ टुक्रिएर पछि अर्को स्तम्भ राखिएकोले त्यस्तो हुन गएको हो भन्ने भनाइ यहाँका बूढापाकाहरूको छ।

लायकु डबलीमा नचाइसकेपछि कुमारीनृत्य नचाउने दोस्रो स्थान यहींको तीनधारा डबली नै हो। त्यति मात्र होइन, स्वायाँपून्हीका दिन देवी चण्डेश्वरीको रथजात्रा (प्वँख, खाली रथ) यही डबलीबाट सुरु हुन्छ। यसबाहेक भक्तपुरबाट नवदुर्गानाच बनेपामा ल्याइँदा प्रत्येक वर्ष यहाँ पनि नचाइन्छ र 'कुमारी तुइकेगु' गर्ने काम यहाँ अद्यापि चल्दै आएको छ।

**साँगाकी नासिकाभगवतीको मुकुन्डोनाच :**

काठमाडौँ उपत्यकाको एक महत्त्वपूर्ण द्वार साँगाभन्ज्याङ हो। साँगा धेरै पुरानो बस्ती हो। 'सा' को अर्थ गाई र 'गाः' को अर्थ गोठ हो। बनेपाका एक राजाका गाईहरू राख्ने गोठहरू भएको गाउँ नै साँगा हो भन्नेहरू अझै भेटिन्छन्। अर्को अर्थमा 'साः' को अर्थ तेल पेल्ने कोल र 'गाँ' को अर्थ गाउँ या ग्राम हो। त्यसैले 'साँगा' को अर्थ तेल उत्पादन गर्ने कोलहरू भएको ग्राम हो। लिच्छविकालका राजा अंशुवर्माले राखेको सम्वत् ३२ को शिलालेखमा 'तैल्यशाला' मात्र होइन, यस ठाउँलाई 'शङ्गग्राम' अर्थात् तेल पेल्ने कोलको ग्राम भनी उत्कीर्ण गरिएकोले यो क्षेत्र तेल पेल्ने मुख्य क्षेत्र थियो भन्ने स्पष्ट छ। यसरी यस ठाउँमा पहिलेदेखि नै बस्ती भए तापनि कलिगत वर्ष ४१९७ मा राजा आनन्ददेवले यहाँका आसपासका स-साना बस्तीहरूलाई एकीकृत गरी साँगालाई ठूलो ग्राम बनाए। साँगा सांस्कृतिक दृष्टिकोणले धेरै महत्त्वपूर्ण छ। यहाँ विविध देवीदेवताका अत्यन्त कलापूर्ण बहुमूल्य मूर्तिहरू छँदैछन्। धेरै पुराना कतिपय मूर्तिहरू त चोरी पनि भइसकेका छन्। परम्परागत रूपमा चल्दै आएका सांस्कृतिक पर्वहरू पनि त्यति नै महत्त्वपूर्ण छन्। यहाँका बूढापाकाहरूले यस गाउँलाई पाटनकी हरिसिद्धिको माइती भन्दछन्। त्यसैले पहिले-पहिले प्रत्येक १२ वर्षमा यहाँ हरिसिद्धिको मुकुन्डो लगाएर नाचिने नाच ल्याइने गरिन्थ्यो। अब त उक्त नाच नल्याइएको पनि धेरै वर्ष भइसक्यो। बनेपाकी आराध्यदेवी चण्डेश्वरी भएजस्तै साँगाकी आराध्यदेवी नासिकाभगवती हुन्। दक्षिणाभिमुख मल्लकालीन तीनतले प्यागोडा शैलीको सो मन्दिरको परिसरमा पाटीहरू छन्। प्रत्येक शनिबार बिहान साँगाको भजनखलक यहाँ भजन गर्ने गर्दछन्।

यहाँकी देवी नासिकाभगवतीको मुकुन्डो लगाएर नाचिने नाच अत्यन्त रहस्यपूर्ण छ। साँगामा यो मुकुन्डोनाचलाई एउटा महत्त्वपूर्ण पर्व नै मान्ने गरिन्थ्यो। यस्तो नाचको उपलक्ष्यमा साँगाका मानिसहरूले आ-आफ्ना मित्र र नातेदारहरूलाई निम्तो गर्ने र अतिथि-सत्कार गरी भोज खुवाएर आफ्नो ठाउँको देवीनृत्य देखाउने चलन थियो। यो गणनृत्यलाई तन्त्रद्वारा जीवन्यास गरिएको हुन्थ्यो र आनुष्ठानिक भएको हुँदा मुकुन्डोहरूलाई देवीदेवताहरूसरह नै मान्ने गरिन्थ्यो। प्रतिवर्ष हुने यो देवीनृत्यमा अष्टमातृका, महादेव, भैरव, गणेश, कुमारी, नन्दी, भृङ्गी, ख्याक, कङ्काल, भूत, चार बेतालहरू आदि देवीदेवताहरू सम्मिलित हुन्थे। भैरव, कुमारी, मातृकागण, कङ्काल आदिको छुट्टाछुट्टै भूमिका पनि साह्रै महत्त्वपूर्ण थियो। अझ यो गणनृत्यमा गणेशको भूमिका पनि साह्रै महत्त्वपूर्ण थियो।

आठ गणेशद्वारा परिवेष्ठित बनेपालाई 'विनयापुरी' भनिएजस्तै साँगामा पनि गणेशका मूर्तिहरू यत्रतत्र धेरै नै भएका कारणले साँगालाई यहाँका मानिसहरू 'गणेशपुर' पनि भन्ने गर्दछन्। बनेपाको कुमारीनृत्यमा

विविध जातका मानिसहरूले विविध देवीदेवताका मुकुन्डोहरू लगाएर नाचेजस्तै यी देवी (नासिकाभगवती) को नाचमा पनि यहाँका विविध जातका विविध खलकहरू अलग-अलग मुकुन्डो लगाएर नाच्ने गर्दथे । प्रधानखलकका मानिसले भैरवको मुकुन्डो लगाउने यी देवीनाचमा जोशीखलकका मानिस वाराहीको मुकुन्डो लगाएर नाच्ने गर्दथे त न्हुच्छेखलकका मानिस कालीको मुकुन्डो लगाउँथे । यसरी विविध मुकुन्डोहरू विविध खलकका मानिसहरूले लगाएर नाच्ने यो मुकुन्डोनाच (देवीनाच) मा साँगाका सबै मानिसहरू सम्मिलित भएको देखिन्थ्यो । कुस्लेले मुहाली (सहनाई) बजाउने, दों (दुमा) ले ढोलक बजाउने, कसाईले पोङ्गा बजाउने र श्रेष्ठखलकले खिं बजाउने यो नृत्यका विषयमा गहिरिएर विचार गर्दा यसले नेवारसंस्कृतिको महत्त्वपूर्ण रूपरेखा देखाएको पाइन्छ ।

यो गणनाच अत्यन्तै सनसनीपूर्ण हुन्थ्यो । नाच हुँदै जाँदा त्यहाँ देवी भगवतीको आख्यान प्रतीत हुँदै जान्थ्यो र दर्शकहरूको मन झन्-झन् आकर्षित हुँदै जान्थ्यो । नाचका सिलसिलामा खिं र ढोलकको तालमा अनि मुहाली (सहनाई) र पोँङाको धुनमा नासिकाभगवतीले अति क्रोधित भई बायाँ खुट्टा टेकी दायाँ खुट्टा उचालेर हुङ्कार-आसनले खड्ग समाएको दायाँ हात माथि उठाएर मयुरासुरलाई प्रहार गरी बध गरेको दृश्य अत्यन्तै रोमाञ्चकारी र नाटकीय हुन्थ्यो । असुरको बध भइसकेपछि त्यहाँ अकस्मात धरतीमाता प्रकट हुँदा देवीनाच हेरिरहेका दर्शकगणलाई एउटा अर्कै अलौकिक संसारमा पुगेजस्तो भान हुन्थ्यो ।

यस्तो किसिमको रहस्यमय सांस्कृतिक देवीनृत्यको प्रचलन हराएको झन्डै २० वर्ष भइसक्यो । मुकुन्डोनाच कसरी नाचिन्छ भनी सिकाउने करिब ७०-८० वर्षपहिलेजस्तै संस्कृतिका मर्मज्ञ रामनरसिंह जोशी र रामलाल जोशीजस्ता व्यक्तिहरू पनि त्यहाँ भइदिएनन् । एक-दुईजना यस विषयका विज्ञ बूढाहरू त्यहाँ अहिलेसम्म जीवित नै छन्, तर साँगाका युवाहरूले ती व्यक्तिहरूबाट सिकेर त्यस्तो महत्त्वपूर्ण सांस्कृतिक देवीनृत्य देखाउन चाहेनन् वा सकेनन् । साँगाका बूढापाका र संस्कृतिका मर्मज्ञहरूलाई पहिले मञ्चन भएको यो नाचको खालि सम्झना मात्र बाँकी रहेको छ । गणनृत्यका पोसाक, विविध देवीदेवताका मुकुन्डोहरू र अन्य सामग्रीहरू अहिलेसम्म सुरक्षित नै रहिरहेका छन् । तर ती वस्तुहरूको प्रयोग गरेर देवीनृत्य पुनः सञ्चालन गर्न साँगाका मानिसहरूको मन कहिले जाने हो अथवा ती सामग्रीहरू त्यसै कुहिएर या बिग्रिएर जाने हुन्, त्यो हेर्न बाँकी नै छ । यस्तो स्थिति हुँदाहुँदै पनि सम्बन्धित निकायले



समेत यसमा ध्यान दिएको पाइँदैन । यसरी काभ्रे जिल्लाको एउटा महत्त्वपूर्ण संस्कृति पूर्ण रूपमा लोप हुने क्रममा रहेको छ ।

**पनौतीको देवीनाच :**



(पनौतीको देवीनाच)

बनेपाबाट करिब ७ कि० मि० दक्षिण-पूर्व एउटा सानो र रमणीय उपत्यकामा अवस्थित पनौती पनि काभ्रे जिल्लाको एक महत्त्वपूर्ण ऐतिहासिक सहर हो । अति कलात्मक कलाकृति र धेरै देवीदेवताहरूका मूर्तिहरू भएको यो सहर पवित्र तीर्थस्थल पनि हो । पुण्यमाता र रोसीखोलाको दोभानमा एउटै ढुङ्गामा अवस्थित पनौती सहरमा गौतम ऋषि र अहल्या, नमोबुद्ध, गोरखनाथ आदिसम्बन्धी धेरै किंवदन्तीहरू छन् । परम्परागत रूपमा चल्दै आएका यहाँका पर्वहरू किंवदन्तीसँग गाँसिएका छन् र ती साह्रै अर्थपूर्ण पनि छन् । ब्रह्मायणीको मन्दिरभित्र मास्तिरपट्टि लेखिएका अष्टमातृकाका म्युरल (रङ्गीन भित्तेचित्र) हरू साह्रै गहकिला मात्र नभई शास्त्रीय दृष्टिकोणले समेत अर्थपूर्ण बनेका छन् । त्यस्तै, उन्मत्तभैरवको मन्दिरभित्र सप्तमातृकागणको प्रतिष्ठापन, इन्द्रेश्वर मन्दिरका टुँडालहरूमा कुँदिएका मातृकागण, रामायण र महाभारतका पात्रहरूको काष्ठकलाकृति र विभिन्न ठाउँमा प्रतिष्ठापित देवीदेवताका कलापूर्ण शिलामूर्तिहरू आदिले गर्दा पनौती सहर महत्त्वपूर्ण कलाक्षेत्र बनेको छ ।

पनौतीको यस्तै महत्त्वपूर्ण सांस्कृतिक सम्पदा मुकुन्डो लगाएर नाच्ने देवीनाच हो । देवीनाचको प्रचलन यहाँ पहिल्यैदेखि चलिआएको थियो भन्ने कुरा देश (पनौती) निर्माणका सन्दर्भमा बनाइएका यहाँका सात डबलीले स्पष्ट रूपमा देखाउँछन् । जनश्रुतिअनुसार प्राचीन कालमा दुई राक्षसहरूले मानिसहरूलाई साह्रै दुःख दिँदा देवीदेवताहरू प्रकट भई ती दुष्ट राक्षसहरूको बध गरी यहाँ सुख-शान्ति ल्याएको प्रतीक स्वरूप नै पनौतीको देवीनृत्य चलाइएको हो ।[५]

मातृकागण (महाकाली, वाराही, महालक्ष्मी, माहेश्वरी, ब्रह्मायणी र इन्द्रायणी) बाहेक भैरव, महादेव, विष्णु, गणेश आदि देवता पनि रहने यो देवीनृत्यमा बेताल, दुईवटा ख्याक, कुकुर, भूत, कङ्काल आदि पनि सम्मिलित हुन्छन् । दुईवटा राक्षसलाई भने देवीनृत्यको सहर-परिक्रमामा सम्मिलित गराइँदैन । तिनीहरूलाई डबलीनाचमा मात्र समावेश गराइन्छ । देवता र राक्षसबीच डरलाग्दो किसिमले युद्ध हुँदा महादेव क्रोधित भई दिगम्बर (निर्वस्त्र) भई नाच्ने यस नृत्यलाई त्यसैकारण नाँगा प्याखँ (निर्वस्त्रनृत्य) भनेको हुनुपर्छ । यस नाचको प्रथम दृश्यमा भैरव बीचमा र दुई देवीहरू दुई छेउमा रही नाच प्रस्तुत गर्ने गरिन्छ ।[६] नाच चरणबद्ध तरिकाले विविध घटनाक्रमतिर बढ्दै गर्छ, दर्शक आकर्षित हुँदै जान्छन् । देवीद्वारा राक्षसको बध भइसकेपछि महाकालीले भूत र बेताललाई तृप्त हुने गरी रगत पियाउँछन् । अन्तमा कङ्काल राक्षसहरूका श्रीमतीलाई उनीहरूका लोग्नेहरू बध भइसकेको समाचार सुनाउन जान्छ । यसले गर्दा यो नृत्य अत्यन्तै नाटकीय ढङ्गको देखिन्छ । यस गणनृत्यका भैरव उन्मत्तभैरव र महादेव इन्द्रेश्वरमहादेव हुन् । ब्रह्मायणी, भद्रकाली आदि देवीमा पनि यहीँकै प्रतिनिधित्व गराई नाचमा समावेश गराइएको हुन्छ ।

यस देवीनाचका विषयमा पहिले सूर्यप्रसाद लाकोजूले र पछि मानसागर श्रेष्ठले गरी पनौतीका दुईजना लेखकले लेखिसक्नुभएको छ । तर उहाँहरूको लेखमा पनौतीको देवीनाच मात्र भनिएको छ, तर ती देवी कुन हुन्, स्पष्ट ढङ्गले देखाइएको छैन । कीर्तिपुरको बाघभैरवनाच, नरदेवीको श्वेतकालीनाच, थेचोको नवदुर्गानाच, बनेपाको कुमारी (चण्डेश्वरी) नाच, साँगाको नासिकाभगवतीनाच भनेजस्तै पनौतीको देवीनाचमा पनि ती देवी यी नै हुन् भन्ने कुरा हुनुपर्दथ्यो । मलाई लाग्छ पनौतीको त्यो देवीनाच ब्रह्मायणीसँग सम्बन्धित हुनुपर्दछ, किनभने

---

५ पन्तिया देवी प्याखँ, मानसागर श्रेष्ठ, नेपालमण्डलको मुकुन्डोनाच, वि० सं० २०६२

६ सूर्यप्रसाद लाकोजू, ऐतिहासिक नाच : देवीनाच



बनेपाकी आराध्यदेवी चण्डेश्वरी र साँगाकी आराध्यदेवी नासिकाभगवती भएजस्तै पनौतीकी आराध्यदेवी ब्रह्मायणी हुन् । त्यसैले बनेपाको देवीनृत्य चण्डेश्वरीसँग र साँगाको देवीनृत्य नासिकाभगवतीसँग सम्बन्धित भएजस्तै पनौतीको देवीनृत्यको सम्बन्ध पनि ब्रह्मायणीसँगै हुनुपर्दछ, किनभने मुकुन्डो लगाएर नाचिने यी तीनै देवीनृत्य तीनै ठाउँका आराध्यदेवीको आख्यान झल्कने र त्यहाँका मानिसहरूमा देवीको महिमाबोध गराउने गरी राजा आनन्ददेवले कलिगत वर्ष ४१९७ मा बनेपा सात गाउँ निर्माण गरिसकेपछि चलाएका थिए ।

पहिलेदेखि नै चल्दै आएको यो नृत्य २०३८ सालदेखि कुनै कारणले बन्द भएको थियो । तर २०५५ सालमा भएको पनौती महोत्सवको उपलक्ष्यमा यो देवीनाचलाई पुनः सुरुवात गरिएको थियो । त्यसपछि यो देवीनाच प्रतिवर्ष प्रदर्शन गरिँदै आएको छ । केही दशकपहिलेसम्म यी देवीनाच गणेशदास प्रजापतिको नेतृत्वमा सञ्चालन हुँदै आएको थियो र उहाँले देवीनाचको नेतृत्व गरी धेरै वर्ष बिताउनुभएको थियो । बन्द भइसकेको यो नाचलाई पुनः सञ्चालन गर्न उहाँले 'यो देवीनाच तपाईं राम्ररी चलाउनुस्, ईश्वरले साथ दिनेछन्, यही मेरो शुभकामना छ' भनी माधवनारायण मानन्धरका हातमा भैरवको मुकुन्डो हस्तान्तरण गर्नुभएको थियो । त्यसै बेलादेखि अर्थात् २०५५ सालको पनौती महोत्सवदेखि यो नाच उहाँकै नेतृत्वमा चल्दै आएको देखिन्छ ।

विधि-नियममा बाँधिएर पहिल्यैदेखि नचाइँदै आएको यो नाच आनुष्ठानिक हो । आनुष्ठानिक नाचमा विधि र बाजाको तालको भूमिका ठूलो हुन्छ । यस्ता किसिमका नाच निर्धारित समय र ठाउँमा मात्र नचाइन्छन् । पनौतीको देवीनाच प्रदर्शनका लागि अन्य ठाउँमा लगेर नचाइयो भने यो नाच मनोरञ्जनात्मक हुनेछ । बनेपाको कुमारीनृत्य र साँगाको नासिका भगवतीको देवीनृत्य सनातन किसिमले निर्धारित समय र स्थानमा (काठमाडौँ उपत्यकाको हरिसिद्धि, नवदुर्गा, श्वेतकाली आदि नाचहरूजस्तै) चल्दै आएकोले पनि पनौतीको देवीनाच त्यस्तै आनुष्ठानिक हुनुपर्दछ । लोप भइसकेको महत्त्वपूर्ण संस्कृति पनौतीको देवीनाच त्यहींकै संस्कृतिप्रेमीहरूको प्रयासबाट जीवन्त हुनु अहिलेको युगमा ठूलो कुरो हो ।

**उपसंहार :**

नेपाल संस्कृतिको धनी देश भनी कहलिएको छ । तर यहाँका रीतिरिवाज, चाडपर्व र अन्य संस्कृतिका कामहरू धमाधम लोप हुँदैछन् । सांस्कृतिक जात्रा, पर्व आदि सञ्चालन गर्नका लागि राखिएका दत्त

जग्गाहरू केही व्यक्तिहरूले व्यक्तिगत सम्पत्ति बनाइसकेका छन् । अझ गुठीका जग्गाहरू रैकरमा परिणत गर्न मिल्ने सरकारी नीतिले गर्दा मानिसहरूले गुठी जग्गा बिक्री गरेर आफ्नो स्वार्थमा प्रयोग गरिसकेका छन् । बनेपामा चण्डेश्वरीको रथजात्रा र अन्य चाडपर्वमा नभई नहुने कहँ, पोङ्गा, मुहाली आदि विविध बाजा बजाउनेहरूका लागि राखिएका दत्त जग्गाहरू केही व्यक्तिहरूका हातमा परेकाले अहिले ती बाजाहरू सङ्कटमा परिसकेका छन् । यस्ता कामहरू अरू क्षेत्रमा पनि भइरहेका छन् । यसो हुनुको मुख्य कारण यहाँका मानिसहरूमा चेतना र वास्ता नहुनु हो । संस्कृति हाम्रो देशको आभूषण हो । यसलाई जोगाइराख्नु सबैको कर्तव्य हो । तर सम्बन्धित निकायहरू पनि बितेका वर्षहरूमा संस्कृतिहरूको संरक्षण र सम्वर्द्धन गर्नेतिर लाग्न सकेको त्यति देखिएन । काभ्रे जिल्लाका मुकुन्डोनाचहरू पनि यस्तै ढङ्गले क्षीण हुँदै गएका छन् । सम्बन्धित निकाय र यहाँका चिन्तनशील व्यक्तिहरूले सबैसँग हात मिलाएर यस्ता महत्त्वपूर्ण नाचहरू जीवन्त राख्न सके देशको अमूर्त र अमूल्य सम्पत्ति बचिरहनेछ ।





# धन्यवादज्ञापन

काभ्रेमा सातवटा ठूला-ठूला बस्तीहरू छन् । तिनीहरूलाई 'बनेपा सातगाउँ' भन्ने गर्दछन् । त्यहाँ आ-आफ्नै किसिमका रीतिरिवाज, चाडपर्व, जात्रा र संस्कृति छन् । ती ठाउँहरूका पुराना-पुराना कुराहरू थाहा पाउन अभिलेखहरूको अध्ययन गर्नुपर्दछ । पहिले-पहिलेका मानिसहरूले गुठीका विविध विषयका कुराहरू कागजपत्र र ताडपत्रहरूमा लेखेर राखेका हुन्थे । तर ती कागजहरू आफूसँग भएर पनि धेरैजसोले दिने गर्दैनन्, बरू त्यसै कुहाएर राखिराख्छन् । त्यसले गर्दा हाम्रो संस्कृतिको इतिहास लोप भइरहेको छ । तर कसैकसैले पुरानो इतिहास खोतलेर लेख्नुपर्छ भनी आफूसँग भएका कागजपत्र र ताडपत्रहरू दिने पनि गर्दछन् । त्यसले गर्दा मसँग ने० सं० ४८५ सालदेखिका सक्कल ताडपत्रहरू १४-१५ वटा र अरू पुराना-पुराना ताडपत्रका फोटोकपीहरू लगभग १०० थानजति छन् । कुनै त आफ्नै बेवास्ताका कारण धेरै महत्त्वपूर्ण कागजपत्र हराइसकेका छन् । आफूसँग भएका ती पुराना-पुराना कागजपत्र र ताडपत्रहरू अध्ययन गरेर म अब प्रकाशित हुने पुस्तकमा तिनलाई समावेश गर्नेछु ।

यो पुस्तक लेख्नका लागि मैले सम्बन्धित विषयको अभिलेख खोज्ने प्रयास गरेथैं । तर यसपटक मैले त्यति बहुमूल्य अभिलेख पाउन सकेको छैन । तर पनि सन्दर्भपुस्तक र लेखिराखेका केही पुस्तिकाहरू अध्ययन गर्न पाएँ । आफूसँग भएका त्यस्ता पुस्तिका र नोटहरू दिएर सहयोग गर्नुहुनेहरूमा धुलिखेलका उदय भूषण, नालाका सिद्धिबहादुर कर्माचार्य, श्रीखण्डपुरका पूर्णबहादुर कर्माचार्य, चौकोटका सत्यलाल राजवंशी र प्रकाशलाल राजवंशी हुनुहुन्छ ।

संस्कृतिका कुरा राम्ररी ज्ञान हुने र अभिरुचि राख्ने सम्बन्धित ठाउँका बूढाबूढीहरू र अन्य व्यक्तिहरू पनि हुने भएकाले यसपटक सम्बन्धित ठाउँहरूमा गएर मैले उहाँहरूसँग भेटी आफूलाई आवश्यक कुराहरू सोधेर ज्ञान हासिल गरेथैं । यसरी सम्बन्धित विषयका कुरा राम्ररी बताइदिनेहरूमा साँगाका हरिबहादुर (माहिँलादै), गङ्गाबहादुर न्हुच्छे प्रधान र सिद्धिबहादुर जोशी, नालाका कर्णबहादुर कर्माचार्य, नारायणबहादुर कर्माचार्य र कृष्णगोपाल कर्माचार्य, धुलिखेलका कृष्णप्रसाद कर्माचार्य र बद्रीप्रसाद जङ्गम, श्रीखण्डपुरका विश्वलाल प्रधानाङ्ग, देवविलास वज्राचार्य, चैतलाल शिवाचार्य, टेकबहादुर प्रधान र मच्छे मानन्धर, चौकोटका

पूर्णलाल मानन्धर, पनौतीका स्व० विश्वराम कर्माचार्य, बनेपाका स्व० पूर्णकाजी कायस्थ र संस्कृतिका ज्ञाता मेरा पूज्य बुबा स्व० मोहनलाल खिँ हुनुहुन्छ ।

त्यस्तै, सम्बन्धित फोटाहरू उपलब्ध गराइदिनेहरूमा बनेपाका गोपालदास बादे श्रेष्ठ, स्वयम्भूराज शाक्य, सगुन प्रधान र भुवन भोछिभोया, पनौतीका प्रशान्त श्रेष्ठ र काठमाडौँका मङ्गल मानन्धर हुनुहुन्छ भने सम्बन्धित ठाउँमा लगेर सम्बन्धित मानिसहरूसँग सम्पर्क गराइदिनेहरूमा पनौतीका सूर्यप्रसाद लाकोजू, बनेपाका टीकाभक्त भोछिभोया, आनन्द मानन्धर र उत्तम मानन्धर हुनुहुन्छ । फोटो स्क्यानिङ गरिदिने बनेपाका ज्ञानु खयगुलि मानन्धर र अक्षरटङ्कन गरिदिने बनेपाकी श्रीमती गीता मञ्जुश्री हुनुहुन्छ ।

यसरी यो पुस्तक तयार पार्न सहयोग गर्नुहुने आदरणीय उल्लिखित महानुभावहरूसहित यस पुस्तकको प्रकाशन गरिदिने श्रीमती सुखवेती मानन्धरलाई हृदयदेखि नै धन्यवाद ज्ञापन गर्दछु ।

**– ज्ञानकाजी मानन्धर**



# सन्दर्भसामग्री

**नेपाली भाषाका**

१. ऋद्धि प्रधान : पनौतीका सांस्कृतिक सम्पदाको एक अध्ययन, बनेपा सातगाउँ (बनेपा नगरपालिकाबाट प्रकाशित स्मारिका)
२. कल्पना श्रेष्ठ : नालाभगवती मन्दिरको वास्तुकला, बनेपा सात गाउँ (बनेपा नगरपालिकाको स्मारिका), २०५३
३. कृष्णलाल राजवंशी : चौकोट तथा श्वेतगणेश (पुस्तिका)
४. गौतमवज्र वज्राचार्य : हनुमानढोका राजदरबार, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, काठमाडौँ, २०२३
५. चेतोनाथ शर्मा आचार्य : गणेश एक स्वरूप अनेक, प्रकाशक : सूर्यचन्द्र बादे श्रेष्ठ, २०६०
६. छत्रबहादुर कायस्थ : धुलिखेलया ने० सं० ७९० या शिलापत्र : छगु अध्ययन, नेपाल संस्कृति, २०५८ भाद्र
७. जीतबहादुर मानन्धर : काभ्रेपलाञ्चोकका केही देवीदेवताहरू, प्रकाशक : तारादेवी मानन्धर, लायकुसाल काठमाडौँ
८. जीतबहादुर मानन्धर : विरिञ्चिनारायण, प्रकाशिका : श्रीमती तारादेवी मानन्धर, लायकुसाल, काठमाडौं, २०४६
९. जीतबहादुर मानन्धर : श्रीगणेशाय नमः, प्रकाशक : श्रीमती तारादेवी मानन्धर, लायकुसाल काठमाडौं, २०३१
१०. जीतबहादुर मानन्धर : मानन्धर निबन्ध मुना, २०६०
११. तुलसी दिवस : अष्टमातृका मुकुन्डोनृत्य-नाटक : एक जीवन्त सांस्कृतिक परम्परा, मधुपर्क, वर्ष २५ अङ्क १२, वैशाख २०५०
१२. देवमाला वंशावली, प्रकाशक : श्री पीरमहन्त क्षिप्रानाथ योगिराज, २०१३।४।९।३
१३. धनवज्र वज्राचार्य : लिच्छविकालका अभिलेख, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, कीर्तिपुर, आषाढ २०३७
१४. धनवज्र वज्राचार्य : शक्तिशाली भारदार रामवर्द्धनहरू र तत्कालीन नेपाल, पूर्णिमा, अङ्क ७, वि० सं० २०२२
१५. धनवज्र वज्राचार्य, कमलप्रकाश मल्ल : गोपाल राजवंशावली, प्रकाशक : नेपाल रिसर्च सेन्टर पब्लिकेसन – ९, सन् १९८५
१६. नारायणमान बिजुक्छे : नवदुर्गागण : तत्कालीन समाजको दिग्दर्शन, नवदुर्गा स्मारिका, २०६६ असोज
१७. नाला देय्या ७९८ या शिलापत्र : छगु अध्ययन, नेपाल संस्कृति, २०६१ आश्विन

१८. प्रकाश दर्नाल : साँगाको सांस्कृतिक सम्पदा, अभिलेख, वर्ष १२, २०५०, प्रकाशक : पुरातत्त्व विभाग, राष्ट्रिय अभिलेखालय
१९. पुरुषोत्तमलोचन श्रेष्ठ : भक्तपुरको नवदुर्गागण, प्रकाशक : बबिता श्रेष्ठ, भक्तपुर, वि० सं० २०६०
२०. पूर्णबहादुर कर्माचार्य : श्रीखण्डपुर : एक चिनारी (अप्रकाशित पुस्तक)
२१. बनेपा सातगाउँ, बनेपा नगरपालिकाको स्मारिका, ज्येष्ठ २०५३
२२. मानसागर श्रेष्ठ : पन्तिया देवी प्याखँ, नेपालमण्डलको मुकुन्डोनाच, वि० सं० २०६२
२३. मेचीदेखि महाकाली (भाग २) मध्यमाञ्चल विकास क्षेत्र, प्रकाशक : श्री ५ को सरकार, सञ्चार मन्त्रालय, सूचना विभाग, काठमाडौं, २०३१
२४. मोहनप्रसाद खनाल : बनेपाको ऐतिहासिक रूपरेखा, प्रकाशक : नेपाल र एसियाली अध्ययन संस्थान, त्रि० वि०, कीर्तिपुर, २०५२
२५. डा० रुद्रदेव त्रिपाठी : वटुकभैरव साधना
२६. विष्णुकान्त शर्मा : पाल्पा जिल्लाका इष्टदेव भैरव, अभिलेख, सम्पादक मण्डल : सानुमैया राणा र अम्बिकाप्रसाद रेग्मी, प्रकाशक : श्री ५ को सरकार, शिक्षा, संस्कृति तथा समाजकल्याण मन्त्रालय, पुरातत्त्व विभाग, राष्ट्रिय अभिलेखालय, २०५१
२७. स्मारिका, बनेपा नगरपञ्चायत, प्रधानसम्पादक : ज्ञानकाजी मानन्धर, २०४०
२८. सिद्धिबहादुर कर्माचार्य : नालादेशको परिचय
२९. सूर्यप्रसाद लाकोजू : ऐतिहासिक नाच : देवीनाच
३०. हरिभक्त खोजू श्रेष्ठ : धुलिखेलको सांस्कृतिक सर्वेक्षण, नेपाल तथा एसियाली अनुसन्धान केन्द्र, त्रि० वि०, कीर्तिपुर, २०४३
३१. हरिराम जोशी : धुलिखेल : एक सङ्क्षिप्त परिचय, Souvenir, Nepal Jaycees, XXIX National Convention, Dec. 20-22, 2002
३२. हेमराज शाक्य : स्वयम्भू महाचैत्य
३३. ज्ञानकाजी मानन्धर : बनेपा-स्तवन, प्रकाशक : सुखवेती मानन्धर, २०४०

**अङ्ग्रेजी भाषाका**

३४. Daniel Wright : Nepal - History of the Country and the People, Cosmo Publication, 1983 A. D., New Delhi
३५. Gills Beguin : Nepal – Valley of Gods, 1997 A.D., Indian Books Distributer (Bombay) Ltd.
३६. Lain S. Bangdel : Stolen Images, Publisher : The Royal Nepal Academy, Nepal, 1980
३७. The Festivals of Nepal